* श्रीगणेशाय नमः *

# अथ वैशाखमाहात्म्यं नेपाली भाषाटीकासहितम्

नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् । देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ॥ १ ॥ सूत उवाच—भूयोऽप्यङ्गभवं राजा ब्राह्मणः परमेष्ठिनः । पुण्यं माधवमाहात्म्यं पर्यपृच्छन्महामुनिम् ॥२॥ अम्बरीषउवाच—सर्वेषामपि मासानां त्वत्तो माहात्म्यमुत्तमम् । श्रुतं मया पुरा ब्रह्मन् यदा चोक्तं त्वयाऽनघ ॥३॥ वैशाखः प्रवरो मासो मासेष्वेतेषु निश्चितम् । इतितस्माद्विस्तरेण माहात्म्यं माध-

पहिले नारायणलाई अनि मनुष्यहरूमा श्रेष्ठ नरलाई तब देवी सरस्वतीलाई र कथाकार व्यासलाई नमस्कार गरेर साराले 'धर्मको जय होस्' भनी कथा प्रारम्भ गर्नु ॥१॥॥ सूतजीले भने—हे शौनक ! परमेष्ठी ब्रह्माजीका पुत्र महामुनि नारदजीसँग अम्बरीषले फेरि पनि वैशाख माहात्म्य सुन्नका लागि प्रश्न गरे ॥२॥ अम्बरीषले भने—हे ब्रह्मन् ! तपाईंले वर्णन गरिएका सबै महीनाका माहात्म्य मैले श्रद्धापूर्वक पहिल्यै सुनिसकें ॥३॥ यी सब महीनाहरूमा वैशाख





वस्य च ॥४॥ श्रोतुंकौतूहलं ब्रह्मन् कथं विष्णुप्रियो ह्यसौ । के च विष्णुप्रिया धर्मा मासे माधववल्लभे ॥५॥ तत्राप्यस्य तु कर्तव्याः के धर्मा विष्णुवल्लभाः । किं दानं किं फलं तस्य किमुद्दिश्याचरेदिमान् ॥ ६ ॥ कैर्द्रव्यैः पूजनीयोऽसौ माधवो माधवागमे । एतन्नारदविस्तार्य मह्यं श्रद्धावते वद ॥७॥ नारद उवाच—मया पृष्टः पुरा ब्रह्मा मासधर्मान् सनातनान् । व्याजहार पुरा प्रोक्तं यच्छ्रियै परमात्मना ॥८॥ ततो मासा विशिष्टोक्ताः कार्तिको माघ एव च । माधवस्तेषु वैशाखं मासानामुत्तमं व्यधात् ॥९॥ मातेव सर्वजीवानां सदैवेष्टप्रदायकः । दानयज्ञव्रतस्नानैः सर्वपापविनाशनः

अवश्य नै अतिश्रेष्ठ छ, यसकारण फेरि विस्तारपूर्वक वैशाख माहात्म्य ॥४॥ सुन्ने मलाई बड़ो लालसा छ । हे विद्वन् ! यो वैशाख महीना भगवान् विष्णुलाई किन प्रिय छ ? यो वैशाख महीनामा कुन-कुन धर्म विष्णुलाई प्रिय छन् ?॥५॥ यी धर्महरूमा पनि गर्न योग्य कुन-कुन धर्म त्यस्ता छन्, जो विष्णुलाई अति प्रिय छन् ? कुन-कुन दान गर्न योग्य छ त्यसको के फल छ र यो महीनामा कुन देवताको आराधना गर्नुपर्छ ? ॥६॥ हे नारदजी ! श्रद्धापूर्ण मलाई विस्तारपूर्वक बताइदिनुहोस् कि यस वैशाख महीनामा माधव भगवान्‌को पूजा के के चीजले गर्नुपर्छ ?॥७॥नारदजीले भने मैले उहिलेब्रह्माजीसँग यही कुरो सोधेको थिएँ, उहाँले महीनाहरूको जो माहात्म्य पहिले परमात्माले लक्ष्मीजीलाई भनेका थिए, उही कथा मलाई पनि सुनाउनुभयो ॥८॥ कार्तिक, माघ र वैसाख यी तीन महीना वर्षमा सबभन्दा श्रेष्ठ छन् र यी तीनै महीनामा पनि वैशाख महीना सबभन्दा उत्तम छ ॥९॥ यो पुण्य महीना सबै जीवहरूलाई आमाले झैं इष्ट फल दिने छ । दान, यज्ञ,

॥१०॥ धर्मसारः क्रियासारस्तपःसारः सुरार्चितः । विद्यानां वेदविद्येव मन्त्राणां प्रणवो यथा ॥११॥ भूरुहाणां सुरतरुर्धेनूनां कामधेनुवत् । शेषवत्सर्वनागानां पक्षिणां गरुडो यथा ॥१२॥ देवानां तु यथा विष्णुर्वर्णानां ब्राह्मणो यथा । प्राणवत्प्रियवस्तूनां भार्येव सुहृदां तथा ॥१३॥ आपगानां यथा गङ्गा तेजसां तु रविर्यथा । आयुधानां यथा चक्रं धातूनां काञ्चनं यथा ॥१४॥ वैष्णवानां यथा रुद्रो रत्नानां कौस्तुभो यथा । मासानां धर्महेतूनां वैशाखश्चोत्तमस्तथा ॥१५॥ नानेन सदृशो लोके विष्णुप्रीतिविधायकः । वैशाखस्नाननिरते मेषे प्रातर्भगोदये ॥१६॥ लक्ष्मीसहायो भगवान् प्रीति

व्रत तथा स्नानले सारा पापलाई नाश गर्दछ ॥१०॥ यो महीना धर्म, क्रिया तथा तपको सार हो र देवताहरूले पूजित छ। सबै महीनाहरूमा यो वैशाख महीना त्यस्तै छ; जस्तो विद्याहरूमा वेदविद्या र मन्त्रहरूमा प्रणव ॐ श्रेष्ठ छ ॥११॥ रूखहरूमा कल्पवृक्ष, गाईहरूमा कामधेनु, सबै नागहरूमा शेषनाग, पक्षीहरूमा गरुड़॥१२॥ देवताहरूमा विष्णु, वर्णहरूमा ब्राह्मण, प्रियवस्तुहरूमा प्राण, मित्रहरूमा भार्या ॥१३॥ नदीहरूमा गंगा, तेजयुक्त पदार्थहरूमा सूर्य, अस्त्रहरूमा सुदर्शन चक्र, धातुहरूमा सुवर्ण ॥१४॥ जसरी वैष्णवहरूमा महादेवजी र रत्नहरूमा कौस्तुभमणि छ। उसै गरी धर्मका निमित्त सबै महीनामा वैशाख महीना सबभन्दा उत्तम छ ॥१५॥ संसारमा यो झैं विष्णुलाई प्यारो लाग्ने अर्को महीना छैन। जो मनुष्य मेष संक्रान्तिमा सूर्योदयको पहिले वैशाख महीनामा निरन्तर स्नान गर्दछ॥१६॥ त्यस पुरुषमा लक्ष्मी



तस्मिन् करोत्यलम् । जन्तूनां प्रीणनं यद्वदन्नेनैव हि जायते ॥१७॥ तद्वद्वैशाखस्नानेन विष्णुः प्रीणात्यसंशयः । वैशाखस्नाननिरताञ्जनान् दृष्ट्वाऽनुमोदते॥१८॥तावताऽपि विमुक्ताघो विष्णुलोके महीयते । सकृत्स्नात्वा मेषसंस्थे सूर्ये प्रातः कृताह्निकः ॥१९॥ महापापैर्विनिर्मुक्तो विष्णोः सायुज्यमाप्नुयात् । स्नानार्थं मासि वैशाखे पादमेकं चलेद्यदि ॥२०॥ सोऽश्वमेधायुतानां च फलं प्राप्नोत्यसंशयम् । अथवा कृतचित्तस्तु कुर्यात्सङ्कल्पमात्रकम् ॥२१॥ सोऽपि क्रतुशतं पुण्यं लभते नात्र संशयः । यो गच्छेद्धनुरायामं स्नातुं मेषगते रवौ ॥२२॥ सर्वबन्धविनिर्मुक्तो विष्णोःसायु-

सहित भगवान् त्यस्तै नै ज्यादै प्रीति गर्नुहुन्छ; जस्तो प्राणीहरूलाई अन्नले नै प्रसन्न तृप्ति हुन्छ ॥१७॥ वैशाख-स्नानगर्नाले विष्णु भगवान् उस्तै प्रकारले प्रसन्न हुनुहुन्छ र वैशाख-स्नानमा लागेका मान्छेहरूलाई देखेर खुशी हुनुहुन्छ ॥१८॥ जो मानिस वैशाख महीनामा प्रातःस्नान गरेर नित्यकर्म गर्दछ, त्यो सब पापबाट मुक्त भएर विष्णुलोक पाउँदछ ॥१९॥ वैशाख महीनामा स्नान गर्नका लागि जो मानिस एक पाइलो पनि चल्दछ, त्यो महापापहरूबाट विमुक्त भएर विष्णुको सायुज्य मुक्ति प्राप्त गर्दछ ।२०॥ र निस्सन्देह उसलाई दश हजार अश्वमेधको फल प्राप्त हुन्छ, अथवा एकाग्र चित्त भएर जो मानिस संकल्प मात्र गर्दछ॥२१॥उसलाई पनि सय यज्ञको फल मिल्दछ; यसमा कुनै सन्देह छैन; सूर्य मेषमा रहँदा स्नानका लागि जो धनुप्रमाण (पाउकोश) अति पनि पर जान्छ ॥२२॥ त्यो सारा बन्धनहरूबाट छुटेर विष्णुका

ज्यमाप्नुयात् । त्रैलोक्ये यानि तीर्थानि ब्रह्माण्डान्तर्गतानि च ॥२३॥तानि सर्वाणि राजेन्द्र सन्ति बाह्येऽल्पके जले । तावल्लिखितपापानि गर्जन्ति यमशासने ॥२४॥ यावन्न कुरुते जन्तुर्वैशाखे स्नानमम्भसि । तीर्थाधिदेवताः सर्वा वैशाखे मासि भूमिप ॥२५॥ बहिर्जलं समाश्रित्य सदा सन्निहिता नृप । सूर्योदयं समारभ्य पश्चात् षट्घटिकावधि ॥२६॥ तिष्ठन्ति चाज्ञया विष्णोर्नराणां हितकाम्यया । तावन्नागच्छतां पुंसां शापं दत्वा सुदारुणम् । स्वस्थान यान्ति राजेन्द्र तस्मात्स्नानं समाचरेत् ॥२७॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे स्नानप्रशंसन नाम प्रथमोऽध्यायः॥१॥

सायुज्य मुक्ति प्राप्त गर्दछ । ब्रह्माण्डका अन्तर्गत तीनै लोकहरूमा जो तीर्थ छन् ॥२३॥ हे राजेन्द्र ! ती सब तीर्थ बाहिर थोरै नै जलमा प्रस्तुत हुन्छन्,लेखिएका पाप यमराजको आज्ञाले तबसम्म गर्जन्छन्॥२४॥जबसम्म प्राणी वैशाख महीनामा जलमा डुबेर स्नान गर्दैन, हे राजन् ! वैशाख महीनामा तीर्थहरूको अधिष्ठाता सब देवता ॥२५॥ सूर्योदयबाट लिएर छः घडीसम्म जलको बाहिर आएर रहन्छन् ॥२६॥ र विष्णु भगवान्‌को आज्ञाले मनुष्यहरूको कल्याण गर्नका लागि रहन्छन् । जो पुरुष उस समयसम्म स्नान गर्न आउँदैनन्, त्यस्तालाई भयंकर सराप दिएर आफाफना ठाउँमा जान्छन् । यसकारण हे राजेन्द्र ! त्यस समयमा अवश्यै न्वाहुनुपर्छ ॥२७॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यमा नारद र अम्बरीष संवादमा स्नान-प्रशंसा नामको पहिलो अध्याय सकियो ।।१॥



## अथ द्वितीयोऽध्यायः

नारद उवाच—न माधवसमो मासो न कृतेन समं युगम् । न च वेदसमं शास्त्रं न तीर्थं गङ्गया समम् ॥१॥ न जलेन समं दानं न सुखं भार्यया समम् । न कृषेस्तु समं वित्तं न लाभो जीवितात्परः ॥२॥ न तपोऽनशनात्तुल्यं न दानात्परमं सुखम् । न धर्मस्तु दयातुल्यो न ज्योतिश्चक्षुषा समम् ॥३॥ न तृप्तिरशनात्तुल्या न वाणिज्यं कृषेः समम् । न धर्मेण समं मित्रं न सत्येन समं यशः ॥४॥नारोग्यसमम्मुत्थानं न त्राता केशवात्परः न माधवसमं लोके पवित्रं कवयो विदुः॥५॥

नारदजीले भन्नुभयो—हे राजन् ! वैशाख महीना जस्तो अर्को कुनै महीना छैन, सत्ययुग-समान अर्को कुनै युग छैन, वेदजस्तो अरू कुनै शास्त्र छैन तथा गंगाजी-समान अरू कुनै तीर्थ छैन ॥१॥ पानी-दानजस्तो अरू कुनै दान छैन, भार्याका समान अरू कुनै सुख छैन,खेतीजस्तो उत्तम अर्को धन छैन जीवनजस्तो अर्को कुनै लाभ छैन ॥२॥ उपवासतुल्य अरू तप छैन, दानभन्दा बढेर अरू कुनै सुख छैन, दयाको समान अरू कुनै धर्म छैन, आँखाजस्तो अरू कुनै ज्योति छैन ॥३॥ भोजन तुल्य अरू कुनै तृप्ति छैन, खेतीजस्तो असल कुनै व्यवसाय छैन, धर्मको समान कुनै मित्र छैन; सत्यको जस्तो कुनै यश छैन ॥४॥ आरोग्य बराबर कुनै आनन्द छैन, केशवसिवाय अर्को कुनै रक्षक छैन; त्यस्तै लोकमा वैशाख जस्तो पवित्र अर्को कुनै महीना छैन; यो कुरो कविहरू जान्दछन् ॥५॥ वैशाख महीना सबभन्दा श्रेष्ठ महीना हो, यो

माधवः परशे मासः शेषशायिप्रियः सदा । अव्रतेन क्षिपेद्यस्तु मासं माधववल्लभम् ॥६॥ तिर्यग्योनिं स यात्याशु सर्वधर्मबहिष्कृतः । अव्रतेन गतो येषां माधवो मर्त्यधर्मिणाम् ॥७॥ इष्टापूर्तिर्वृथा तेषां धर्मो धर्मभृतां वर । प्रवृत्तानां तु भक्ष्याणां माधवो नियमे कृते ॥८॥ अवश्यं विष्णुसायुज्यं प्राप्नोत्येव न संशयः । सन्तीह बहुवित्तानि व्रतानि विविधानि च ॥ ९ ॥ देहायास-कराण्येव पुनर्जन्म प्रदानि च । वैशाखस्नानमात्रेण न पुनर्जायते भुवि ॥१०॥ सर्वदानेषु तत्पुण्यं सर्वतीर्थेषु यत्फलम् । तत्फलं समवाप्नोति माधवे जलदानतः ॥११॥ स्वस्य सामर्थ्यरहिते पर-

महीना शेषशायी भगवान्लाई सधैँ प्रिय छ; भगवान्‌को प्यारो यो महीना जो मानिस व्रत नगरीकन बिताउँछ ॥६॥ त्यो सबै धर्मबाट बाहिरिएर चाँडै नै पशुयोनिया प्राप्त हुन्छ, जुन मर्त्यधर्मीहरूको वैशाख मास बिना व्रतको व्यतीतहुन्छ ॥७॥ हे धर्मात्माहरूमा श्रेष्ठ ! तिनीहरूको इच्छापूर्ति वृथा हुन्छ । जो मनुष्य नियमपूर्वक वैशाख महीनामा भोजन गराउनमा प्रवृत्त हुन्छन् ॥८॥ तिनले अवश्यै विष्णुको सायुज्य मुक्ति पाउँछन्, यसमा कुनै सन्देह छैन । यस संसारमा अनेक प्रकारका धन छन् र नाना प्रकारका व्रत छन् ॥ ९ ॥ ती सब शरीरलाई अत्यन्त क्लेश तथा पुनर्जन्म दिनेवाला छन्; परन्तु वैशाख महीनामा स्नान मात्रले नै मनुष्यको पुनर्जन्म हुँदैन ॥१०॥ सबै दानहरूमा जुन पुण्य छ, सबै तीर्थहरूमा जुन फल छ, त्यो सारा फल वैशाख महीनामा केवल जल दान गर्नाले नै प्राप्त हुन्छ ॥११॥ यदि जलदान गर्न आफ्नू शक्ति नभए कल्याण चाहने मानिस लेअरूबाट पनि यो काम गराओस्, किनकि यो दान सब



स्यापि प्रबोधनम् । कर्तव्यं भूतिकामेन सर्वदानाधिकं हि तत् ॥१२॥ एकतः सर्वदानानि जलदानं तथैकतः । तुलामारोपितं पूर्वं जलदानं विशिष्यते ॥१३॥ मार्गेऽध्वगानां यो मर्त्यः प्रपादानं करोति हि । स कोटिकुलमुद्धृत्य विष्णुलोके महीयते ॥१४॥ देवानां च ऋषीणां च पितृणां राजसत्तम । अत्यन्तप्रीतिदं सत्य प्रपादानं न संशयः ॥१५॥ प्रपादानेन सन्तुष्टा पैनाध्वश्रमक-र्शिताः । तोषितास्तेन देवाश्च ब्रह्मविष्णुशिवादयः ॥१६॥ सलिलं सलिलाकांक्षी छत्रं छायाभपी-च्छति । व्यजनं व्यजनाकांक्षी वैशाखे मासि भूमिप । जलं छत्रं च व्यजनं दानमेषां विशिष्यते

दानमा श्रेष्ठ छ ॥१२॥ यदि सबै प्रकारको दानपुण्यलाई तराजूको यौटा पलड़ामा राखियोस् र अर्को पलड़ामा जलदानको पुण्य राखियोस् त जलदानको पुण्य नै ज्यादा विशिष्ट अर्थात् भारी हुन्छ ॥१३॥ जो मानिस बाटो हिंड्ने बटुवाहरूलाई पौशाला राखी पानी प्याउँछ, उसले आफ्ना करोडौं कुलको उद्धार गरेर स्वयं पनि विष्णुलोक पाउँछ ॥१४॥ हे राजेन्द्र ! पौशाला राखेर पानी प्याउनाले देवता, पितृ तथा ऋषि सबै नै प्रसन्न हुन्छन्; यसमा कुनै संशय छैन॥१५॥ औ पौशाला राखेर बाटामा थाकेका बटोहीहरूलाई पानी प्याएर तृप्त पार्नेले तोषित ब्रह्मा, विष्णु, शिव आदि सबै देवता प्रसन्न हुन्छन् ॥१६॥ हे राजन् ! जल चाहनेहरु वैशाख महीनामा जल दान गर्छन्, छायाको इच्छा हुनेले छाता दाना गर्छन् पंखाको (शीतल बतासको) इच्छा हुनेले वैशाखमा पंखादान गर्छन् । सब दानहरूमा जलदान, छातादान तथा पंखाको दान अति

वैशाख ९

॥१७॥माधवेमासि सम्प्राप्ते ब्राह्मणाय कुटुम्बिने । आदत्त्वोदककुम्भश्च चातको जायते भुवि॥१८॥ मा० अ. १
यो दद्याच्छीतलं तोयं तृषार्ताय महात्मने । तावन्मात्रेण राजेन्द्र राजसूयायुतं लभेत॥१९॥ घर्म-
श्रमार्तविप्रं तु बीजयेद्व्यजनेन यः । तावन्मात्रेण निष्पापो विहगाधिपतिर्भवेत् ॥२०॥ अदत्त्वा
व्यजनं भूप वैशाखे तु द्विजातये । वातरोगशताकीर्णो नरकानेव विन्दति॥२१॥यो बीजयेत्पटेनापि
पथि श्रान्तं द्विजोत्तमम् । तावतापि विमुक्ताघो विष्णुसायुज्यमाप्नुयात् ॥२२॥ यस्तालव्यजनं
वाऽपि दद्याच्छुद्धेन चेतसा । विधूय सर्वपापानि ब्रह्मलोकं स गच्छति ॥२३॥ सद्यः श्रमहरं

उत्तम छ ॥१७॥असले वैशाख महीनामा बालबच्चा परिवार भएका ब्राह्मणलाई जल भरिएको घडादान दिँदैन, त्यो पछि यस संसारमा काकाकुल भएर जन्मन्छ ॥१८॥ जो प्यासले आकुल भएको महात्मालाई पानी प्याउँछ, हे राजेन्द्र ! उसले धेरै राजसूय यज्ञ गरेको फल पाउँछ ॥१९॥ जो [illegible], त्यो त्यति गर्नाले मात्र पनि पापरहित भएर पक्षीहरूको राजा हुन्छ ॥ २० ॥ हे राजन् ! वैशाख महीनामा जो जन ब्राह्मणलाई पङ्खा दान दिँदैन, त्यो सयकडौं वायुरोगले पीडित भएर नरक भोग गर्छ ॥२१॥ जो जन हिँडाइले थाकेका विप्र ब्राह्मणलाई पङ्खा नपाए लुगैले पनि हम्किदिन्छ, त्यो सबै पापबाट छुटेर विष्णुको सायुज्य मुक्ति पाउँछ ॥२२॥ जो शुद्ध चित्तले तारका नै पङ्खा भए पनि दान गर्दछ, त्यो सबै पापबाट छुटेर मरेपछि ब्रह्मलोक जान्छ ॥२३॥ तुरुन्तै थकाइ

वैशाख १०

पुण्यं न दद्याद्व्यजनं नरः । नारकीं यातनां भुक्त्वा कश्मलो जायते भुवि॥२४॥ आध्यात्मिका- मा० अ. १
दिदुःखानां शान्तये मनुजेश्वर । छत्रं दद्यात् प्रयत्नेन वैशाखे मासि वा सकृत् ॥२५॥ अच्छत्रदो
नरो यस्तु वैशाखे माधवप्रिये । छायाहीनो महाक्रूरः पिशाचो भुवि जायते ॥२६॥ यो दद्यात् पा-
दुके दिव्ये माधवे माधवप्रिये । यमदूताँस्तिरस्कृत्य विष्णुलोकं स गच्छति ॥२७॥ पादत्राणं तु
यो दद्याद्वैशाखे माधवान्गमे । न तस्य नारको लोको न क्लेशा दैहिकाश्च ये॥२८॥पादुकां याच-
मानाय यो दद्याद्ब्राह्मणाय वै । स भूपालः भवेद्भूमौ कोटिजन्मस्वसंशयः ॥२९॥ अनाथमण्डपं

मेटाउने पङ्खाको दान जो गर्दैन, त्यो जन नरकका कष्टहरू भोगेर पातकी भई संसारमा जन्मन्छ ॥२४॥ हे महाराज ! आध्यात्मिकादि दुःखहरूका शान्तिका लागि वैशाख महीनामा एकैपल्ट भए पनि कसै गरी छाता दान गर्नैपर्दछ ॥२५॥ विष्णुका प्रिय वैशाख महीनामा जो जन छाता दान गर्दैन, त्यो अर्को जन्ममा छाया नपाउने हुन्छ र महाक्रूर पिशाच बन्दछ ॥२६॥ जो जन केशवको प्रिय वैशाख महीनामा खराउ दान गर्छ, ऊ यमराजका दूतहरूलाई 'के नाप्न सक्छौ ?' आदि शब्दले तिरस्कार गरी गोलोकमा जान्छ ॥ २७ ॥ जो हरिप्रिय वैशाख महीनामा जुत्ता दान गर्छ, त्यसले नरकको यातना भोग्नुपर्दैन र संसारमा दुःख पनि पाउनुपर्दैन ॥२८॥ खराऊ माग्ने ब्राह्मणलाई जो खराऊ दान दिन्छ, निस्सन्देह पनि त्यो जन करोडौं जन्मसम्म यस संसारमा राजा भइरहन्छ ॥२९॥ जो मनुष्य बाटो हिँड्नेलाई बिसाउन

मार्गे श्रमहारि करोति यः । तस्य पुण्यफलं वक्तुं ब्रह्मणापि न शक्यते ॥३०॥ मार्गश्रान्ताय विप्राय प्रश्रयं प्रददाति यः । तस्य पुण्यफलं वक्तुं ब्रह्मणापि न शक्यते ॥३१॥ मध्यान्हे ब्राह्मणं प्राप्तमतिथिं भोजयेद्यदि । न तस्य फलविश्रान्तिर्ब्रह्मणापि निरूपिता ॥३२॥ सद्यः स्वाप्यायनं नृणामन्नदानं नराधिप । तस्मान्नान्नेन सदृशं दानं लोकेषु विद्यते ॥३३॥ दारापत्यगृहादीनि वासोऽलङ्कारभूषणम् । अमह्यं नाश्नतः पुंसः सह्यं भुक्तवता ध्रुवम् ॥३४॥ तस्मादन्नसमं दानं न भूतो न भविष्यति । वैशाखे येन नो दत्तं मार्गश्रान्ते च भूसुरे ॥३५॥ स पिशाचो भवेद्भूमौ

थकाई मार्न वासवस्न वाटा-वाटामा पाटी-पौवा बनाउँछ, त्यसका यस पुण्यको फल ब्रह्मा पनि वर्णन गर्न सक्दैनन् ॥३०॥ बाटो हिंड्दा-हिंड्दा थाकेको विप्रलाई जो आश्रय दिन्छ, त्यस पुण्यको फल बखान्न ब्रह्मा पनि सक्तैनन् ॥३१॥ मध्याह्न-मा आइपुगेका अतिथि विप्रलाई यदि कसैले खुवायो भने, त्यस पुण्यको फल यति हुन्छ भनेर ब्रह्माले पनि भन्न सक्तैनन् ॥३२॥ हे नराधिप ! मनुष्यहरूलाई अन्नदान दिनु, तत्काल उसलाई तृप्त गर्नु हो, यसकारण संसारमा अन्नदानझैं अर्को दान छैन ॥३३॥ भोको मानिसलाई स्त्री, छोरा-छोरी, घर, वस्त्र, अलंकार, आभूषण इत्यादि सबै असह्य हुन्छन्; परन्तु अघाएकोलाई निश्चय नै यी सबै बेस लाग्छन् ॥३४॥ यसकारण अन्नदान जस्तो दान न कोही थियो न हुनेछ । जसले थाकेको बटोही ब्राह्मणलाई भोजन दिएन॥३५॥त्यो जन संसारमा पिशाच भएर आफ्नै मासु खान्छ, यसकारण ब्राह्मणलाई





स्वमांसन्येव खादति यथाशक्ति प्रदातव्यं तस्मादन्नं द्विजातये ॥ ३६ ॥ अन्नदो मातृपित्रादीन् विस्मारयति भूमिप । तस्मादन्न प्रशंसन्ति लोकास्त्रैलोक्यवर्तिनः ॥३७॥ मातरः पितरश्चापि केवलं जन्महेतवः । अन्नदं पितरं लोके प्रवदन्ति मनीषिणः ॥३८॥ अन्नदे सर्वतीर्थाणि अन्नदे सर्वदेवताः । अन्नदे सर्वधर्माश्च तिष्ठन्त्यपरिपराजय ॥३९॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे दानमहिमानिरूपणं नाम द्वितीयोऽध्यायः।२।

सक्तो अन्नदान दिनुपर्दछ ॥३६॥ हे राजन् ! अन्न दिनेवालाले बाबु-आमा इत्यादिलाई पनि बिर्साइदिन्छ । यसकारण त्रैलोक्यवासी अन्नको नै प्रशंसा गर्दछन् ॥३७॥ आमा र बाबु जन्मका कारण हुन्, परन्तु यस संसारमा जान्नेहरूले अन्न दिनेवालालाई नै आमा-बाबु हुन् भनी भनेका छन् ॥३८॥ हे राजन् ! अन्नदातामा सबै तीर्थ छन्, अन्नदातामा सबै देवता रहन्छन् र अन्नदातामा नै सारा धर्म वास गर्दछन् ॥ ३९ ॥

स्कन्द पुराणको वैशाख माहात्म्यको नारद र अम्बरीष संवादमा दानमहिमा निरूपण नामको दोस्रो अध्याय सकियो ॥२॥

# अथ तृतीयोऽध्यायः

नारद उवाच—यो मर्त्यो द्विजवर्याय पर्यङ्कं तु श्रमापहम् । यत्र स्वस्थः शुखं शेते शीतानिलानिषेवितः ॥१॥ धर्मसाधनभूतो हि देहो निरुजमासते । तं दत्त्वा सकलं दुःखं निरस्य गतकल्मषः ॥२॥ अखण्डपदवीं याति योगिनामपि दुर्लभम् । वैशाखे धर्मतप्तानां श्रान्तानां तु द्विजन्मनाम् ॥३॥ दत्त्वा श्रमापहं दिव्यं पर्यङ्कं मनुजेश्वर । न जातु सीदते लोके जन्ममृत्युजरादिभिः ॥४॥ गृहीत्वा ब्राह्मणो यत्र शेते चाजोवमास्थितः । आसोने सकलं पापं ज्ञानतोऽज्ञानतः कृतम् ॥५॥

नारदजीले भन्नुभयो—धर्मको साधनस्थान ब्राह्मणको शरीरको दुखाइ मेटाउने, थकाई हटाउने, शीतल बतास आइरहने, मजासँग सुखपूर्वक सुत्न हुने, पलङ जो जन श्रेष्ठ ब्राह्मणलाई अर्पण गर्छ, त्यो जन सारा प्रकारको दुःख र पापबाट निवृत्त हुन्छ ॥१-२॥ हे राजन् ! वैशाख महीनामा घामले तातेका, हिंडाइले थाकेका ब्राह्मणहरूलाई सारा थकाइ मेटाउने दिव्य पलङ दान दिनाले मानिस योगीहरूले पनि पाउन मुश्किल अखण्ड पदवीकन पाउँछ र उसले संसारमा जन्म-मृत्यु-जरा (बुढ्याइँ) इत्यादिको दुःख कहिल्यै भोग्नुपर्दैन ॥३-३॥ हे राजेन्द्र ! जब पलङ पाएर ब्राह्मण त्यस पलङमा आरामसित सुत्तछ, तब पलङदाताका जानेर वा नजानेर सारा पाप—आगोले कपूर बलेर हराएझैं नाश हुन्छन् र त्यो दाता निश्चय नै ब्रह्माको निर्वाण पद प्राप्त गर्दछ ॥५-६॥ विष्णुको प्रिय वैशाख महीनामा जो जन शय्या दान गर्दछ, त्यो यसै



विलयं याति राजेन्द्र कर्पूर इव वन्हिना । शयाने ब्रह्मनिर्वाणं स नरो याति निश्चितम् ॥६॥ यो दद्यात्कशिपुं मासे वैशाखे स्नानवल्लभे । सर्वभोगसमायुक्तस्तस्मिन्नेव हि जन्मनि ॥७॥ स नरो वर्तते नूनं रोगादिभिरनाहतः । आयुष्यं परमारोग्यं यशो धैर्यं च विन्दति ॥८॥ नाधार्मिकःकुले तस्य कायते शतपूरुषम् । भुक्त्वा तु सकलान्भोगाँस्ततः पञ्चत्वमागतः ॥९॥ निर्धूताखिलपापस्तु ब्रह्मनिर्वाणमृच्छति । विशिष्टाय द्विजेन्द्राय यो दद्यादुपबर्हणम् ॥१०॥ सुखनिद्रा विना येन न नृणां जायते क्वचित् । सर्वेषामाश्रयो भूत्वा भुवि साम्राज्यमश्नुते ॥११॥ पुनः सुखी पुनर्भोगी पुनर्धर्मपरायणः । आसप्तजन्म राजेन्द्र जायते सर्वदा जयी ॥१२॥ पश्चात्सप्तकुलैर्युक्तो ब्रह्म-

जन्ममा सब प्रकारका भोगहरूले युक्त हुन्छ ॥७॥ निश्चय नै त्यो मानिस रोग-शोक दुःख इत्यादिबाट छुट्तछ र दीर्घायु, नीरोग हुन्छ, उसको वंश फैलन्छ तथा धैर्यवान् बन्छ ॥८॥ सय पींढीतक उसको कुलमा कुनै अधर्मी हुँदैन र उ यस संसारमा सारा भोग भोगेर अनि स्वर्गलोक पाउँछ ॥९॥ जो मनुष्य श्रेष्ठ ब्राह्मणलाई तकिया दान दिन्छ त्यो सारा पाप नाशिएर ब्रह्माको निर्वाण पद प्राप्त गर्दछ ॥१०॥ हे राजेन्द्र ! जो जन तकिया दान गर्दैन त्यो कहिल्यै पनि चैनको निद्रा सुत्न पाउँदैन, जो गर्दछ त्यो साराको आश्रय भएर सारा संसारमा साम्राज्य भोग गर्दछ र अरु-अरु जन्ममा पनि सात जन्मसम्म फेरि सुखी फेरि भोगी, फेरि धर्मात्मा हुन्छ तथा सदासर्वदा विजयी हुन्छ ॥११-१२॥ पछि सात पुस्तासहित

भूयाय कल्पते । तार्णं कटं तु यो दद्यात्कटमन्यद्यापि वा ॥१३॥ तत्र शेते स्वयं विष्णुः पत्रस्थः परमेश्वरः । यथा जलगता चोर्णा न जलैर्बध्यते क्वचित् ॥१४॥ तथा संसारगो जन्तुः संसारे नैव बध्यते । आसने शयने शस्तः कटदः सर्वतः सुखी ॥१५॥ प्रश्रये शयनार्थाय यो दद्यात्कटकम्बलम् । तावन्मात्रेण मुक्तः स्यान्नात्र कार्या विचारणा ॥१६॥ निद्रया हीयते दुःखं निद्रया हीयते श्रमः । सा निद्रा कटसंस्थस्य सुखं सञ्जायते ध्रुवम् ॥१७॥ यो दद्यात् कम्बलं राजन् वैशाखे माधवप्रिये । अपमृत्योः कालमृत्योर्मुक्तो जीवति वै शतम् ॥१८॥दद्यात् सूक्ष्मतरं

ब्रह्मपदलाई प्राप्त गर्दछ । तृणहरूबाट बनेको अथवा अरु कुनै चीजबाट बनेको भए पनि गुन्द्री सुकुल जो ब्राह्मणलाई दान दिन्छ ॥१३॥ त्यसमा ब्रह्मरूपले स्वयं कमलशायी परमेश्वर विष्णु नै सुत्नुहुन्छ । जसरी पानीमा रहेको ऊन पानीले भिज्दैन ॥१४॥ त्यस्तै संसारगामी जन्तु संसारी बन्धनहरुमा बाँधिदैन । गुन्द्री सुकुल दान गर्ने मनुष्य आसन तथा शय्याहरूमा बसेर सब प्रकारले सुखी रहन्छ ॥१५॥ जो जन सुस्ताउनका लागि अथवा पल्टन सुत्नका लागि गुन्द्री या काम्लो दिन्छ, त्यो त्यत्ति मात्रले पनि मुक्त भैहाल्छ; यसमा कुनै सन्देह गर्ने काम छैन॥१६॥ निद्राले नै दुःख हट्तछ, निद्राले नै थकाइ नाशिन्छ; गुन्द्रीमा सुत्नाले अवश्य नै यस्तो निद्रा आरामले आउँछ॥१७॥ हे राजन् ! माधवको प्रिय वैशाख महीनामा जो जन काम्लो दान गर्छ त्यो अकाल मृत्यु र कालमृत्यु दुवैबाट छुटेर निश्चय सय वर्षसम्म बाँचिरहन्छ ॥१८॥



वस्त्रं द्विजेन्द्रे घर्मकर्शिते । पूर्णमायुरवाप्नोति परत्र च परां गतिम् ॥१९॥ अन्तस्तापहरं दिव्यं कर्पूरं तु द्विजातये । दत्त्वा मोक्षमवाप्नोति दुःखशान्तिं च विन्दति ॥२०॥ कुसुमानि च यो दद्यात् कुंकुमं च द्विजातये । सार्वभौमो भवेद्राजा सर्वलोकवशंकरः ॥२१॥ पुत्रपौत्रादिभोगाँश्च भुक्त्वा मोक्षमवाप्नुयात् । त्वगस्थिगतसन्तापं सद्यो हरति चन्दनम् ॥२२॥ तापत्रयविनिर्मुक्तस्तद्त्त्वा मोक्षमाप्नुयात् । उशीरं चम्पकैलाभिर्यो दद्यात् वासितं जलम् ॥ २३ ॥ सर्वभूतेषु राजेन्द्र स तु देवसहायवान् । पापहानि दुःखहानि प्राप्य निर्वृतिमाप्नुयात् ॥ २४ ॥ गोरोचं

घामले आकुलव्याकुल-असीनपसीन, भएको श्रेष्ठ ब्राह्मणलाई जो मसिनो वस्त्र दान गर्छ त्यो पूरा आयु प्राप्त गर्छ र परलोकमा परमगति पाउँछ ॥१९॥ भित्री ताप हर्ने दिव्य कपूर ब्राह्मणलाई दान दिनाले मुक्ति प्राप्ति हुन्छ र सुख र शान्ति पनि मिल्दछ॥२०॥ जो जन ब्राह्मणलाई फूल र कपूर दान दिन्छ त्यो जन सारा लोकलाई वश गर्ने भएर सार्वभौम राजा हुन्छ ॥२१॥ र छोरा नाति इत्यादिको भोग भोगेर मोक्ष पाउँछ। छाला र हड्डीमा भएको पीडालाई चन्दनले चाँडै नै हटाउँछ ॥२२॥ यस्तो यो चन्दन दान गर्नाले मनुष्य तीनैं ताप ( दुःख ) बाट छुटेर मोक्ष पाउँछ । जो मानिस खसचंपा अलैंचीले सुगन्धित जल दान गर्दछ॥ २३ ॥ हे राजेन्द्र ! सबै प्राणीहरुमा त्यो जन नै देवताहरुको सहायता पाउँछ। उसका सब पाप र दुःख हटतछन र देह त्यागेर त्यो मोक्ष पनि प्राप्त गर्दछ ॥ २४ ॥

मृगनाभिं च दद्याद्वैशाखमर्मवित् । तापत्रयविनिर्मुक्तः परं निर्वाणमृच्छति ॥२५॥ ताम्बूलं च सकर्पूरं यो दद्यान् मेषगे रवौ । सार्वभौमसुखं भुक्त्वा परं निर्वाणमृच्छति ॥२६॥ शेवतीं यूथिकाजातिं मेषमासे ददन्नरः । स सार्वभौमो भवति पश्चान्मोक्षं च विन्दति ॥२७॥ केतकी-मल्लिकापुष्पं यो दद्यान्माधवागमे । स तु मोक्षमवाप्नोति मधुशासनशासनात् ॥२८॥ पूगीफलं तु यो दद्यात् सुगन्धं च द्विजातये । नारिकेलफलं राजंस्तस्य पुण्यफलं शृणु ॥२९॥ सप्तजन्म भवेद्विप्रो धनाढ्यो वेदपारगः । पश्चात्सप्तकुलैर्युक्तो विष्णुलोकं स गच्छति ॥३०॥ विश्राममण्डपं

वैशाख महीनाको माहात्म्य जान्नेवाला जो जन गोरोचन र कस्तूरी दान गर्दछ त्यो जन तीनै ताप ( दुःख ) बाट छुटेर निर्वाणपद (मुक्ति) पाउँछ ॥२५॥ सूर्य मेष राशिमा रहँदा अर्थात् वैशाख महीनामा जो जन कपूर हालेको पान ब्राह्मणलाई दिन्छ, जो जन सार्वभौम राजाको सुख सयल भोगेर आखिरमा मोक्षको परम पदवी पाउँछ ॥२६॥ वैशाख महीनामा सेवती, जूही तथा चमेलीको फूल दान गर्ने मानिस सार्वभौम राजा हुन्छ र पछि मोक्ष पद पनि पाउँछ ॥२७॥ जो वैशाख महीनामा केतकी तथा मालतीको फूल दान गर्दछ, त्यो जन विष्णु भगवानको आज्ञाले मोक्ष पद पाउँछ ॥२८॥ जो जन ब्राह्मणलाई सुपारी, सुगन्धित द्रव्य तथा नरिवलको फल दिन्छ, हे राजन् ! उसका पुण्यको फल सुन्नुहोस् ॥२९॥ त्यस्तो मानिस सात जन्मसम्म ब्राह्मण भै जन्मन्छ, धनी तथा वैदिक हुन्छ र अन्तमा आफ्ना सात कुलसहित विष्णुको लोकमा जान्छ ॥३०॥ जो जन ब्राह्मणको घरमा विश्रामका लागि बैठक बनाइदिन्छ, हे राजन् ! त्यसका पुण्यको फल बखान



यस्तु प्रकुर्याद्द्विजमन्दिरे । तस्य पुण्यफलं वक्तुं नाहं शक्नोमि भूपते ॥३१॥ सुच्छायामण्डपं यस्तु सिकताकीर्णमञ्जसा । सप्रपं कारयेद्यस्तु स तु लोकाधिपो भवेत् ॥३२॥ मार्गोद्यानं तडागं वा कूपं मण्डपमेव वा । यः करोति स धर्मात्मा तस्य पुत्रैस्तु किं फलम् ॥३३॥ कूपस्तडाग उद्यानं मण्डपश्च प्रपा तथा । सद्धर्मकरणं पुत्रः सन्तानं सप्तधोच्यते ॥३४॥ एतेष्वन्यतमाभावे नोर्ध्वं गच्छन्ति मानवाः । सच्छास्त्रश्रवणं तीर्थं यात्रा सज्जनसङ्गतिः ॥३५॥ जलदानं चान्नदान-मश्वत्थारोपणं तथा । पुत्रश्चेति च सन्तानं सप्त वेदविदो विदुः ॥३६॥ नासन्ततिर्लभेल्लोकान्

त म पनि असमर्थ छु ॥३१॥ जो जन बाटाहरूमा चारैतिर बालुवा बिछ्याइएको छायादार चबूतरा बनाइदिन्छ, त्यहाँ पानी पिउने प्रबन्ध मिलाइदिन्छ, त्यो जन स्वर्गको राजा हुन्छ ॥३२॥ जो जन बाटाबाटामा बगैंचा लाउँछ, पोखरी वा कूवा खनाउँछ या दिसौना बनाउँछ, त्यो साह्रै ठूलो धर्मात्मा हो, त्यस्तो जन निःसन्तान भएको भए पनि छोराहरू भए सरह फल पाउँछ ॥३३॥ कूवा-पोखरी खनाउनु, बगैंचा लगाउनु, पाटी-पौवा बनाउनु, पौशाला राख्नु यो नै असल धर्म गर्नु उसको पुत्र हो; किनकि सन्तान सात प्रकारको बताइएको छ ॥३४॥ जो मनुष्य यीमध्ये यौटा पनि बनाउँदैन भने उसलाई स्वर्ग प्राप्त हुँदैन । असल शास्त्र सुन्नु, तीर्थयात्रा गर्नु, सज्जनहरूको संगति गर्नु ॥३५॥ जलदान, अन्नदान तथा पीपलको रूख रोप्नु र पुत्र हुनु यी सात प्रकारका सन्तान हुन्छन् भनी वेद जान्ने पण्डितहरूले बताएका छन् ॥ ३६ ॥

कृत्वा धर्मशतान्यपि । तस्मात् सन्तानमन्विच्छेत् सन्तानेष्वेकतो व्रजेत् ॥३७॥ पशूनां पक्षिणां चैव मृगाणां चैव भूरुहाम् । नोर्ध्वलोकं सुखं याति मनुष्याणां तु का कथा॥३८॥पूगीफलसमायुक्तं नागवल्लीदलैर्युतम् । कर्पूरैलादिसंयुक्तं दद्यात्ताम्बूलमुत्तमम् । शारीरैः सकलैः पापैर्मुच्यते नात्र संशयः॥३९॥ताम्बूलदो यशोधैर्यं श्रियमाप्नोतिनिश्चितम् । रोगीदत्वा विरोगः स्यादरोगीमोक्षमाप्नुयात॥४०॥वैशाखे मासि यो दद्यात्तक्रं तापविनाशनम् । विद्यावान् धनवान् भूमौ जायते नात्रसंशयः ॥४१॥ न तक्रसदृशं दानं धर्मकालेषु विद्यते । तस्मात्तक्रं प्रदातव्यमध्वश्रान्तद्विजातये ॥४२॥

सयकडौं धर्म गरेर पनि अपुतो मानिस स्वर्गलोक आदि पाउन सक्तैन, त्यसकारण सन्तान चाहनेले माथिका सातमा यौटै पनि गऱ्यो भने सन्तान भए सरह फल पाउनेछ ॥३७॥पशुहरुलाई पक्षीहरुलाई अनि मृगहरुलाई यहाँसम्म कि रुखहरुलाई पनि सन्तान छैन भने माथिका लोकहरुको सुख मिल्दैन त फेरि मानिसहरुको के कुरा !॥३८॥सुपारी, नागवल्लीको दल, कपूर, अलैंची हालेको अति उत्तम पनि जो ब्राह्मणलाई दिन्छ, त्यो जन समस्त शारीरिक पापबाट मुक्त हुन्छ, यसमा कुनै सन्देह छैन ॥३९॥ पान दान गर्ने जन अवश्य नै यश, धैर्य तथा लक्ष्मी प्राप्त गर्दछ। रोगीले यस्तो पान दान गऱ्यो भने निरोगी हुन्छ, निरोगीले त्यो दान गरे मोक्ष हुन्छ॥४०॥वैशाख महीनामा ताप विनास्ने भित्रैसम्म ठण्डा पार्ने मोही जो दान गर्दछ, त्यो जन यस संसारमा विद्वान् र धनी हुन्छ, यसमा कुनै सन्देह छैन ॥४१॥गरमीको दिनमा मोहीको दान जस्तो अरु दान छैन तसर्थ बाटो हिंडेर पलस्त थाकेको बाहुनलाई मोहीको दान अवश्य दिनू ॥४२॥ कागतीको



जम्बीररसुरसोपेतं लसल्लवणमिश्रितम् । यस्तक्रमरुचिघ्नन्तु दत्वा मोक्षमवाप्नुयात् ॥४३॥ यो दद्याद्दधिखण्डं तु वैशाखे धर्मशान्तये । तस्य पुण्यफलं वक्तुं नाहं शक्नोमि भूमिप ॥४४॥ यो दद्यात्तण्डुलान् दिव्यान् मधुसूदनवल्लभे । स लभेत्पूर्णमायुष्यं सर्वयज्ञफलं लभेत् ॥४५॥ यो घृतं तेजसो रूपं गव्यं दद्याद्‌द्विजातये । सोऽश्वमेधफलं प्राप्य मोदते विष्णुमन्दिरे ॥४६॥ उर्वारु गुडसंमिश्र वैशाखे मेषगे रवौ । सर्वपापविनिर्मुक्तः श्वेतद्वीपे वसेद्ध्रुवम् ॥४७॥ यश्चेक्षुदण्डं सायान्हे दिवातापोपशान्तये ! ब्राह्मणाय च यो दद्यात्तस्य पुण्यमनन्तकम् ॥४८॥ वैशाखे पानकं

ताजा रसले गमगमाइएको, मसालादार नून हालेर सारफेर गरिएको, अरुचि नाश गर्ने ठण्डा मोही जो ब्राह्मणलाई प्याउंछ त्यो अवश्य मुक्त हुन्छ ॥४३॥ गर्मीको शान्तिका लागि जो जन वैशाख महीनामा बाक्लो दही ब्राह्मणलाई दिन्छ, हे राजन् ! त्यसका त्यस पुण्यको फल वर्णन गर्न त म सक्तैसक्तिनँ ॥४४॥ मधुसूदन भगवानको अत्यन्त प्यारो वैशाख महीनामा जो राम्रा चामल दान गर्छ, त्यो पूरा आयुसम्म बाँच्छ र समस्त यज्ञहरुको फल पाउँछ ॥४५॥ जो जन बलतेज बढाउने गाईको घिउ ब्राह्मणलाई खान दिन्छ, त्यो जन अश्वमेध यज्ञको फल पाएर विष्णु भगवान्‌को मन्दिरमा मजा लिन्छ ॥४६॥ मेष राशिमा सूर्य गएको वेला वैशाख महीनामा सक्खर मिसाएको ककडी या काँक्रो जो ब्राह्मणलाई दिन्छ, त्यो जन सारा पापदेखि मुक्त भएर भगवानको श्वेतद्वीपमा बस्नेछ ॥४७॥ वैशाखको दिनभरिको गर्माहट शान्त पार्नका लागि जो जनसाँझपख उखुको लाँक्रो ब्राह्मणलाई दिन्छत्यसलाई अनन्त पुण्य मिल्दछ ॥४॥ श्रम(थकान) को शान्तिको

दत्त्वा सायान्हे श्रमशान्तये । सर्वपासविनिर्मुक्तो विष्णोः सायुज्यमाप्नुयात् ॥४९॥ सफलं पानकं मेषमासे सायं द्विजातये । दद्यात्तेन पितृणां तु सुधापानं न संशयः ॥५०॥ वैशाखे पानकं चूतसुपक्वफलसंयुतम् । तस्य सर्वाणि पापानि विनाशं यान्ति निश्चितम्॥५१॥ यो दद्याच्चैत्रदर्शे तु कुंभं पूर्णं तु पानकैः । गयाश्राद्धशतं तेन कृतमेव न संशयः ॥५२॥ कस्तूरीकर्पुरोपेतं मल्लिकोशीरसंयुतम् । कलशंपानकैः पूर्णं चैत्रदर्शे तु मानवः । दद्यात्पितृन् समुद्दिश्य स षण्णवतिदो भवेत् ५३
इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे दानमहिमानिरूपणं नाम तृतीयोऽध्यायः॥३॥

लागि वैशाख महीनामा साँझतिर ब्राह्मणलाई पन्ना ( बुतबुतेमा ओल्स्याएको काँचो आँपको मसालादार बुनिलो शरबत ) प्यानो भने सारा पापबाट छुटेर विष्णुको सायुज्य मुक्तिपद पाउँछ ॥४९॥ वैशाख महीनामा साँझपख ब्राह्मणलाई कुनै रसिलो मीठो फल खुवाएर पन्ना प्यायो भने त्यो त्यसका आफ्ना समस्त पितृहरूलाई अमृत पान हुन जान्छ ॥५०॥ वैशाख महीनामा राम्रोसितपाकेको आँपको फलसहित पन्ना प्यायो भने त्यसका सारा पाप निश्चय नै नाश हुन्छन्॥५१॥ जुन जनले चैतको औंसीका दिन अन्नले भरिएको घड़ा दान दिन्छ भने उसले सय गयाश्राद्ध गरेको फल पाउँछ, यसमा कुनै संशय छैन ॥५२॥ जो मनुष्य चैतको औंसीका दिन कस्तूरी, कपूर, मल्लिका तथा खस मिसिएको पन्नाले भरिएको घडा समस्त आफ्ना पितृहरू तृप्त हउन् भन्ने उद्देश्यले पण्डित बाजेलाई दिन्छ उसले छयानबे श्राद्ध गरेको फल पाउँछ ॥५३॥ श्री स्कन्दपुराणको वैशाख महीनामा नारद र अम्बरीष संवादमा दान-महीना नामको तेस्रो अध्याय सकियो ॥ ३ ॥



# अथ चतुर्थोऽध्यायः

नारद उवाच तैलाभ्यङ्गं दिवास्वापं तथा वै कांस्यभोजनम् । खट्वानिद्रां गृहे स्नानं निषिद्धस्य च भक्षणम् । वैशाखे वर्जयेदष्टौ द्विभुक्तं नक्तभोजनम् ॥१॥ ब्रह्मपत्रे तु यो भुङ्क्ते वैशाखे व्रतसंस्थितः । स तु पापविनिर्मुक्तो विष्णुलोकं स गच्छति ॥ २ ॥ वैशाखे मासि मध्यान्हे श्रान्तानां तु द्विजन्मनाम् । पादावनेजनं कुर्यात् तद्‌वदन्ति व्रतोत्तमम् ॥३॥ अध्वश्रान्तं द्विजं यस्तु मध्यान्हे स्वगृहागतम् । उपवेश्यासने रम्ये कृत्वा पादावनेजनम् ॥ ४ ॥ धृत्वा

नारदले भन्नुभयो—वैशाख महीनामा शरीरमा तेल घस्नु, दिउँसो सुत्नु, काँसको भाँडामा खानु, खाटमा सुत्नु घरमा न्वाहुनु, हविष्यमा निषेध गरिएका चीज खानु, दिनमा दुइपल्ट खानु, रातिखानु यी आठ काम त्यागनुपर्छ ॥१॥ वैशाखमा नियमपूर्वक रहने जो मानिस कमलको पातमा खान्छ, त्यो सारा पाप छुटेर विष्णुको लोकमा जान्छ ॥२॥ वैशाखमहीनाको मध्यमा थाकेका बाहुनको गोड़ा धोइदिनु उत्तम व्रत कहलाउँछ॥३॥ हिंडाइले पलस्त थाकेर मध्याह्नमा आफ्नू घरमा आइपुगेको विप्रलाई राम्रो आसनमा बसाएर जो जन उनको चरणशीतल पानीले धोएर ॥४॥ त्यो चरणोदक

शिरसि तारचापो विध्वस्ताखिलबन्धनः । गङ्गादिसर्वतीर्थेषु स्नातो भवति निश्चितम् ॥ ५ ॥
अस्नायी वाय्यपत्राशी वैशाखे तु नयेद्यदि । रासभीं योनिमासाद्य पश्चादश्वतरी भवेत् ॥६॥
दृढाङ्गा रोगहीनश्च तथा स्वस्थोऽपि मानवः । वैशाखे तु गृहे स्नात्वा चाण्डाली योनिमाप्नुयात्
॥७॥ वैशाखे मासि राजेन्द्र मेषसंस्थे दिवाकरे । न करोति बहिः स्नानं श्वानयोनिशतं व्रजेत्
॥८॥ अस्नात्वा चाप्यदत्त्वा च वैशाखो येन नीयते । सपिशाचो भवेन्नूनमवैशाखद्धोव्रजेत् ॥९॥
यो न दद्याज्जलं चान्नं वैशाखे लोभमोहितः । पापहानिं दुःखहानिं नैवाप्नोति न संशयः॥१०॥

आफ्नो शरीरमा सेचन गर्दछ भने त्यो जन सारा पापका बन्धनबाट छुट्दछ र निःसन्देह उसलाई गंगा आदि सबै तीर्थमा न्वाहेको फल प्राप्त हुन्छ ॥५॥ यदि कोही नन्वाईकन, पातमा नखाईकन वैशाख महीना बिताउँछ भने त्यो अर्को जन्ममा गधा भएर जन्मन्छ र फेरि अर्को जन्ममा खचड भएर जन्मन्छ ॥६॥ जो बलियो, निरोगी तथा स्वस्थ मानिस, वैशाख महीनामा अल्छीले वा अविश्वासले घरैमा न्वाहुँछ भने त्यो चाण्डालको कुलमा जन्म लिनेछ ॥७॥ मेषमा सूर्य रहँदा वैशाख महीनामा जो घर-बाहिर कुनै तीर्थमा स्नान गर्दैन, हे राजन् ! त्यो पछि सय जन्मसम्म कुकुर भएर
३ जन्मन्छ॥८॥ तीर्थमा नन्वाहीकन अथवा केही दान नगरीकन जसले वैशाख महीना बितायो त्यो अवश्यै पिशाच हुन्छ र वैशाखको नियम नगरेसम्म अधोगतिमै प्राप्त भैरहन्छ ॥९॥ लोभले मोहित भएर वैशाख महीनामा अन्न, जल जो दान गर्दैन त्यसका पापको नाश र दुःखको नाश कहिल्यै हुँदैन, यसमा कुनै शंका छैन ॥१०॥ वैशाख महीनामा भगवान्लाई



नदीस्नानं तु यः कुर्याद्वैशाखे विष्णुतत्परः । जन्मत्रयार्जितात्पापान्मुच्यते नात्र संशयः ॥११॥
समुद्रगानदीस्नानं कुर्यात्प्रातर्भगोदये । सप्तजन्मार्जितैः पापैस्तत्क्षणादेव मुच्यते ॥१२॥ कुर्यादुषसि
यः स्नानं सप्तगङ्गासु मानवः । कोटिजन्मार्जितात्पापान्मुच्यते नात्र संशयः ॥१३॥ जान्हवीवृद्ध-
गङ्गा च कालिन्दी च सरस्वती । कावेरी नर्मदा वेणी सप्तगङ्गाः प्रकीर्तिताः ॥१४॥ देवखातेषु यः
कुर्यात्प्रातर्वैशाखमज्जनम् । जन्मारभ्य कृतात्पापान्मुच्यते नात्र संशयः ॥१५॥ वैशाखे मासि
सम्प्राप्ते यो वापीष्ववगाहनम् । प्रातः करोति हन्त्येष महापातकसञ्चयम् ॥ १६ ॥ अपि गोष्पद-

एकमनले संझेर जो नित्य नदीमा न्वाहुँछ, त्यो तीन जन्मदेखि पुग्रिएका पापबाट छुट्तछ, यसमा कुनै संशय छैन ॥११॥ जो वैशाख महीनामा सूर्योदयभन्दा पहिल्यै समुद्रमै गएर मिसिने नदीमा न्वाहुँछ, त्यो जन सात जन्मदेखि जम्मा रहेका समस्त पापबाट तुरुन्तै छुट्तछ॥१२॥ वैशाख महीनामा निम्नलिखित सात गंगामध्ये कुनै एकमा जो मानिस प्रातःस्नान गर्दछ, त्यो जन कोटि (करोड) जन्मदेखि भोग्न बाँकी रहेका पापबाट मुक्त हुन्छ, यसमा कुनै शंका लिने काम छैन॥१३॥ जाह्नवी, बूढीगंगा, कालिन्दी, सरस्वती, कावेरी, नर्मदा, बेणी यी सात सप्तगंगा कहिन्छन् ॥१४॥ आफैँ बनेका झोल तालहरूमा जो जन एकाबिहानै वैशाख-स्नान गर्छ, जन्मेदेखि गरिएका सबै पापबाट छुट्तछ, यसमा संशय छैन ॥१५॥ वैशाख महीना शुरू भएदेखि महीनाभर जो वापी ( चारैतिर सिढी भएको गहिरो जलाशय ) हरुमा प्रातः स्नान गर्दछ उसका महापातकादि संचित पापहरु सारा नष्ट हुन्छ ॥१६॥ घरदेखि बाहिर रहेका पवित्र डोबराहरुका जलमा पनि गंगा

मात्रेषु बहिःस्थेषु जलेषु च । तिष्ठन्ति सरितः सर्वा गङ्गाद्या इति निश्चयः ॥१७॥ इति जानन् समाप्नोति सर्वतीर्थाधिकं फलम् ॥१८॥ क्षीरं रसाधिकं क्षीरादधिकं दधि भूमिप । दध्नोऽधिकं घृतं यद्वदूर्जो मासोऽधिकस्तथा ॥१९॥ कार्तिकादधिको माघो माघाद्वैशाख उत्तमः । तस्मिन्मासे कृतो धर्मो वर्धते वटबीजवत्॥२०॥आढ्यो वाऽतिदरिद्रो वा परतन्त्रोऽथवा नरः । यद्वस्तु लभ्यते येन तद्दातव्यं द्विजातये ॥२१॥ कन्दमूलफलं शाकं लवणं गुडमेव च । काष्ठं पत्रं जलं तक्रमान-न्त्यायोपकल्पते । नादत्तं लभ्यते क्वापि ब्रह्माद्यैस्त्रिदशैरपि ॥२२॥ दानेन हीनस्तु भवेदकिञ्चनो

आदि सारा नदीहरू वास गर्छन्, यसमा कुनै शंका छैन ॥१७॥भन्ने ठानेर न्वाहेमा त्यहीं पनि सबै तीर्थमा भन्दा अधिक फल पाउँछ ॥१८॥हे राजन् ! रसहरूमा दूध श्रेष्ठ छ, दूधभन्दा दही श्रेष्ठ छ,दहीभन्दा घिउ श्रेष्ठ छ, त्यस्तै सबै महीना-मा कार्तिक महीना श्रेष्ठ छ ॥१९॥ कार्तिकभन्दा माघ श्रेष्ठ छ तथा माघभन्दा वैशाख उत्तम छ, यस महीनामा गरिएको धर्म बरको बीउ जस्तो गरी बढ्दछ ॥२०॥ मानिस धनी होस् या दरिद्री होस् अथवा पराधीन होस् उसले जो असल वस्तु पाउँछ त्यो ब्राह्मणलाई दान दिइहाल्नुपर्छ॥२१॥कन्द, मूल, फल,पाग,नून,सक्खर, काठ, पात, पानी मोही यी पदार्थहरू अति दान गर्न सक्यो उति बढ्दछ । नदिईकन त ब्रह्मा आदि देवताहरूले पनि पाउन सक्दैनन् ॥२२॥दान नगर्ने मानिस दरिद्री हुन्छ, दरिद्री भएपछि पाप गर्छ र पाप गर्नाले अवश्य नरकमा जान्छ, यसकारण सुख चाहनेले सधैं दान गर्नुपर्छ



निष्किञ्चनत्वाच्च करोति पापम् । पापादवश्यं नरकं प्रयाति दातव्यमस्मात्सुखमिच्छता सदा ॥२३॥ यथा गृहं सर्वगुणोपपन्नं परिच्छदैर्हीनमशोभनं तथा । मासेषु धर्मः सकलेष्वनुष्ठितो वैशाखहीनस्तु वृथैव याति ॥२४॥ यथैव कन्या सकलैश्च लक्षणैर्युक्तापि जीवत् पतिलक्षणा हि । क्रियाऽपि साङ्गा सकलापि राजन् वैशाखहीना तु वृथैव तां विदुः ॥ २५ ॥ दयाविहीनस्तु यथा गुणा वृथा वैशाखधर्मेण विना तथा क्रिया । शाकं तु यद्वल्लवणेनहीनं न रोचते सर्वगुणोपपन्नम् ॥ २६ ॥ वैशाखहीनं तु तथैव पुण्यं न साधु सेव्यं न फलाप्तिहेतुः । यथा ललामा शुभमेव भासते वस्त्रेण

॥२३॥जस्तो सबै प्रकारको गुणले युक्त भएको घर पनि छानु छैन भने नराम्रो देखिन्छ त्यस्तै सबै महीनाहरूमा दान धर्म गरेर पनि यदि वैशाख महीनामा दान गरेन भने अरु महीनामा गरिएका दान पुण्य सब बेकार हुन्छ ॥ २४ ॥ जस्ता प्रकार कन्या सारा लक्षणले युक्त भए पनि सधवा भए मात्र लक्षणा (लक्षणवाली) कहिन्छे, त्यस्तै हे राजन् ! विधिपूर्वक गरिएका सारा क्रिया पनि वैशाखमा गरिएनन् भने ती सब वृथा हुन् भन्ने जान्नुहोस् ॥२५॥ जस्तै सबै गुणले युक्त भएर पनि दया छैन भने ती सारा गुण व्यर्थ छन्,त्यस्तै वैसाख महीनामा दान धर्म गरेन भने, सबै परिकार पुगेको पनि नून विनाको तरकारी जस्तो, ती बेकार छन् ॥२६॥ जस्तै सजिएकी सुन्दरी नारी राम्री देखिए पनि लुगा लगाएको छैन भने फिक्री देखिन्छे त्यस्तै महीनाभरी दान पुण्य गरे पनि वैशाखमा नगरिएको पुण्य असल तरहले गर्न योग्य हुँदैन र फल

हीनं ललनासु राजन्॥२७॥क्रियाकलापः सुकृतोऽपि पुम्भिर्नशोभते तन्मधुमासहीनः ॥२८॥ तस्मात्सर्वप्रयत्नेन येन केनापि जन्तुना । धर्मा वैशाखमासस्य कर्तव्याइति निश्चयः॥२९॥मधुसूदनमुद्दिश्य मेषसंस्थे दिवाकरे । प्रातः स्नात्वा यजेद्विष्णुमन्यथा नरकं व्रजेत् ॥३०॥ वैशाखः सकलो मासो मधुसूदनदैवतः । तीर्थयात्रा तपोयज्ञदानहोमफलाधिकः ॥३१॥ प्रार्थनामन्त्रः—मधुसूदन देवेश वैशाखे मेषगे रवौ । प्रातः स्नानं करिष्यामि निर्विघ्नं कुरु माधव ॥३२॥ अर्घ्यमन्त्रः—वैशाखे मेषगे भानौ प्रातः स्नानपरायणः । अर्घ्यं तेऽहं प्रदास्यामि गृहाण मधुसूदन ॥३३॥ गङ्गाद्याः सरितः सर्वास्तीर्थानि च तथा ह्रदः । प्रतिगृह्य मया दत्तमर्घ्यं सम्यक् प्रसीदत ॥३४॥

पाइने पनि हुँदैन।।२७॥ मानिसहरूले गरिएका अनेक असल कर्महरू पनि वैशाख महीनामाधर्म कर्म नगरेत भने शोभिदैनन् ॥२८॥ यसकारण प्रत्येक प्राणीले यत्नपूर्वक वैशाख महीनामा वैशाख महीनाका धर्महरू अवश्य नै गर्नुपर्छ ॥२९॥ मेष राशिमा सूर्य रहेको वेला भगवान् विष्णुलाई संझेर प्रातःस्नान गरी विष्णु भगवान्‌को पूजा गर्नुपर्छ, नत्र नरकमा जाकिन्छ ॥३०॥ सम्पूर्ण वैशाख महीनाको देवता भगवान् विष्णु हुनुहुन्छ,यस महीनामा गरिएका तप,यज्ञ, दान, होम सबै अधिक फल दिनेवाला हुन्छन् ॥३१॥ प्रार्थनाको मन्त्र–हे मधुसूदन ! हे देवेश ! मेषमा सूर्य रहेको वैशाख महीनामा प्रातःस्नान गर्दछु, हे माधव, मेरो स्नान निर्विघ्न गर्नुहोस् ॥३२॥अर्घ्यमन्त्र–हे मधुसूदन ! सूर्य मेष राशिमा छँदा वैशाख महीनामा नियमपूर्वक प्रातःस्नानमा लागेको म तपाईंलाई अर्घ्य दिन्छु, यो ग्रहण गर्नुहोस्॥३३॥गंगा आदि सारा नदीहरू, तीर्थहरू,



ब्रह्माद्या देवताः सर्वाऋषयो ये च वैष्णवाः । गृह्णन्त्वर्घ्यं मया दत्तं तथोक्तफलदो मम॥३५॥ऋषभः पापिनां शास्ता त्वं यमः समदर्शनः । गृहाणार्घ्यं मया दत्तं यथोक्तफलदो भव ॥३६॥इति चार्घ्यं समर्प्याथ पश्चात् स्नानं समाचरेत् । वाससी परिधायाथ कृत्वा कर्माणि सर्वशः ॥३७॥ मधुसूदनमभ्यर्च्य प्रसूनैर्माधवोद्भवैः । श्रुत्वा विष्णुकथां दिव्यामेतन्मासप्रशंसिनीम् ॥ ३८ ॥ कोटिजन्मार्जितात् पापान् मुक्तो मोक्षमवाप्नुयात् । न जातु खिद्यते भूमौ न स्वर्गे न रसातले ॥३९॥ न गर्भे जायते क्वापि न भूयः स्तनपो भवेत् । वैशाखे कांस्यभोजी यस्तथा चाश्रुतसत्कथः ॥४०॥ न

तथा सब दहहरू मैलेदिएको अर्घ्य लिएर खूब खुशी हुनुहोस् ॥३४॥ब्रह्मा आदि देवताहरू,सारा वैष्णव ऋषिहरू मैलेदिएको अर्घ्य ग्रहण गर्नुहोस् र मलाई यथोक्त फल दिनुहोस् ॥३५॥ तपाईं सर्वश्रेष्ठ हुनुहुन्छ, तपाईं पापीहरूलाई शासन गर्नेवाला समदर्शी यमराज हुनुहुन्छ, मैले दिएको अर्घ्य ग्रहण गर्नुहोस् र यथोक्त फल दिनेवाला हुनुहोस्॥३६॥यस्तो प्रकारले अर्घ्य अर्पण गरेर पछि स्नान गरी चोखा लुगा फेरेर आफ्ना नित्यका सारा पाठ पूजा गरिसकी॥३७॥वैशाख महीनामा फुल्ने फूलहरूले भगवान् विष्णुलाई पूजा गरेर, यस महीनाको विष्णुको दिव्य कथा भएको वैशाख माहात्म्य सुनेर ॥३८॥ कोटिन् जन्मदेखि गरिएका पापहरूबाट मुक्त भई मानिस मोक्षपद पाउँछ । उसलाई [illegible] स्वर्गमा र रसातलमा पनि कहिल्यै दुःख हुँदैन ॥३९॥ त्यस्तो मानिसले फेरि कहिल्यै गर्भवास गर्नुपर्दैन र स्तन पिउने पनि हुनुपर्दैन । यदि

स्नातो नापि दाता च नरकानेव गच्छति । ब्रह्महत्यासहस्रस्य पाप शाम्येत्कथञ्चन ॥४१॥ वैशाखे येन न स्नानं तत्पापं नैव गच्छति । स्वाधीनेन च कायेन खप्सु स्वातन्त्र्यवर्तिषु॥४२॥ स्वाधीन-जिह्वयोच्चार्यं हरिरित्यक्षरद्वयम् । न कुर्याद्यदि वैशाखे प्रातःस्नानं नराधमः ॥४३॥ जीवन्नेव च पञ्चत्वमागतो नात्र संशयः । येन केनापि पुष्पेण माधवे मधुसूदनम् ॥४४॥ नार्चयेद्यदि मूढात्मा सौकरीं योनिमाप्नुयात् । योऽर्चयेत्तुलसीपत्रैं वैशाखे मधुसूदनम् ॥४५॥ नृपो भूत्वा सार्वभौमः कोटिजन्मसु भोगवान् । पश्चात् कोटिकुलैर्युक्तो विष्णुसायुज्यमाप्नुयात् ॥४६॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे वैशाखधर्मप्रशंसनंनाम चतुर्थोऽध्यायः ॥४॥

कसैले वैशाख महीनामा काँसको भांडामा खायो भने वा भगवान्‌को दिव्यकथा भएको वैशाख माहात्म्य सुनेन भने ॥४०॥ यदि वैशाख-स्नान गरेन भने, कुनै किसिमको दान गरेन भने अवश्य त्यस्तो मानिस नरक जान्छ । भलै, हजारौं ब्रह्महत्या आदि पाप कुनै उपायले नाश होस् ॥४१॥तर जसले स्वाधीन शरीरले स्वतन्त्र बग्ने जलमा वैशाख स्नान गरेको छैन भने त्यो पाप कसै गरे पनि नाश हुन्न॥४२॥यदि कोही अधम मनुष्य आफ्नू स्वतंत्र जिब्राले 'हरि' यो दुइ अक्षरको उच्चारण गर्दै वैशाख महीनामा प्रातःस्नान गर्दैन भने ॥४३॥ त्यो जब बाँच्तैमा पनि मरेकै समान हो, यसमा कुनै सन्देह छैन । जसले कुनै पनि फूलले वैशाखमा मधुसूदन भगवानलाई॥४४॥ यदि पूजा गरेन भने त्यो मूर्ख व्यक्ति सुँगुर भएर जन्मन्छ । जो वैशाख महीनामा मधुसूदन भगवान्‌लाई तुलसीपत्रले पूजा गर्दछ ॥४५॥ त्यो करोडौं जन्मसम्म राजा भएर सुख भोग्दछ र पछि करोडौं कुल सहित नारायण भगवान्‌को सायुज्य पद पाउँछ॥४६॥ इति चतुर्थोऽध्यायः ॥ ४ ॥



## अथ पञ्चमोऽध्यायः

नारद उवाच–वैशाखः सर्वधर्मेभ्यस्तपो धर्मेभ्य एव च । कथं स सर्वमासेभ्यो दानेभ्योऽप्यधिको भवेत् ॥१॥ तद्वक्ष्यामि महाराज शृणु चैकमना भव । कल्पान्ते देवराड्विष्णुः शेषशायी महाप्रभुः ॥२॥ कुक्षिस्थलोकसङ्घोऽयं स शेते प्रलयार्णवे । अनेको लोकतां प्राप्य भूतिभिर्योगमायया ॥३॥ निमेषस्यावसाने तु श्रुतिभिर्बोधितस्ततः । स्वकुक्षिजीवसङ्घानां रक्षां चक्रे दयानिधिः ॥४॥ तत्तत्कर्मफलावाप्त्यै सृज्यान् स्रष्टुं मनो दधे । तस्य नाभेरभूत्पद्मं सौवर्णं भुवनाश्रयम् ॥५॥ ब्रह्माणं जनयामास वैराजं पुरुषाह्वयम् । तस्मिन् ससर्ज भगवान् भुवनानि चतुर्दश ॥६॥

नारदजीले भन्नुभयो—वैशाख महीना सारा धर्म-कर्म-तपस्या-दानमा कसरी त्यो अरू सबै महीनाका धर्म-कर्म-तप दानभन्दा श्रेष्ठ भो ? ॥१॥ हे महाराज ! अब म त्यो कुरा सुनाउँछु, एकमन भएर सुन । कल्पको अन्तमा देवताहरुका अधिराज शेषनागमा सुत्ने महाप्रभु विष्णु भगवान् ॥२॥ लोक-समुदायलाई भुँडीभित्र राखेर प्रलयरूपी समुद्रमा सुत्नुभो त अनेक शक्ति एकतामा मिलेर भएका योगमाया र भूति (ईश्वरीयशक्ति) हरूले॥३॥ निमेषभरको बाद नै वेदहरूद्वारा जगाइए, तब उनको दयाका खानि भगवान्ले आफ्ना पेटाभित्र रहेका जीवसमुदायको रक्षा गर्नुभयो॥४॥ र ती जीवहरुको आफाफ्ना कर्मको भोग दिलाउनका निम्ति प्रभुले सृष्टिन योग्यहरुलाई सृष्टि गर्न इच्छा गर्नुभयो । तब भगवान्का नाभिबाट भुवनको आधाररूप सुनको कमल उत्पन्न भयो॥५॥त्यस कमलबाट प्रभुले विराट् पुरुष नामको ब्रह्मालाई उत्पन्न गर्नुभयो र त्यसमा

भिन्नकर्माश्रयप्राणि संघांश्च विविधान् वहून् । त्रिगुणां प्रकृतिं लोके मर्यादाँश्चाधियाँस्तथा ॥ ७ ॥
वर्णाश्रमविभागाँश्च धर्मक्लृप्तिं च सोऽकरोत् । वेदैश्चतुर्भिस्तन्त्रैश्च संहितास्मृतिभिस्तथा ॥ ८ ॥
पुराणैरितिहासैश्च स्वाज्ञारूपैर्महेश्वरः । ऋषीन् प्रवर्तकाँश्चक्रे धर्मगुप्त्यै महाप्रभुः ॥९॥ ते प्रवर्ति-
तधर्मास्तु वर्णाश्रमविभागशः । प्रजाः श्रद्दधिरे सर्वाः स्वौचितान् विष्णुतोषदान् ॥ १० ॥ तांस्तु
प्रवर्तमानांस्तु स्वाश्रयान् द्रष्टुमीश्वरः । हृदिस्थोऽप्यव्ययः श्राक्षाद्विभीषार्थं परीक्षया ॥ ११ ॥
अनूना कुशलान्यत्र धर्मान् कुर्वन्ति वै प्रजाः । स कालः को भवेद्यद्वन्निति तं चिन्तयन् प्रभुः

भगवान्ले चौध लोक सृष्टि गर्नुभी ॥६॥ अनि तिनमा भिन्न-भिन्न कर्म भएका नाना प्रकारका प्राणीहरूको समूह सृष्टि गर्नुभो र त्रिगुणा प्रकृति तथा मर्यादा अनि स्वामीहरू सिर्जनुभो ॥७॥ तप उहाँले वर्णाश्रमको विभाग गर्नुभयो र धर्मको पनि रचना गर्नुभयो । अनि चारै वेद, मन्त्र तथा संहिता र स्मृतिहरूद्वारा ॥ ८ ॥ पुराण र इतिहासहरूद्वारा महाप्रभु ईश्वरले आफ्नु आज्ञारूपद्वारा पनि धर्मको रक्षाका लागि उनका प्रवर्तक ऋषिहरूको सृष्टि गर्नुभयो ॥ ९ ॥ वर्णाश्रमको विभा॰पूर्वक ती ऋषिहरूद्वारा चलाइएका धर्म मान्ने सारा प्रजाहरूले विष्णुका भक्त ती आफ्ना हितकारीहरूलाई श्रद्धा गरे ॥ १० ॥ सबैका हृदयमा वास गर्ने अविनाशी ईश्वर ती धर्ममा लगाइएका आफ्ना आश्रयमा रहने प्रजालाई जाँचेर डर-देखाउन प्रत्यक्ष हुनुभयो ॥ ११ ॥ हे राजन् ! प्रजागण कष्ट नसहीकन पूरा धर्म गर्न सकून् यस्तो कुन समय होला



॥ १२ ॥ वर्षाकाला मया सृष्टः सोदन्त्यस्ता इमाः प्रजाः । तत्रानूनान्न कुर्वन्ति धर्मान् पङ्काद्युप-
द्रुताः ॥१३॥ तान् दृष्ट्वा कोप एव स्यात्तेषु तुष्टिर्न मे भवेत् । मयेक्षिता न सीदन्तु तस्मात्तान्न-
विलोकये ॥१४॥ शरद्यपि तथा पूर्तिः कर्षणान् नैव जायते । केचित्पक्वफलासक्ताः केचिद्वृष्टिभि
रर्दिता ॥१५॥ केचिच्छीतार्दिता राजन् तान् दृष्ट्वा रोष एव मे । वैगुण्यं पश्यमानस्य न मे तोषोऽ
भिजायते॥१६॥ उत्थापयन्तु नेष्यन्ति प्रातर्हेमन्तमागते । कोपो मेऽनुत्थितान् दृष्ट्वा प्रातः सूर्योदये
सति॥१७॥ शिशिरेपि तथैवार्ताः प्रातःकाल इमाः प्रजाः । तथा पक्वफलादानसक्ता ह्यनिशमअसा

भयो प्रभुले चिन्ता गर्न लाग्नुभयो ॥ १२ ॥ प्रभु सोच्नुहुन्छ—"मैले वर्षाकालको सृष्टि गरें; जसमा यी प्रजाहरू पीडित रहन्छन् र त्यस बेला हिलोले दुःखित भएर पूरा धर्म गर्दैनन् ॥१३॥ तिनलाई देखेर रिस मात्र उठ्दछ, तिनमा कत्ति पनि मलाई संतोष हुन्न । मैले हेरिरहेकाहरू कष्ट नपाऊन् भन्ने विचारले वर्षामा तिनीहरूतिर हेर्दै हेर्दिन ॥ १४ ॥ त्यस्तै शरद्ऋतुमा पनि खेतीले गर्दा धर्मको पूर्ति हुन सक्तैन किनकि कोही पाकेको बाली स्याहार्नमा तल्लीन रहन्छन्, कति वृष्टिले चुटिएर कामिरहेका हुन्छन् ॥१५॥ कति जाडोले लुगलुग कामिरहेका हुन्छन्; हे राजन् ! तिनलाई देखेर मलाइ रिस मात्र उठ्छ किनकि खेती पनि नगरी नहुने; खेतीमा लागेर हैरान भएका बेला धर्मको काम पनि हुन नसक्ने; यस्ता विपरीत स्थिति देखेर मलाई सन्ताप भएन ॥१६॥ हेमन्त ऋतु आएपछि प्रजागण बिहानै उठन चाहन्नन्; बिहान घाम झुल्किसक्ता पनि नउठेका तिनलाई देखेर मलाई असाध्य रिस उठ्छ ॥१७॥ शिशिर ऋतुमा पनि यी प्रजा बिहान

॥१८॥ उत्थापनं तु नेच्छन्ति पुनः शातादिताः स्तुताः । तेषां तु कर्मलोपः स्यान्नैवपूर्तिः कथञ्चन
॥१९॥ प्रेक्षायाः समयोमायमिति चिन्ताकुलो विभुः । वसंतसमयं मेने सर्वापत्तिनिवारकम् ॥२०॥
स्नाने दाने तथा यागे क्रियायां भोग एव च । नानाधर्मविधाने च ह्यनुकूलो ह्ययमृतुः ॥२१॥
अभ्यासेन लभ्यानि द्रव्याण्यसुभृतां ध्रुवम् । येन केन च द्रव्येण तुष्टिस्तनुभृतां भवेत् ॥२२॥
विष्णोराधारभूतानां तद्द्रव्यं धर्मसाधनम् । वसन्ते सकलं द्रव्यं प्राणिनां तु सुखावहम् ॥२३॥
दानयोग्यं कर्मयोग्यं भोगयोग्यं तु सर्वशः । निर्धनानां तु पंग्वादिविकलानां महात्मनाम् ॥२४॥

त्यस्तै दुःखी रहन्छन् र यिनी रात-दिन हतारपतार गरेर पाकेका हिउँदे बाली बसानं व्याकुल रहन्छन् ॥१८॥ र जाडोले कठ्याँग्रिएर आच्छु-आच्छु गरेका प्रजाहरू बिहानै उठन सक्तैनन् र तिनको कर्म लोप हुन्छ, त्यो कहिल्यै कसै गरे पनि पूरा हुन सक्तैन ॥१९॥ 'यो उपेक्षाको समय हैन' यस्तो चिन्ताले आकुल भएका भगवान्‌ले सारा आपत्तिले रहित भएको 'वसन्त समय' नै हो भन्ने ठाने ॥ २० ॥ उसै बेलादेखि स्नान, दान, यज्ञ, क्रिया र भोग अनि अनेक धर्म गर्नका लागि यो ऋतु बेश ठान्यो ॥२१॥ निश्चय नै प्राणधारीहरूका लागि यस ऋतुमा सजिलैसित वस्तुहरू मिल्छन्; जुनै पनि चीजले प्राणधारी जीवलाई संतोष दिन्छ ॥ २२ ॥ उही वस्तु प्रभुको आश्रयभूत प्राणीहरूलाई धर्मको साधन हो; वसन्त समयमा सबै वस्तु प्राणीहरूलाई सुख दिने हुन्छन् ॥२३॥ दरिद्र, लङ्गडा, लूला र महात्माका लागि पनि सबैतिरबाट यो ऋतु दान दिन योग्य, कर्म गर्न योग्य र भोग भोग्न योग्य हुन्छ ॥२४॥ निश्चय यो ऋतुमा जल आदि वस्तु सजिलै



द्रव्याणि च सुलभ्यानि जलादीनि न संशयः । द्रव्यैरेतैरात्महितं धर्मं कुर्वन्ति मत्प्रियाः॥२५॥
पत्रैः पुष्पैः फलैर्मूलैः शाकैश्चापि प्रियोक्तिभिः । सत्काम्बूलैश्चन्दनाद्यैः पादप्रक्षालनादिभिः॥२६॥
प्रश्रयाद्यैरहं तेषां वरदोऽहमितीरयम् । सञ्चिन्त्य भगवान् विष्णुः प्रतस्थे रमया सह ॥२७॥
वनानि सर्वतः पश्यन् विकसत् कुसुमानि च । हृष्टपुष्टजनाकीर्णं मत्तालिद्विजसेवितम् ॥२८॥
आश्रमाणां गृहाणां च वनग्रामनिवासिनाम् । प्राङ्गणादीनि रम्याणि ह्युद्यानानि स्थलानि च ॥२९॥
रमायै दर्शयन् विष्णुः सहदेवैर्महेश्वरैः । सिद्धचारणगंधर्वकिन्नरोरगराक्षसैः॥ ३० ॥स्तूयमानोऽभ्यगाद्

सित मिल्दछन् । मेरा प्रियजनहरूले यिनै द्रव्यद्वारा आफ्नू हित हुने काम गर्दछन् ॥२५॥ पातले, फूलले, फल-मूलले, सागले र प्रियवस्तुले, माला, पान, चन्दन आदिले तथा पाउ धुने आदि सत्कारले ॥२६॥ विनयपूर्वक बसाउनु आदि कामले म तिनीहरूलाई वर दिन्छु" यस्तो भन्दै र विचार्दै भगवान्‌ले लक्ष्मीका साथ प्रस्थान गरे ॥२७॥ चारैतिर वन, फुलेका फूलहरू हेर्दै, हृष्ट-पुष्ट जनहरूले व्याप्त तथा उन्मत्त भमरा र चराहरूले सेविएको ॥२८॥ आश्रमहरुका, घरहरुका र वन-गाउँमा बस्नेहरुका पनि आँगन, सुन्दर बगैंचा र ठाउँहरु ॥२९॥ लक्ष्मीलाई देखाउँदै देवता र महेश्वरका साथ भगवान्—सिद्ध-चारण-गन्धर्व-किन्नर-उरग (नाग) राक्षसहरूले ॥ ३० ॥ स्तुति गरिँदै प्राणीहरुका घर-घरमा गए र मीन संक्रान्तिदेखि कर्कट संक्रान्तिको अन्तसम्म ( चैते संक्रान्तिदेखि श्रावण मासान्तसम्म ) उहीँ रहनुभयो र चौथा

गेहान्सर्वाश्रमनिवासिनाम् । मीनादिकर्कजन्तं वै स तिष्ठन् रमया सुरः ॥ ३१ ॥ सार्द्धं प्रतीक्ष्य पुरुषान् कृताकृतसपर्यकान् । तत्र धर्मवतां पुंसां ददातिष्ठान् मनोरथान् ॥ ३२ ॥ मत्तान्त्र सहते पुंसो हरत्यायुर्धनादिकम् । यदि कुर्वन्ति वैशाखे सपर्यां परमात्मनः ॥ ३३ ॥ तत्रापि चलमूर्तीनां साधूनां यत्र वै विभुः । मासेष्वन्येषु यज्जातं कर्मलोपं सहिष्यते ॥ ३४ ॥ यथा देशागतं भूपं दृष्ट्वा जानपदाः प्रजाः । यदि तं चोपतिष्ठन्थि प्रश्रयार्घेर्महार्हणैः ॥ ३५ ॥ तदाकारादिकं न्यूनं पूर्णं जानाति पार्थिवः । पुनरप्यधिकं चेष्टं तुष्टो दास्यति निश्चितम् ॥ ३६ ॥ तदा त्वकृतपूजानां दण्डं

४ र लक्ष्मीका ॥३१॥ साथै त्यहाँ पूजा गर्ने र नगर्ने मानिसहरूलाई हेरेर श्रद्धा-भक्ति-विश्वासपूर्वक धर्म गर्नेहरूलाई उनले चाहेका मनोरथ पूरा गरिदिनुहुन्छ ॥३२॥ उन्मत्त पाखण्डीहरूलाई देखिसहनुहुन्न र त्यसको धन-आयुको नाश गरिदिनुहुन्छ । यदि त्यस्ता ढोंगी पनि वैशाखमा ईश्वरको पूजा गर्छन् भने ॥३३॥ उसमा पनि ईशका चलमूर्ति साधुजनको पूजा हुन्छ भने परमेश्वर त्यस्ताको अरु-अरु महीनामा गरिएका कर्महरूको लोप सहिलिनुहुन्छ ॥३४॥ जस्तै देशभित्र घुम्न आएका राजालाई देखेर त्यस जिल्ला वा प्रान्तका प्रजाहरू यदि बहुमूल्य कोसेलीहरु लिएर उनलाई भेट्छन् भने ॥३५॥ त्यो कोसेलीको रूपरङ्ग प्रमाण हेरेर त्यो प्रजाको भक्तिभाव आफूमा पूर्ण छ कि कम भन्ने कुरा राजा बुझ्दछन् र जसमा ज्यादा खुशी हुन्छन् उसको इच्छा निश्चयै पूरा गरिदिन्छन् ॥ ३६ ॥ राजाको सवारी भएको बेला घमण्डले जो स्वागत



तेषां करोति च । तथा विष्णुः स्वकीयानां वैशाखे माधवागमे ॥ ३७ ॥ सपर्यां कुर्वतां पुंसां ददातीष्टान् मनोरथान् । अकुर्वतां तथा पुंसां धनादीनि हरत्यलम् ॥ ३८ ॥ धर्मगोप्तुर्महाविष्णोर्देवदेवस्य शार्ङ्गिणः । परीक्षाकाल एवाऽयं तस्मान् मासोत्तमे ह्ययम् ॥ ३९ ॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे वैशाखश्रेष्ठत्वनिरूपणं नाम पञ्चमोऽध्यायः ॥ ५ ॥

सत्कारमा हाजिर हुँदैन त्यस्तालाई राजाले प्रत्यक्ष वा अप्रत्यक्षरूपले दण्ड दिन्छन् त्यस्तै विष्णु भगवान पनि माधवको प्रिय वैशाख महीनामा आफूले सिर्जेका ॥३७॥ आफ्नू पूजा गर्ने मानिसहरुलाई इष्ट मनोरथहरु दिनुहुन्छ र पूजा नगर्ने घमण्डी जनहरुको धन इत्यादि सबै सौख्य पदार्थ हरिलिनुहुन्छ ॥३८॥ धर्मको रक्षा गर्ने, शार्ङ्ग-धनुर्धारी, देवताहरूका पनि देवता महान् विष्णु भगवानको यो महीना परीक्षा-समय हो, यसै कारण वैशाख महीना निश्चय नै सबै महीनाहरूमा अति उत्तम महीना हो ॥ ३९ ॥

श्रीस्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीषको संवादमा वैशाखको श्रेष्ठत्व निरूपण नामको पाँचौं अध्याय सकियो ॥ ५ ॥

# अथ षष्ठोऽध्यायः

नारद उवाच—वैशाखेऽध्वश्रमार्तानां तृषार्त्तानां महीपते । जलदानमकुर्वास्तिर्यग्योनिमाप्नुयात् ॥१॥ अत्रैवोदाहरन्तीममितिहासं पुरातनम् । विप्रस्य गृहगोधायाः संवादं परमाद्भुतम् ॥२॥ पुरा नेक्ष्वाकुवंशेऽभूद्धे माङ्ग इति भूमिपः । ब्रह्मण्यश्च वदान्यश्च जितामित्रो जितेन्द्रियः ॥ ३ ॥ यावन्त्यो भूमिकणिका यावन्तो जलबिन्दवः । यावन्त्युडूनि गगने तावतीर्गा ददात्यसौ ॥ ४ ॥ येनेष्टं यज्ञदर्भैश्च भूमिर्बर्हिष्मती शुभा । गोभूतिलहिरण्याद्यैस्तोषिता बहवो द्विजा ॥ ५ ॥

नारदजीले भन्नुभयो—हे राजन् । वैशाख महीनामा बाटामा हिंडेर थाकेका प्यासले पाडित जनहरूलाई जो पानी प्याउँदैन त्यो पछि चरा भएर जन्मन्छ ॥१॥ यसको उदाहरणका लागि यो धेरै पुरानो इतिहास भैसकेको ब्राह्मण र माउसुलीको अति आश्चर्यलाग्दो संवाद सुनाउँछु॥२॥ प्राचीन कालमा इक्ष्वाकुको वंशमा हेमांग नामका कुनै राजा भएका थिए । उनी ब्राह्मणहरूमा श्रद्धा राख्तथे, दानी थिए, सारा शत्रुहरूलाई जितेका थिए र इन्द्रियहरूलाई आफ्ना वशमा राख्तथे॥३॥ यी राजाले जति भूईमा कणहरू छन् जति जलका थोपाहरू छन् आकाशमा जति ताराहरू छन्, त्यति गाईहरू उनले दान गरे अर्थात् असंख्य गाईदान गरे ॥४॥ ती राजाले गरेका यज्ञ कुशहरूले भूमि कल्याणकारी कुशशाली भइन् । यिनले गाई, भूमि, तिल सुवर्णहरूले धेरै ब्राह्मणलाई खुशी गराए ॥५॥ तिनले नदिएका दान कुनै पनि छैनन् भन्ने कुरो विख्यात छ,



तेन दत्तानि दानानि न विद्यन्तं इतिश्रुतम् । तेनादत्तजलं चैकं सुखलभ्यधिया नृप ॥ ६ ॥ बोधितो ब्रह्मपुत्रेण वसिष्ठेन महात्मना । अमूल्यं सर्वतोलभ्यं तद्ददातुः किं फलं भवेत् ॥ ७ ॥ दुर्बुद्धिहेतुवादैश्च न जलं दत्तवान् विभुः । अलभ्यदाने पुण्यं स्यादिति वाक्यं सुयुक्तिमत् ॥८॥ स आनर्चद्विजान्व्यङ्गान्दरिद्रान्वृत्तिकर्शितान् । नार्चयच्छ्रोत्रियान्विप्रांस्तत्त्वज्ञान्ब्रह्मवादिनः॥९॥ प्रख्यातान्पूजयिष्यन्ति सर्वे लोका समर्हणैः । अनाथानामविद्यानां व्यङ्गानां च कुटुम्बिनाम् ॥१०॥ दरिद्राणां गतिः का वा तस्मात्ते मे दयास्पदाः । इतिदुर्धीर्न पात्रेषु दत्तवान् किमपि स्वयम् ॥११॥

हे राजन् ! 'सजिलै पाइने चीज त होनि' भनिठानेर केवल उनले 'जलदान' गरेका थिएनन् ॥६॥ ब्रह्माको छोरा महात्मा वसिष्ठले संझाइएका पनि उनले जा सित्तैं पाइने, जता पनि पाइने फोकटिया पानी दान गरेर त्यो दान गर्नेलाई के फल मिल्छ र ॥७॥ भन्ने मतलबी कुरा सोचेर सर्वशक्तिमान् दुर्बुद्धि उस राजाले जल-दान गरेनन् । नपाइने कुराको दानलेनैं पुण्य मिल्दछ, यो युक्तिसंगत कुरो हो॥८॥ त्यो दुर्बुद्धि राजाले आफै बाठो भएर लूला लंगड़ा ब्राह्मणहरूलाई, दरिद्रीहरूलाई वृत्तिहीन भीखमङ्गाहरूलाई पूजा गर्‍यो अर्थात् प्रशस्त दान दियो, तर वेद पढेका, तत्त्व जान्ने, ब्रह्मवादी ब्राह्मणहरूलाई पूजेन अर्थात् कुनै दान दिएन॥९॥ प्रसिद्धजनहरूलाई सबै जना मूल्यवान् वस्तुहरूले पूज्दछन्, सबैले त्यस्तैलाई मात्रै पूजे अनाथ, मूर्ख, लूला-लंगड़ा-काना, बाहानबच्चा धेरै हुने॥१०॥ दरिद्रीहरूको के गति हुन्छ ? त्यसकारण मेरा ता तिनै मात्र दयाका पात्र हुन् । आफै यस्तो सोचेर त्यस दुष्ट बुद्धिले विद्वान् पवित्र पात्र ब्राह्मणहरूलाई क्यै दान दिएन ॥११॥ यस भयङ्कर

तेन दोषेण महता चातकत्वं त्रिजन्मसु । एकजन्मनि गृध्रत्वं श्वाऽभवत् सप्तजन्मसु ॥१२॥
पश्चान्नृपगृहे जातो भूपोऽयं गृहगोधिका । श्रुतकीर्त्याख्यभूपस्य मिथिलाधिपतिर्नृप ॥१३॥
गृहद्वारप्रतल्यां च वर्तते कीटनाशना । अष्टाशीतिषु वर्षेषु स्थितं तेन दुरात्मना ॥१४॥
विदेहाधिपतेर्गेहे कदाचिदृषिसत्तमः । श्रुतदेव इति ख्यातः श्रान्तो मध्याह्न आगतः ॥१५॥
तं दृष्ट्वा सहसोत्थाय जातहर्षो नराधिपः । मधुपर्कादिभिः पूज्य तस्य पादावनेजनीः ॥१६॥
आपो मूर्ध्ना वहन् क्षिप्रं तदोत्सिक्तैश्च बिन्दुभिः । दैवोपदिष्टकालेन प्रोक्षिता गृहगोधिका ॥१७॥

दोषले तीन जन्मसम्म उसले काकाकुल हुनुपऱ्यो, अनि एक जन्म गिद्ध भयो र सात जन्म कुकुर भयो ॥१२॥ र पछि हे राजन् ! त्यो राजा श्रुतिकीर्ति नाम भएको, मिथिलाको अधिपति भएर रहेको राजाको घरमा माउसुली भएर जन्म्यो ॥१३॥ त्यस दुष्टले त्यहाँ घरका ढोकाको संघारमा कीरा खाएर अट्ठासी वर्षसम्म बसिरहनुपऱ्यो॥१४॥ यस्तै समयमा कुनै दिन विदेहाधिपतिको दरबारमा ऋषिहरूमा श्रेष्ठ श्रुतदेव नामका ऋषि मध्याह्नमा थकित भएर आइपुगे ॥ तिनलाई देख्नेबित्तिकै एकाएक जुरुक्क उठेर खुशी भएका राजाले मधुपर्कादिले पूजा गरेर उनका पाउ धोए ॥१६॥ त्यो चरणोदक चर्चाँदै आफ्नू शिरमा छर्कंदा मास्तिर फ्याँकिएका ती चरणोदकका थोपाहरूले दैवसंयोग त्यो माउसुली पनि सेचिई॥१७॥ त्यो चरणोदक शरीरमा परेका प्रभावले उसलाई तुरुन्तै पूर्वजन्महरुका कुरा याद आए स आफ्नू मूढबुद्धिले गरिएका कर्महरूलाई



सद्यो जातस्मृतिरभूत्स्मृतकर्मातिदुःखिता । त्राहि त्राहीति चुक्रोश ब्राह्मणं गृहमागतम् ॥१८॥
तिर्यग्जन्तुरवं श्रुत्वा ब्राह्मणो विस्मितोऽवदत् । कुतः कोशसि गोधे त्वं दशेयं केन कर्मणा॥१९॥
त्वं देवपुरुषः कश्चिन्नृपो वाऽथ द्विजेऽथवा । कस्त्वं ब्रूहि महाभाग त्वामद्याहं समुद्धरे ॥२०॥
इत्युक्तः स नृपः प्राह श्रुतदेवं महामुनिम् । वयमिक्ष्वाकवो भूमन् शस्त्रविद्याविशारदाः ॥२१॥
यावन्तो भूमिकणिका यावन्तस्तोयबिन्दवः । यावन्त्युडूनि गगने तावतीर्गा ददाम्यहम् ॥२२॥
सर्वैर्यज्ञैर्मया चेष्टं पूर्तान्याचरितानि मे । ददान्यपि च दत्तानि धर्माद्राज्यमनुष्ठितम् ॥२३॥
तथापि दुर्गतिर्जाता मम चोर्ध्वगतिं विना । त्रिवारं चातकत्वं मे गृध्रत्वं चैत्रजन्मनि ॥२४॥

सम्झेर अति दुःखित भएको त्यो माउसुली—राजाका घरमा आएका ब्राह्मणसित 'मेरो रक्षा गर्नोस्, मेरो रक्षा गर्नोस्' यस्तो कराई कराई भन्न लागी ॥१८॥ त्यस कीराको चिल्लाहट सुनेर आश्चर्य भएका ब्राह्मणले हे माउसुली! किन कराउँछेस्, के कर्मले तेरो यो दशा भयो ? भने॥१९॥ तिमी कुनै प्रतापी पुरुष हौ कि ? कुनै राजा हौ कि ? अथवा कुनै ब्राह्मण हौ कि? हे महाभाग ! तिमी को हौ ? भन– आज म तिमीलाई उद्धार गर्दछु ॥२०॥ यसरी सोधिएको त्यो भूतपूर्व राजाले महामुनि श्रुतदेवलाई भन्यो–हे ब्राह्मण देवता ! हामी इक्ष्वाकु कुलका हौं र शस्त्रविद्यामा निपुण थियौं ॥२१॥ जति भूमिका कणहरू छन्, जति पानीका थोपाहरू छन्, जति आकाशमा ताराहरू छन् त्यति मैले गाई दान गरे ॥२२॥ सारा यज्ञ मैले गरें औ समस्त आचरणहरूलाई पनि पूरा गरें । दानहरू पनि धेरै दिएँ, शासन पनि धर्मपूर्वक गरें ॥२३॥ तैपनि स्वर्ग जान नपाएर मेरी दुर्गति भयो, तीनपल्ट म काकाकुल भएर जन्में, एकपल्ट गिद्ध भएर जन्में॥२४॥ हे ब्राह्मण ! योभन्दा पूर्वका

सप्तजन्मसु च श्वत्वं प्राप्तं पूर्वं मया द्विज । सिञ्चतानेन भूपेन तव पादाब्जेजनीः ॥२५॥
बिन्दवो दूरमुत्क्षिप्तस्तैः सिक्तोऽहं कथञ्चन । तेन जन्मस्मृतिरभूत् सर्वं पाप्मा हतश्च मे ॥२६॥
वैशाख ४१ गोधाजन्मनि भाव्यानि ह्यष्टाविंशति मे द्विज । दृश्यते दैवदृष्टानि विभ्यते जन्मभिभृशम् ॥२७॥ मा० अ० ६
न कारणं प्रपश्यामि तन्मे विस्तरतो वद । इत्युक्तः स द्विजः प्राह ज्ञात्वा विज्ञानचक्षुषा ॥२८॥
शृणु भूप प्रवक्ष्यामि तव दुर्योनिकारणम् । न जलं तु त्वया दत्तं वैशाखे माधवप्रिये ॥२९॥
तज्जलं सुलभं मत्वा ह्यमूल्यमिति निश्चितम् । नाध्वगानां द्विजातीनां धर्मकालेऽप्यजानता ॥३०॥

जन्ममा मैले सातपल्टसम्म कुकुरको जन्म पाउनुपऱ्यो । ई राजाले हजुरको पाउ धोए अनि त्यो चरणोदक छिरमा सेचन गर्दा॥२५॥ छिटाहरू पर-परसम्म मात्तिर पर्यांकिए, म पनि कसै गरी ती छिटाले सेचिएँ र जलका प्रभावले मलाई पहिलेका जन्महरूको याद भयो, अब मेरा सबै पाप पनि नाश भए॥२६॥ हे ब्राह्मण ! मैले अट्ठाइस जन्मतक माउसुलीको जन्ममा रहनुपर्नेछ । ती जन्ममा पनि यस्तै भाग्य भोग्नुपर्नेछ, ती जन्महरूले म अत्यन्त डराइरहेको छु ॥२७॥ मैले यस्ता भोगहरु भोग्नुपर्ने कुनै कारण पनि देख्दिनँ, के कारणले म यस्तो भएँ, त्यो मलाई विस्तारपूर्वक कहिदिनुहोस् । यसरी सोधिएका ती ब्राह्मणले ज्ञानदृष्टिद्वारा सबै कुरो जानेर भने-॥२८॥ हे राजन् ! तिमीले यो खराब योनिहरुमा जन्म लिनुपर्ने कारण म भन्दछु, सुन-तिमीले माधव भगवान्को प्रिय वैशाख महीनामा जल दान गरेनौ ॥२९॥ जल त्यो सजिलै पाइने, किर्नै पाइने भनिठानेर गर्मीको वेला बटोही ब्राह्मणलाई अज्ञानताले दिएनौ ॥३०॥ त्यस्तै असल पात्रलाई छाडेर अपात्रहरूलाई

तथा पात्रं समुत्सृज्य ह्यपात्रं प्रति दत्तवान् । ज्वलन्तमग्निमुत्सृज्य न हि भस्मनि हूयते ॥३१॥
कण्टकान्वितवृक्षस्य न कुर्वन्ति समर्चनम् । जनास्तथापि सेवायै शस्ताः शास्त्रेषु भूमिप ॥३२॥
वैशाख ४२ विशिष्टत्वात्पादपानामश्वत्थः सेव्यतां गतः । तुलसीं तु समुत्सृज्य बृहती पूज्यते न किम् ॥३३॥ मा० अ०
अनाथत्वं पूजितायां न प्रयोजकतामिमाम् । पंग्वाद्या येऽप्यनाथाश्च दयापात्रं हि केवलम् ॥३४॥
तपोनिष्ठा ज्ञाननिष्ठा श्रुतिशास्त्रविशारदाः । विष्णुरूपाः सदा पूज्या नेतरे तु कदाचन ॥३५॥
तत्रापि ज्ञानिनोत्यर्थं प्रिया विष्णोः सदैव हि । ज्ञानिनामपि भूपाल विष्णुरेव सदा प्रियः ॥३६॥

दान दियौ । दन्किरहेको आगोलाई छोडेर खरानीमा हवन गरिँदैन॥३१॥ हे राजन् ! पानिसहरु काँढा भएका रुखको पूजा गर्दैनन्, तैपनि सेवाका लागि शास्त्रमा यी प्रशंसित छन् ॥३२॥ विशिष्ट हुनाको कारण रुखहरुमा पीपल पुजिन्छ, तुलसीलाई छोडेरतात्रेको पूजा किन गरिन्न? ॥३३॥ पूजा कार्यमा अनाथत्व प्रयोजक हुँदैन,लँगडा आदि गरिएका जो पनि अनाथहरु छन् ती केवल दयाका पात्र हुन् ॥३४॥ तपस्वीहरु, ज्ञानीहरु, वेदशास्त्रमा धुरन्धर विद्वानहरु साक्षात् विष्णुका रूप हुन्, यसकारण यी सबैं पुज्न योग्य छन्, अरु जन कहिल्यै पुजिन्नन् ॥३५॥ तिनमा पनि ज्ञानी बनरहु विष्णु भगवान्का सधैं नै प्रिय छन्, हे राजन् ! ज्ञानीहरुमा पनि विष्णु सदा प्रिय छन् ॥३६॥ त्यसकारण ज्ञानीनै सदा पूज्य छ,पूज्यभन्दा पनि

तस्माज्ज्ञानी सदा पूज्यः पूज्यात्पूज्यतरः स्मृतः । अवज्ञा साधुवृत्तानामिहामुत्र च दु:खदा ॥३७॥
सेवा वै महतां पुंसां पुमर्थानां हि कारणम् । कोट्योऽप्यन्धजातीनां न पश्यन्ति यथा पथम् ॥३८॥
एवं मन्दयुतानां तु सङ्गतिर्नार्थदा भवेत् । यान्यम्मयानि तीर्थानि ये देवा मृच्छिलामयाः ॥३९॥
ते पुनन्त्युरुकालेन दर्शनादेव माधव । न साधुसेवया क्वापि सीदन्ते वै सुशिक्षिताः ॥४०॥
जन्ममृत्युजराद्यैर्वा सुधयाप्यायिता यथा । न जलं तु त्वया दत्तं साधवो वा न सेविताः ॥४१॥
तेन ते दुर्गतिश्चेयं प्राप्ता चेक्ष्वाकुनन्दन । वैशाखे यत्कृतं पुण्यं तुभ्यं दास्यामि शान्तये ॥४२॥
भूतं भव्यं भवद्येन कर्मजातं विजेष्यसि । इत्युक्त्वाऽथ उपस्पृश्य ददौ पुण्यमनुत्तमम् ॥४३॥

पूज्य मानिन्छ, जो साधुवृत्तिवालाहरुको निन्दा वा हेला गर्दछ उसले यस संसारमा र परलोकमा पनि दुःखपाउंछ॥३७॥ महान् पुरुषहरुको सेवा नै पुरुषार्थहरुको कारण हुन्छ, जस्तै करोडौं पनि अन्ध जातिहरु बाटो देख्तैनन् ॥३८॥ ती घेरै मन्दबुद्धिहरुको संगति लाभदायक हुँदैन, जो जलमय तीर्थ छन्, जो माटो एवं ढुंगाका बनेका देउता छन्॥३९॥ ती घेरै कालमा पवित्र गर्दछन्, तर साधुजन त दर्शनमात्रैले पवित्र पार्दछन् । राम्रो शिक्षा पाएका मानिसहरु साधुजनको सेवाले कहिल्यै दुःख पाउँदैनन्–॥४०॥ जस्तो कि अमृत पिएकाहरु जन्म-मृत्यु र बुढ्याइंले दुःखित हुँदैनन्। न त तिमिले जल दान गर्यौ, न त साधुहरुको सेवा नै गर्यौ ॥४१॥ यसैकारण तिमिले यो दुर्गतिपायौ, हे इक्ष्वाकुकुलका पुत्र,म वैशाखमा मैले गरेको पुण्य तिम्रो शान्तिका लागि तिमीलाई दिन्छु ॥४२॥ जुन पुण्यले तिमीले पहिले गरिएका कर्महरु दिव्य हुन्छन् र तिमी विजयी हुनेछौ,यति भनेर पानी छोएर (लिएर) उनलाई उत्तम पुण्य दिए ॥४३॥ जब ब्राह्मणले वैशाखमा एक दिन गरेका





यदा दत्तं ब्राह्मणेन स्नानं चैकदिने कृतम् । तेन ध्वस्ताखिलाघस्तु त्यक्त्वा सा गृहगोधिका ॥४४॥
रूपं कर्मोचितं घोरं सद्योऽदृश्यत पूरुषः । दिव्यं विमानमारुह्य दिव्यस्रग्वस्त्रभूषणः ॥४५॥
पश्यतामेव भूतानां मैथिलस्य गृहान्तरे । बद्धाञ्जलिपुटो भूत्वा परिक्रम्य प्रणम्य च ॥४६॥
अनुज्ञातो ययौ राजा स्तूयमानोऽमरैर्दिवम् । दिव्यरूपी महातेजा अप्सरोगणसेवितः ॥४७॥
तत्र भुक्त्वा महाभोगान् वर्षायुतमतन्द्रितः । स एव चेक्ष्वाकुकुले काकुत्स्थो भून्महाप्रभुः ॥४८॥
सप्तद्वीपवतीपालो ब्रह्मण्यः साधुसम्मतः । देवेन्द्रस्य सखा विष्णोरंश एव महाप्रभुः ॥४९॥

स्नानको फल दिए त त्यस पुण्यले सारा पाप नाश भएको त्यो माउसुलो ॥४४॥ आफ्नू कर्मानुसारको घोर रूप त्यागेर तुरुन्तै पुरुष रूपमा देखियो, र दिव्यमाला वस्त्र गरगहनाले युक्त भएर दिव्य विमानमा चढेर ॥३५॥ मिथिलाको राजाको समाघर मित्र सबै मानिसले हेर्दाहेर्दै हातजोडेर, सबैलाई परिक्रमा गरेर प्रणाम गरेर॥४६॥ पर्वद्वारा आज्ञा पाइएको राजा देउताहरुले स्तुति गरिदै दिव्य रूपको महातेजस्वी, अप्सराहरुले सेविएको भएर स्वर्ग गए ॥४७॥ उहाँ हमेशा एक हजार वर्षसम्म उत्तम भोगहरु भोगेर उनै राजा इक्ष्वाकु कुलमा 'काकुत्स्य' नामका ठूला राजा भएर जन्मे॥४८॥ उनी सातै द्वीप पृथ्वीका चक्रवर्ती भए, ब्राह्मणका सेवक, साधुहरुका भक्त भए, उनी स्वर्गका राजा इन्द्रका मित्र बने, चक्रवर्ती ती राजा मानो विष्णुका अंश नै थिए ॥४९॥ तब वशिष्ठले उनलाई वैशाखमा गर्न योग्य सबै राम्रा धर्महरु बताए, जसले समस्त

बोधितस्तु वसिष्ठेन वैशाखोक्तान्मनोरमान् । अनुष्ठायाखिलात् धर्मांस्तेन ध्वस्ताखिलाशुभः॥५०॥ दिव्यं ज्ञानं समासाद्य विष्णोः सायुज्यमाप्तवान् । वैशाखः शुभदस्तस्मात् पुम्भिः सर्वैरनुष्ठितः ॥५१॥ आयुर्यशः पुष्टिदोऽयं महापापौघनाशनः । पुमर्थानां निदानं च विष्णु प्रीणात्यनेन तु ॥५२॥ चातुर्वर्ण्येन रैः सर्वैश्चतुराश्रमवर्तिभिः । अनुष्ठेयो महाधर्मो वैशाखे माधवागमे ॥५३॥

इति श्रीस्कन्दपुराणे वैशाखमहात्म्ये नारदाम्बरीषसंवादे गृहगोधिकाख्यान नाम षष्ठोऽध्यायः ॥६॥

पाप नाशिएको छ ॥५०॥ दिव्य ज्ञान पाएर विष्णुको सायुज्य मुक्तिमा प्राप्त भो, त्यसकारण वैशाख महीना सबै शुभ फल दिनेवाला हो सबैले यसमा धर्म कर्म गरिनुपर्छ॥५१॥ यो वैशाख महीना आयु,यश र पुष्टि दिनेवाला हो,ठूला-ठूला पाप-समूहलाई नाश गर्नेवाला हो। पुरुषार्थको आदि कारण हो, वैशाखका सबै नियम गर्नाले भगवान् विष्णु प्रसन्न हुनुहुन्छ ॥५२॥ चारै वर्ण र चारै आश्रममा रहने सबै मनुष्यहरूले विष्णु भगवान्को प्रिय वैशाख महीनामा बताइएका महान् धर्महरू अवश्य गर्नुपर्छ ॥५३॥

श्री स्कन्दपुराणको वैशाख महात्म्य नारद र अम्बरीष संवादमा माउसुली-ब्राह्मण संवाद नामको छैटौं अध्याय सकियो ॥ ६ ॥



## अथ सप्तमोऽध्यायः

नारद उवाच—राजा तदद्भुतं दृष्ट्वा मैथिलोधर्मवित्तमः । कृताञ्जलिः सुखासीनं विस्मितोवाक्यमब्रवीत् ॥१॥ मैथिल उवाच—दृष्टमेतन्महाश्चर्यं साधूनां चरितं तथा । येन धर्मेण मुक्तोऽभूद्राजा चेक्ष्वाकुनन्दनः ॥ २ ॥ तं धर्मं विस्तरेणैव श्रोतुं कौतूहलं हि मे । मह्यं श्रद्धावते विद्वन् कृपया विस्तराद्वद ॥३॥ इति राजा सुसम्पृष्टः श्रुतदेवो महामनाः । साधु साध्विति सम्भाष्य व्याजहार नृपोत्तमम् ॥४॥ श्रुतदेव उवाच—सम्यग्व्यवसितावुद्धिस्तवराजर्षिसत्तमः । वासुदेवप्रियान् धर्माञ्छ्रोतुं यस्मान्मतिस्तव॥५॥ बहुजन्मार्जितं पुण्यं विना कस्यापि देहिनः । वासुदेवकथालापे मति·

नारदजीले भन्नुभयो—धर्मजान्नेहरूमा श्रेष्ठ मिथिलाका राजाले यस्तो अद्भुत घटना देखी आश्चर्यचकित भएर सुखपूर्वक बसेका ब्राह्मणलाई हात जोडेर सोधे ॥१॥ मिथिलाका राजाले भने—मैले यो आश्चर्य र साधुहरुको चरित्र देखें। जुन धर्मले इक्ष्वाकु कुलको राजा मुक्त भए ॥२॥ त्यस धर्मलाई विस्तारपूर्वक सुन्ने मलाई बडो उत्कण्ठा छ, हे विद्वन् ! श्रद्धायुक्तमलाई कृपा गरेर विस्तारपूर्वक सुनाउनुहोस् ॥३॥ यस्ता प्रकारले राजाले विनयपूर्वक सोधिएका महात्मा श्रुतदेवले 'अच्छा-अच्छा' भने र राजालाई भन्न थाले ॥४॥ श्रुतदेवले भन्नुभयो—हे राजर्षिहरुमा श्रेष्ठ ! तिम्रो बुद्धि बहुतै बेस छ, किनकि तिम्रो बुद्धि वासुदेवका प्रियकथाहरु सुन्न चाहन्छ ॥५॥ अनेक जन्मको आर्जित पुण्य न भैकन कुनै पनि प्राणीको

नैवोपजायते॥६॥ येन राजाधिराजाय जातेयं मतिरीदृशी। शुद्धं भागवतं मन्ये तेन त्वां साधुसत्तमम् ॥७॥ तस्मात्तुभ्यं ब्रुवे सौम्य धर्मान् भागवतान्शुभान् । यान् ज्ञात्वा मुच्यते जन्तुर्जन्मसंसारबन्धनात् ॥८॥ यथा शौचं यथा स्नानं यथा संध्या च तर्पणम् । अग्निहोत्रं यथा श्राद्धं तथा वैशाखसत्क्रियाः ॥९॥ वैशाखे माधवे धर्मानकृत्वा नोर्ध्वगो भवेत् । न वैशाखसमो धर्मो धर्मजातेषु विद्यते ॥१०॥ सन्त्येव बहवो धर्माः प्रजारञ्जनका इव । उपद्रवैश्च लेप्यन्ते नात्र कार्या विचारणा ॥११॥ सुलभाः सकला धर्माः कर्तुं वैशाखचोदिताः । उदकुम्भः प्रपादानं पथिच्छायासुनिर्मितम् ॥१२॥ उपानत्पादुकादानं छत्रव्यजनयोस्तथा । तिलयुक्तमधोर्दानं गोरसानां श्रमापहम्

बुद्धि–वासुदेवको कथा-वार्तामा लाग्दैन ॥६॥ जुन कारणले राजाधिराज तिमीलाई यो यस्तो बुद्धि भयो, त्यसैकारणले म तिमीलाई साधुहरुमा उत्तम शुद्ध भगवद्भक्त ठान्दछु ॥७॥ यसैकारण हे सौम्य ! तिमीलाई म कल्याणकारी भागवत धर्महरु सुनाउँछु, जुन धर्मलाई जानेर प्राणी जन्म र संसारका बन्धनहरुबाट छुट्दछ ॥८॥ जस्ता प्रकारले पवित्रता, स्नान, संध्या तर्पण, अग्निहोत्र र श्राद्ध अनिवार्य छन्, त्यस्तै प्रकारले वैशाख महीनाका उत्तम क्रियाहरु हुन्॥९॥ माधवको प्रिय वैशाख महीनामा धर्म नगरी मानिस स्वर्ग जान सक्दैन, सारा धर्मसमूहहरुमा वैशाखको धर्म जस्तो अर्को धर्म छैन ॥१०॥ धेरै नै धर्महरु प्रजालाई आनन्द दिने जस्ता मात्र छन्, ती उपद्रवले नाश पनि हुन्छन् यसमा कुनै विचार्ने कुरा छैन॥११॥ वैशाखमा बताइएका धर्महरु गर्न सबै सजिला छन्, जस्तै जलका घडाको दान, पौवाला चलाउनु, बाटामा छायाको प्रबन्ध गर्नु॥१२॥



॥१३॥ वापीकूपतडागादिकरणं पथिषाश्रमम् । नारिकेलेक्षुकर्पूरकस्तूरीदानमेव च ॥१४॥ गन्धानुलेपनं शय्या खट्वादानं च भूपते । तथा चूतफलं रम्यमुर्वारुकरसायनम् ॥१५॥ दानं दमनपुष्पाणां तथा सायं गुडोदकम् । चित्राण्यन्नानि पूर्णायां दध्यन्नं प्रत्यहं तथा ॥१६॥ ताम्बूलस्य सदा दानं चैतदर्शे शरीरकम् । स्वावबुदिने पूर्वः प्रातःस्नानं दिने दिने ॥१७॥ मधुसूदनपूजा च कथायाः श्रवणे तथा । अभ्यङ्गवर्जनं चैव तथा वै पत्रभोजनम् ॥१८॥ मध्ये मध्ये श्रमार्तानां वीजनं व्यजनेन च । सुगन्धैः कोमलैः पुष्पैः प्रत्यहं पूजनं हरेः ॥१९॥ फलं दध्यन्ननैवेद्यं धूप-

जुत्ता, खराऊ, जस्तै छाता, पंखाको दान, तिल सहित महको दान, थकाइ मेट्ने गोरसको दान॥१३॥ वापी-कुवा-पोखरी आदि बनाउनु, बटोहीहरुका लागि बाटा-घाटामा ओत-आश्रय बनाउनु, नरिवल, उखु, कपूर तथा कस्तूरीको दान गर्नु ॥१४॥ चन्दन लगाउनु तथा हे राजन्! पलङ या खाट दान गर्नु तथा राम्रो बेस आँप, ताजा ककडी दान गर्नु॥१५॥ सुगन्धराज फूल दान गर्नु, साँझपख शरबत प्याउनु, पूर्णिमाका दिन अनेक तरहका अन्न र रोजै दही र अन्न-दान गर्नु ॥१६॥ वैशाखभरि मसलाहरुले सुगन्धित पान दान गर्नु, चैत औंसीका दिन शरीरको दान दिनु, महीनाभरि सूर्य उदाउनुभन्दा पहिल्यै प्रातः स्नान गर्नु ॥१७॥ मधुसूदन भगवान्‌को पूजा र कथाको श्रवण गर्नु, वैशाखभरि तेल नघस्नु, पातमा भोजन गर्नु ॥१७॥ वेला-वेलामा थाकेका अनीन-पसीन भएकालाई पंखाले हम्कनु, बास्ना आउने नरम फूलले रोजै हरिको पूजा गर्नु ॥१९॥

दोषौ दिने दिने । गोग्रासं वृषपत्नीनां द्विजपादावनेजनम् ॥२०॥ गुडनागरदानं च धात्रीपिष्टप्रदापनम् । पथिकानां प्रश्रयं च दानं तण्डुलशाकयोः । एते धर्मा प्रशता हि वैशाखे माधवप्रिये ॥ २१ ॥ तथा च विष्णोः कुसुमार्पणं हरेः पूजा च कालोचितपल्लवाद्यैः दध्यन्ननैवेद्यनिवेदनं च समस्तपापौघविनाशहेतुः ॥२२॥ नारी पुष्पैर्माधवं नार्चयेद्या द्विजाख्यातं मन्दिरे वा गृहे वा ॥ पुत्रं सौख्यं क्वापि नाप्नोति हन्ति चायुर्भर्तुं स्वात्मनो वा महात्मन् ॥२३॥ रमासहाये माधवे मासि विष्णोः परीक्षार्थे धर्मसेतोः प्रजानाम् । गृहं याते मुनिभिर्दैवतैश्च काले पुष्पैर्नार्चयेद्यस्तु

दिनहुँ फूल, दही-अन्नको नैवेद्य चढाउनु-धूप-दीप गर्नु, गाईहरुलाई गोग्रास दिनु(खुवाउनु),ब्राह्मणहरुको गोडा धुनु॥२०॥ गुड (सक्खर) र अदुवा दान दिनु, अमलाको मुरब्बा दिनु, बटोहीहरुको सेवा गर्नु, चामल र सागको दान गर्नु,यिनै धर्महरु माधवको प्रिय वैशाखमहीनामा बर्न उत्तम छन् ॥२१॥ त्यस्तै नै विष्णु भगवान्लाई फूल चढाउनु,वैशाख महीनामा पलाउने फूल्ने पालुवा र फूलहरूले हरिको पूजा गर्नु, दही-अन्नको नैवेद्य चढाउनु, यी काम समस्त पापसमूहलाई नाश गर्ने कारण हुन् ॥२२॥ यदि ब्राह्मणहरूले कहे अनुसार कुनै नारी मन्दिरमा या घरमा फूलहरूले माधव भगवान्को पूजा गर्दिन भने त्यो कहिल्यै पनि पुत्र र सुख पाउँदिन वा हे महात्मन्! पतिको या आफ्नो आयु नाशपार्छे॥२३॥ वैशाखमहीनामा धर्मकासेतु



मूढः ॥२४॥ स मूढात्मा रौरवं प्राप्य पश्चाद्यायायोनिं राक्षसीं पञ्चवारम् । जलं चान्नं सर्वदा देयमस्मिन् क्षुधार्तानां प्राणीनां प्राणहेतुः ॥२५॥ तिर्यग्जन्तुर्जायते वार्यदानादान्नादानाज्जायते वै पिशाचः । अन्नादाने चानुभूतां कथां ते वक्ष्याम्येतामद्भुतां भूमिपाल ॥२६॥ रेवातीरे मत्पिताऽभूत्पिशाचः स्वमांसाशी क्षुत्तृषाभ्रान्तगात्रः । छायाहीने शाल्मलीवृक्षमूले ह्यन्नाभावान्नष्टचैतन्य एषः ॥२७॥ क्षुधा तृषा कर्मणा यस्य बह्वी सूक्ष्मं छिद्रं कण्ठनालस्य चासीत् । मांसं चान्नं कण्ठमध्ये निषण्णं कुर्यात्पीडा प्राणपर्यन्तमेव ॥२८॥ चलं दृष्ट्वा कालकूटप्रकल्पं कुल्यावापीसंस्थमप्यङ्ग

विष्णु भगवान् परीक्षाका लागि रमाका साथ,मुनिहरू र देवताका साथ घर आएको बेला जो मूर्ख फूलहरूले उनको पूजा गर्दैन ॥२४॥ त्यो मूर्ख रौरव नरकमा जाकिन्छ र पछि पाँच पस्टसम्म राक्षस भएर जन्मछ । यस महीनामा भोकले छटपटाएका प्राणीहरूको प्राण रक्षाको लागि सधैं जल र अन्न दान दिनुपर्छ ॥२५॥ वैशाखमा जलदान नगर्नाले पछि पशु भएर वा कीरा भएर जन्मिन्छ, अन्न दान नगर्नाले निश्चय पिशाच हुन्छ, हे राजन् ! अन्न दान नगरेको बारेमा स्वयं अनुभव गरेको अद्भुत यो कथा म तिमीलाई सुनाउँछु ॥२६॥ रेवा नदीको तीरमा मेरा बाबु पिशाच भएर रहेका थिए, उनी त्यस बेला आफ्नू मासु आफैं खान्थे, भोक प्यासले नाताकत हुँदा हलनटट्टू शरीरका भएका थिए, छाया नभएको सीमलका रूखको फेदमा खान नपाएर उनी बेहोश थिए ॥२७॥ उनका कर्मले भोक प्यास ज्यादा बढेको थियो,उनको घाँटीको नली पनि छिन्ला जस्तो थियो,उनको किलकिलेमा मासु र अन्न अड्केको थियो,जसले सासै निस्कन्छ कि जस्तो पीडा भैरहेको थियो

नूनम् । तस्यास्तीरे चागतं दैवयोगाद्गङ्गायात्राकारणान्मार्गमध्ये ॥२९॥ दृष्टोऽद्भुतं शाल्मलीवृक्ष-
मूले कृन्त्वा कृन्त्वा भक्षयन्तं स्वमांसम् । क्रोशन्तं तं बहुधा शोच्यमानं क्षुधातृषान्यथितं कर्मभिः
स्वैः ॥३०॥ स मां हन्तुं प्राद्रवत्क्रूरकर्मा मत्तेजसा निहतो दुद्रुवे च । तं चाब्रुवं कृपया खिन्न-
चित्तो मा भैषीरिति लक्ष्णया मे गिरा च ॥३१॥ कस्त्वं तात ब्रूहि सद्योऽत्र हेतुं कृच्छ्रादस्मा-
न्मोत्रये मा विषीद । इत्युक्तो मां प्राह पुत्रं त्वजानन् पुरानर्ते भूवराख्ये च ग्रामे ॥३२॥ नाम्ना
मैत्रः संकृतेर्गोत्रजोऽहं तपोविद्यादानयज्ञादिनिष्ठः । मयाऽधीताध्यापिता सर्वविद्या कृतो मया

॥२८॥ हे राजन् ! नदी तथा बापीमा रहेको पनि बगि वा हल्लिरहेको जललाई एकै कालकूल विष हो मनिठान्थे । दैव-
संयोगले गंगायात्राको निमित्त हिंडेको म पनि बाटामा त्यस रेवाको तीरमा पुगें ॥२९॥ सीमलको रूखको फेदमा आफ्नै
मासु लुछी लुछी खाइरहेको तथा आफ्ना कर्महरूले भोक प्यासले पीडित भएर पिरिइरहेको, नाना प्रकारले चिच्याइरहेको उस-
लाई मैले देखें ॥३०॥ क्रूर कर्म गर्ने वाला त्यो मलाई मार्न दौड्यो तर मेरो तेजले पिथिएर भाग्यो । दयाले खिन्नचित्त
भएको मैले आफ्नू मधुर वाणीद्वारा उसलाई 'नडराऊ' भनें ॥३१॥ हे बाबु ! तिमी को हौ ? यस्तो हुनाको कारण चाँडै
भन, यस भयङ्कर दुःखबाट म तिमीलाई छुटाउँछु, खेद नगर। यसरी सोधिएको उसले मलाई छोरो हो भन्ने नजानेर भसिद
भन्न थाल्यो, उहिले आनर्तदेशमा 'भूवराख्य' नाउँ भएको गाउँमा ॥३२॥ 'मैत्र' भन्ने नामले संस्कृति गोत्रमा म जन्मेको
थिएँ, तप-विद्या-दान-यज्ञ आदिमा श्रद्धा राख्थें। मैले सबै विद्या पढें र पढाए पनि; मैले सारा तीर्थमा न्वाहें पनि॥३३॥



---



सर्वतीर्थावगाहः ॥३३॥ दत्तं दान्नं मासि वैशाखसंज्ञे लोभाद्भिक्षामात्रमप्यङ्ग काले । शाच्याम्यहं
प्राप्य पैशाचयोनि नान्यो हेतुः सत्यमेवोक्तमङ्ग ॥३४॥ पुत्रोऽधुना वर्तते मद्गृहे च भूरिख्याति
श्रुतदेवेति संज्ञः । वाच्या तस्मै मद्दशा चात्मजाय वैशाखान्नादानतोऽभूत्पिशाचः ॥३५॥ दृष्ट-
स्तीरे ते पिता नर्मदाया नोर्ध्वं गत्वा वर्तते वृक्षमूले। खादन्मांसं स्वीयमेवानुखिद्य पितुर्मुक्त्यै
मासि वैशाखसंज्ञे ॥ ३६ ॥ प्रातः स्नात्वा पूजयित्वा च विष्णुं निर्व्याजान्मां तर्पयित्वा तिलैश्च ।
देयं चान्नं द्विजवर्याय मह्यं मुक्तो योनेर्यामि विष्णोः पदं च ॥३७॥ इत्थं चोक्तं त्वत्पुरस्ताद्वदेति

हे बाबु ! वैशाखनामको महीनामा लोभले उस बेला भिक्षा मात्र पनि अन्न दान गरिन । अहिले म सोच्छु यसै कारणले मैले
पिशाचयोनि पाएको हुँ, हे बाबु ! अर्को कुनै कारण छैन, यो मैले साँचो भनेको हुँ ॥३४॥ यस बेला मेरो घरमा अतिप्रसिद्ध
'श्रुतदेव' नामको छोरो छ, मेरो पुत्रलाई मेरो हालत सबै बताइदिए कि तिम्रो बाबु वैशाखमा अन्न दान नगरेका हुनाले
पिशाच भएका छन् ॥३५॥ र यो पनि सुनाइदिए–तिम्रा पिता नर्मदाको तीरमा देखिएका थिए उनी स्वर्ग नगएर उहाँ
रूखको फेदमा बसी दुःखी भएर आफ्नै मासु खाँदै रहेका छन्, त्यस कारण बाबुको मुक्तिका लागि वैशाख नामको महीनामा
॥३६॥ बिहानै न्वाहेर, विष्णुको पूजा गरेर नठगीकन तिलले मलाई तर्पण गरेर, श्रेष्ठ ब्राह्मणलाई अन्नदान दिई मलाई यो
पिशाच योनिबाट मुक्त गरोस् । जसले म विष्णुको परमपद पाऊँ ॥३७॥ तिम्रो सामने मैले यसरी भनेको छु, उसलाई यो
— [illegible] तेरो सबैतिरबाट कल्याण र मंगल हुनेछ, यसमा कुनै शंका छैन । यस्तो

दया चैषा मत्कृते नात्रशङ्का। क्षेमं भूयात्सर्वतो मङ्गलं ते श्रुत्वा चाहं भाषितं मे पितुश्च॥३८॥ दुःखात्
कायं दण्डवत्पातयित्वा भृशार्तोऽहं पादयोर्भूरिकालम् । निन्दन्निन्दन् भूरि मां वाष्पनेत्रः पुत्रोऽहंते
तातदैवागतोऽहम्॥३९॥कर्मभ्रष्टो भूसुराणां विनिन्द्यो ज्ञात्वा धर्मान्सकलान्मासि चास्मिन् । उद्दिश्य
त्वां लोभते विप्रवर्ये दत्तं नान्नं मासवैशाखमासे ॥४०॥ नाभूद्यस्मात् क्लेशमोक्षः पितृणां सोऽहं
पितृघ्नश्चामहाऽतीव पापी । कर्मभ्रष्टः सत्सभायां विनिन्द्यः सर्वैः पुत्रः पुत्रतामेति कृत्वा ॥४१॥
काल्यान्धर्मान्पितृहेतोर्महात्मा नरकादस्मादुद्धरेद्यस्य नाम । पुम् इत्याहुः पूयशोणादिभाजं श्रुत्वा
वाचं चात्मनेनाञ्जसोक्ताम् ॥ ४२ ॥ पुत्रं प्राह प्रीतिहृष्टान्तरात्मा यात्रां कृत्वा शीघ्रमागत्यगेहम् ।

प्रकारको मेरा पिताको वचन सुनेर म ॥३८॥ दुःखले आफ्नू शरीरलाई धेरै बेरसम्म उनका पाउमा दण्डवत् गरी पसारिएर अत्यन्त दुःखी भएको म आफूलाई धेरै धेरै निन्दा गर्दै आँखाभरि आँसु डबडबाएको भएर भने–'हे पिताजी ! दैवसंयोगले आइपुगेको म नै तिम्रो छोरो हुँ ॥३९॥ ब्राह्मणहरूमा कर्मले भ्रष्ट भएर निन्दनीय भएको मैले यस महीनामा गर्नुपर्ने सारा धर्मलाई जानेर पनि तपाईंको उद्देश्य गरेर श्रेष्ठ ब्राह्मणमा वैशाखमा अन्नदान गरिन ॥४०॥ जसले गर्दा पितृहरूको दुःख नाश भएन, त्यसकारण त्यस्तो अदाता बाबुमारा, आत्ममारा, अत्यन्त पापी छु म। कर्मले भ्रष्ट भएको मनुष्य सज्जनहरूको सभामा सबैले निन्दनीय हुन्छ। उही पुत्र पुत्रतामा प्राप्त हुन्छ ॥४१॥ जो उदार पुत्र पितृको कल्याणको लागि सबै प्रकारको धर्म गरोस्। पीपरगतले भरिएको 'पु' नाम गरिएको त्यस नरकबाट उद्धार गर्नाले नै छोराको नाम 'पुत्र' कहिया। छोराले एकाएक भनेको यस्तो कुरो सुनेर ॥४२॥ प्रेमले भित्रैदेखि खुशी भएको उस प्रेतले छोरालाई भन्यो—



प्राप्ते मासे मेषसंस्थे च भानौ स्नानं कृत्वा विधिवत्तर्पयित्वा ॥४३॥ निवेद्यान्नं विष्णवे महाभङ्ग दानं
देहि द्विजवर्ये महात्मन् । तस्मान्मुक्तिर्भविता सान्वयस्य तस्माच्छीघ्रं गच्छगेहं सुखेन । पित्रादिष्टः
कृतयात्रः स्वगेहं प्राप्याकरवे माधवं चान्नदानम् ॥४४॥ तस्मान्मुक्तो मत्पिता मां समेत्य भूयोभूयः
कुर्वति क्ष्मापते माम् । गतो लोकं श्रीपतेः दुर्विभाव्य समादिश्य याममगात्पश्यतो मे॥४५॥तस्मान्मासे
माधवे चान्नदानं प्रपादानंसर्वशास्त्रेषुशस्तम्।तुभ्यं प्रोक्तं धर्मसारं सुधर्म्यं किमन्यत्तेश्रोतुमिच्छावदस्व ॥
इति श्रीस्कन्दपुराणे वैशाखमहात्म्ये नारदाम्बरीषसंवादे पिशाचमोक्षप्राप्तिर्नाम सप्तमोऽध्यायः ॥७॥

गंगायात्रा गरिसकेर चाँडै नै घरमा आएर मेषमा सूर्य रहेको वैशाख महीना आएपछि स्नान गरेर तथा विधिपूर्वक तर्पण गरेर ॥४३॥ विष्णुलाई अन्न अर्पण गरेर हे महात्मन् पुत्र ! मेरो कल्याणको लागि श्रेष्ठ ब्राह्मणलाई दान देऊ, जसको प्रभावले कुलसहित मेरो मुक्ति हाला, त्यसकारण चाँडै नै सुखपूर्वक घर जाऊ। यसरी बाबुले अह्राएको मैले यात्रा गरिसकेपछि आफ्नु घरमा पुगेर वैशाख महीनामा अन्न दान गरें ।॥४४॥ हे राजन ! त्यस अन्नदानको प्रतापले मुक्त भएका मेरा पिता मलाई अंगालो हाली बारम्बार मलाई आशीर्वाद दिँदै मैले हेर्दाहेर्दै भगवान् विष्णुको चिताइनसक्नु लोक स्वर्गमा गए॥४५॥ त्यसकारण वैशाख महीनामा अन्नदान गर्नु, पौशाला स्थापना गर्नु सबै शास्त्रमा प्रशंसा गरिएका छ। मैले तिमीलाई धर्मको साररूप असल धर्म सुनाएँ अब अरू तिमीलाई के सुन्ने इच्छा छ, भन ॥४६॥

श्री स्कन्द पुराण वैशाख माहात्म्यको नारद र अम्बरीष सम्वादमा पिशाच मोक्ष प्राप्ति नामको सातौं अध्याय सकियो ॥७॥

# अथ अष्टमोऽध्यायः

मैथिल उवाच—ब्रह्मन्निक्ष्वाकुतनयो जलादानाच्च चातकः । त्रिवारमभवत्पश्चान्मद्गृहे गृहगोधिका
॥१॥ कर्मानुगुणमेतद्धि युक्तं तस्याकृतात्मनः । सतामसेवनात्तस्य गृध्रत्वं सारमेयता ॥२॥ सत-
वारमिति प्रोक्तं तन्मे भाति च नोचितम् । सन्तो नदूषितास्तेन तथा नापकृता अपि ॥ ३ ॥
तस्मादसेवया तस्य फलाभावो भवेद्ध्रुवम् । नानर्थ करणाभावात् पापं हि परपीडनम् ॥ ४ ॥
अनिमित्तमिदं कस्मात्कुयोनित्वमवाप्तवान् । तदेतं संशयं छिन्धि शिष्यस्याथ प्रियस्य ते ॥ ५ ॥

मिथिलाका राजाले भने—हे ब्रह्मन् ! इक्ष्वाकुवंशका पुत्र जल दान नगर्नाले तीनपल्ट काकाकुल भएर जन्मे, पछि मेरो घरमा माउसुली भए ॥१॥ पाप गर्ने भएका त्यस्को यो कर्म अनुसारको फल पाउनु उचित नै हो । सज्जनहरूको सेवा नगर्दा उसले गिद्ध र कुकुर पनि हुनुपर्‍यो ॥२॥ तपाईले भन्नुभयो कि उसले गिद्ध र कुकुर सात-सातपल्ट हुनुपर्‍यो, त्यो मलाई उचित जस्तो लाग्दैन, उसले सन्तहरूलाई दोष दिएन अनि अपकार पनि गरेन॥३॥त्यसकारण उनको सेवा नगर्दैमा कुनै अनर्थ नगरेको हुनाले उसका दानको फलको अभाव निश्चयै नहुनुपर्ने ? किनकि पाप भनेको त अर्कालाई पिर्नु नै हुन्छ ॥४॥ कुनै पनि कारण नभैकन कसरी यो कुयोनि उनले पाए ? त्यसकारण अब तपाईका प्रिय शिष्यको यो संशय हटाइदिनुहोस् ॥५॥ यसरी राजाले विनयपूर्वक सोधिएका महायशस्वी श्रुतदेवले 'बेस, बेस' यस्तो भनेर कुरा भन्न लागे



इति राज्ञा सुसंपृष्टः श्रुतदेवो महायशाः । साधु साध्विति संभाष्य वचो व्याहर्तुमादधे ॥६॥ श्रुतदेव
उवाच—शृणु राजन् प्रवक्ष्यामि यत्पृष्टं तु त्वयाऽनघ । शिवायै च शिवेनोक्तं कैलासशिखरेऽमले
॥७॥ सृष्ट्वेमान् सकलाँल्लोकान् पश्चात्तेषामवस्थितिम् । आमुष्मिकीमैहिकीं च द्विविधां पर्य-
कल्पयत् । हेतुत्रयं च प्रत्येकमवस्थित्यै व्यधात् प्रभुः । जलसेवा चान्नसेवा सेवा चौषधस्य च
त्रय एते महाभाग ऐहिकस्थितिहेतवः । एवमामुष्मिके राजँस्त्रय एवेरिताः श्रुतौ ॥१०॥ साधु-
सेवा विष्णुसेवा सेवा धर्मपथस्य च । पुरा सम्पादिता ह्येते पारलोकस्य हेतवः ॥ ११ ॥ गृहे

॥६॥ श्रुतदेवजीले भन्नुभयो—'हे पुण्यात्मा राजन् ! जो तिमीले सोध्यौ त्यो म भन्छु, सुन—दिव्य कैलास शिखरमा शिवजीले पार्वतीलाई भने—॥७॥ प्रभुले यी सारा लोक सृष्टि गरिसकेर पछि तिनीहरूको लागि लौकिक र पारलौकिक दुइ किसिमको स्थिति बनाए ॥८॥ प्रभुले यी प्रत्येकको स्थितिका लागि तीनोटा हेतु जलसेवा, अन्नसेवा र औषधिसेवा राखे ॥९॥ हे महाभाग! यो तीने ओटा यस संसारका स्थिति कारण हुन् । यस्तै प्रकार हे राजन् ! वेदमा परलोकका लागि पनि तीन कारण बताइएका छन् ॥१०॥ साधुहरूको सेवा, विष्णुको सेवा र धर्मपथको सेवा । यी तीनै परलोकका हेतुहरू पहिलेदेखि नै निर्माण भएका हुन् ॥११॥ जसरी घरमा तुल्याइएको धन बाटामा सामलहुन्छ, त्यस्तै हे राजन् ! यस संसारका हेतुहरु ( कर्मरुपी सम्पत्तिहरु ) तुरुन्तै अर्जित धन दिने हुन्छन् ॥१२॥ हे राजन् ! साधुहरुको मनको

सम्पादित यद्वत् पाथेयं पद्धतौ यथा । ऐहिका हेतवो राजन् सद्यः सम्पादितार्थदाः ॥१२॥ किं

चेष्टमपि साधूनां मनसो यदि दुःसहम् । कुतश्चित्कारणाद्राजन् तच्चानर्थाय कल्पते ॥ १३॥

वै० ५७ अप्रियं किमुवक्तव्यं दुःखहेतुरिति स्फुटम् । अत्रैवोदाहरन्तीममितिहासं पुरातनम् ॥१४॥ पापघ्नं मा०

महदाश्चर्यं शृण्वतां रोमहर्षणम् । यज्ञदीक्षामुपगतः पुरा दक्षः प्रजापतिः ॥ १५ ॥ आह्वानार्थं अ० ८

भूतपतेरगमद्रजताचलम् । तं दृष्ट्वा नोत्थितः शम्भुस्तस्यैव हितकाम्यया ॥१६॥ सर्वामरगुरुश्चाहं

छन्दोगम्यः सनातनः ॥ भृत्या ह्येते वह्निहरश्चन्द्रेन्द्राद्याः सुरेश्वराः ॥ १७ ॥ स्वामी भृत्याय

कुनै इच्छा पनि यदि दुःसह भयो भने कुनै कारणले त्यो अनर्थ गर्ने हुन्छ ॥१३॥ अप्रिय कुरा दुःखको कारण हुन्छ भन्ने स्पष्ट छँदैछ त त्यस्तो किन बोल्नु ? यस विषयमा यो पुरानो उदाहरण दिन्छु ॥ १४ ॥ जो सुन्नेलाई रोमाञ्चकारी, पाप नाश गर्ने, अनि आश्चर्य पार्ने छ । प्राचीन कालमा यज्ञ-दीक्षाका लागि आएका दक्षप्रजापति ॥ १५ ॥ भूतपति महादेवजीलाई बोलाउन कैलाश पर्वतमा गए । दक्षकै हितको इच्छाले उनलाई देखेर शम्भु उठेनन् ॥ १६ ॥ म सबै देवताहरुको गुरु हुँ, वेदद्वारा जानिने सनातन हुँ । यी वह्नि खाने चन्द्र सूर्यादि देवताहरु मेरा भृत्य हुन् ॥ १७ ॥ शास्त्र जान्ने व्यक्तिहरुको यो मत छ कि मालिक नोकरका लागि; पति आफ्नी पत्नीका लागि नउठोस् , गुरु शिष्यका लागि

नोत्तिष्ठेत् स्वभार्यायै पतिस्तथा । गुरुः शिष्याय नोत्तिष्ठेदिति शास्त्रविदां मतम् ॥ १८ ॥

न सम्बन्धोगुरुत्वे चकारणं त्विति वै श्रुतिः । बलं ज्ञानं तपः शान्तिर्यत्र चैवाधिकं भवेत् ॥१९॥

वैशाख ५८ स गुरुस्त्वितरेषां वै नीचाश्चेयुर्ह्यभ्रेष्यताम् । उत्तिष्ठन्ति च स्वाम्याद्या भृत्यादीन्यदिचाग्रहात् ॥२०॥ मा०

आयुर्वित्तं यशस्तेषां सद्यो नश्यति सन्ततिः । तस्मादहं तु नोत्तिष्ठे प्रियोऽयं श्वसुरो मम ॥२१॥ अ० ८

इति तस्य हितान्वेषी नोच्चचालासनाद्विभुः। नोत्थितं तु मृडं दृष्ट्वा कुपितोऽभूत्प्रजापतिः ॥२२॥

अनिन्दद्बहुधा तं वै पुरतो गिरिजापतेः । अहो दर्पमहो दर्पं दरिद्रस्याऽकृतात्मन ॥२३॥

नउठोस् ॥१८॥ गुरुत्वको विषयमा सम्बन्ध कारण हुँदैन किनकि वेदको भनाई यस्तो छ कि बल, ज्ञान, तप र शान्ति जसमा बढ्ता हुन्छ ॥१९॥ त्यही गुरु (ठूलो) कहिन्छ, अन्य कहाइने व्यक्तिको बारेमा त यदि आग्रहले सेवकजनका लागि स्वामी आदरको निम्ति उठ्छन् भने ती नीचतामा प्राप्त हुन्छन् ॥२०॥ र ती नोकर आदिको आयु, धन, सन्तान तत्काल नाशिन्छ । त्यसैकारण यी मेरा प्रिय हुन् , यिनको स्वागतमा म उठ्तिन ॥२१॥ यस्ता प्रकार उनको हित चाहने ईश्वर महादेव आसनबाट उठेनन् । आफू ससुरो आउँदा नउठेका ज्वाईं शिवलाई देखेर प्रजापति रिसाए ॥२२॥ र शिवजीको साम्न्ने नै उनको धेरै-धेरै निन्दा गरे । वाह रे घमण्ड, कस्तो ठूलो अहङ्कार यस कृतघ्नी दरिद्रको ॥ २३॥ जसको धन बूढो गोरु छ, जसको शरीरमा छाला सिवाय केही छैन, यसैकारण खप्पर लिन्छ वा खोपडी र हाडमात्र भएको अस्थि-

यस्य वित्तं बहुवयो वृषश्रमविशेषितः । अत एव कङ्कालास्थिधरः पाखण्डगोचरः ॥२४॥
वृथाऽहङ्कारिणो देवं कुतो दास्यति मङ्गलम् । लोके कृत्तेणचर्माणि शुचीनीति विदो विदुः ॥२५॥
धत्ते दरिद्रः शीतातः पवित्रं च गजाजिनम् । वेश्म श्मशानं यस्य स्याद्भुजङ्ग किल भूषणम्
॥२६॥ न धीरता न च ज्ञातं वृकात्तस्मात्पलायितः । भूतप्रेतपिशाचादिदुर्जनैः संगतोऽनिशम्
॥२७॥ न कुलं श्रूयते क्वापि नासौ वै साधुसम्मतः । वृथा विश्रम्भितः पूर्वं नारदेन दुरात्मना
॥२८॥ येनाहं बोधितः प्रादां कन्यां चैतामुमां सतीम् ॥ पृथग्धर्मगता चैषा सुखं वसतु तद्गृहे



पिजर छ, दरिद्रोकै कारण आचार नियमरहित पाखण्डी छ ॥२०॥ ईश्वरले बेफ्वाँक यो घमंडीको कसरी मङ्गल गर्नुहोला ! संसारमा विद्वानहरु हात्ती, मृगको छालालाई पवित्र हुन्छ भन्दछन् ॥२५॥ यो दरिद्री जाडोले कठ्यांग्रिएर पवित्र हात्तीको छाला धारण गर्दछ । जसको घर श्मशान छ, सर्प गहना छ ॥२६॥ न यसमा धैर्य छ न ज्ञान, यसै कारण वृकासुरले यसलाई भगाइदिएको थियो । रात-दिन भूत-प्रेत-पिशाच आदि दुर्जनहरुको संगत छ ॥२७॥ न कहीं यसको वंशको चर्चा सुनिन्छ, न यो सज्जनहरुले प्रशंसा गरिएको छ । तो दुष्ट नारदले अघि यसको बेकार प्रशंसा गरे ॥२८॥ जसले सम्झाइएको मैले छोरी यो सती उमालाई दिएँ । यो बिचरी भिन्न धर्मकी भई, त्यसका घरमा सुखसित बसोस् ॥२९॥ यो



॥२९॥ नास्माभिःश्लाघनीयोऽसौ मत्सुतापि कथञ्चन ॥ यथा कुलालकलशश्चाण्डालस्य वशं गतः
॥३०॥ इति दक्षो विमूढात्मा ह्यनाहूय सतीं मृडम् ॥ बहुधा तं विनिर्भर्त्स्य तूष्णीमेव गृहं ययौ
॥३१॥ यत्रवाटं ततो गत्वा ऋत्विग्भिर्मुनिभिः सह ॥ ईजे यज्ञं विधानेन निन्दन्नेव महाप्रभुम्
॥३२॥ ब्रह्म-विष्णू विहायैव सर्वे देवा समागताः ॥ सिद्धचारणगन्धर्वा यक्षराक्षसकिन्नराः
॥३३॥ तदा देवी सती पुण्या स्त्रीचाञ्चल्यात् प्रलोभिता ॥ उत्सुका चोत्सवं द्रष्टुं बन्धूँस्तत्र
समागतान् ॥३४॥ निवार्यमाणा रुद्रेण तरला स्त्रीस्वभावतः ॥ प्रत्युक्तापि पुनश्चैप गन्तव्यमिति

दुष्ट महादेव हामीहरुले प्रशंसा गरिन लायक छैन, बिचरी मेरी छोरी पनि चाण्डालको हात परेको कुमालेको घडा झैं यसका हात परी त्यस्तै भई ॥३०॥ यस्ता प्रकारसंग मूढ हठी दक्षले शिव र सतीलाई नडाकीकन अनेक प्रकारले उनलाई निन्दा गरी चुपचाप घर गयो ॥३१॥ त्यसपछि यज्ञशालामा गएर महाप्रभुको निन्दा गर्दै ऋत्विक् (वैदिक) मुनिहरुका साथ यज्ञ विधिपूर्वक गऱ्यो ॥३२॥ त्यस यज्ञमा ब्रह्मा र विष्णुबाहेक सारा देवगण आए र सिद्ध, चारण, गन्धर्व, यक्ष, राक्षस, किन्नर पनि आए ॥३३॥ त्यसै बेला पुण्यात्मा सतीदेवी स्त्रीजातिको चञ्चलताले लोभिएर त्यो उत्सव र उपस्थित बन्धुहरुलाई हेर्न उत्सुक भइन् ॥३४॥ शिवजीद्वारा रोकिएकी पनि ती नारी स्वभावको चञ्चलताले फेरि-फेरि बारम्बार

निश्चिता ॥ ३५ ॥ स निन्दति सभामध्ये सदा मां वरवर्णिनि । तचासह्य च त्वं श्रुत्वा कायं सत्यं जहासि च ॥३६॥ असह्यमपि सोढव्यं ममानुग्रहमिच्छता । मया यथा कृतं देवि तथा त्वं नैववर्तते ॥३७॥ तस्मान्मागच्छशालां वै न शुभं तु भवेद्ध्रुवम् । इत्येवं बोधिता देवी चापल्यात्पुनरागमत् ॥३८॥ निश्चक्राम सती गेहादेकाकी पादचारिणी । तां दृष्ट्वा वृषभस्तूर्णं पृष्ठे देवीमुवाह सः ॥३९॥ कोटिशो भूतसङ्घाँश्च अनुजग्मुः सतीं तदा । यत्र वाटं तु सा गत्वा पत्नीशालां ययौ पुरः ॥ ४० ॥ तूष्णीभामन्ततीं दृष्ट्वा खेदात्तस्माद्विनिर्गता । पतिवाक्यं तु सस्मृत्य जगामोत्तर





सम्झाउँदा पनि 'जान्छु' नै भन्ने हठ गरिन् ॥३५॥ हे वरवर्णिनी ! सुन्दर गुणवाली त्यो सधैं सभाका बीच मलाई निन्दा गर्दछ। त्यो असह्य कुरो सुनेर तिमी निश्चयनै शरीर त्याग्नेछौ ॥३६॥ मेरो करुणा चाहने तिमीले सहि नसक्नु पनि सहनुपर्छ। हे देवि! मैले जस्तो गरें त्यस्तै तिमी रहनौ ॥३७॥ त्यसकारण यज्ञशालामा नजाऊ, निश्चय नै कल्याण हुनेछैन। यसरी भलीभाँति सम्झाइएकी पनि देवी मन थाम्न नसकेर गइछोडिन्॥३८॥ सती घरबाट एक्लै पैदल निस्किन् । त्यस्ती ती देवीलाई देखेर प्रसिद्ध वसाहाले तुरुन्तै आफ्नू पिठिउँमा बोक्यो ॥३९॥ तब कोटियौं भूत-समुदाय पनि सतीका पछिलागे । पहिले सती यज्ञशालामा गइन्-र अन्तःपुरमा गइन् ॥४०॥ दक्षका पूरा सन्तानहरू चुपचाप रहेको देखेर बड़ो खेद मान्दै सती देवी

वेदिकाम् ॥ ४१ ॥ पिया सभ्याश्च तां दृष्ट्वा स्थितास्तूष्णीं हताशिषः । सा रुद्राहुतिशून्यं तं पश्यन्ती पितुचेष्टितम् ॥ ४२ ॥ त्यक्त्वा रुद्रं च जुह्वन्तमुवाचाश्रुप्लुतेक्षणा । देव्युवाच—
महदुल्लङ्घनं पुंसां न प्रायः श्रेयसे भवेत् ॥ ४३ ॥ लोककर्ता लोकभर्ता सर्वेषां प्रभुरव्ययः ॥ एवं भूतस्य रुद्रस्य कथं नो दीयते हविः ॥ ४४ ॥ जातामेकस्य दुर्बुद्धिर्हरन्त्यन्ये समागताः ॥ न चेदृशा महात्मानः किमेषां विमुखो विधिः ॥ ४५ ॥ इत्येवं भाषमाणां तां वृषा देवो जहास ह ॥ श्मश्रूणां चालनं चक्रे भृगुर्हतशुभस्तथा ॥ ४६ ॥ भुजपादोरुकक्षाणां स्फालनं चक्रिरे परे ॥





त्यहाँबाट निस्किन् र पतिका कुरा सम्झँदै यज्ञमण्डपमा पुगिन् ॥४१॥ पिता दक्ष र सभासदहरू सबैले उनलाई देखेर आशीर्वाद नदिई चुपचाप रहे । ती देवी रुद्राहुति नहुउन्जेल बाबुको व्यवहार हेरिरहेकी थिइन्॥४२॥ रुद्रलाई छाडेर आहुति दिएको देखी आँसुले आँखा भरिएकी देवीले भनिन् । सतीले भनिन्—ठूलाको उल्लंघन गर्नु पुरुषहरूको निमित्त ज्यादाजसो कल्याणका लागि हुन्न ॥४३॥ लोक निर्माण गर्ने, लोकको पोषण गर्ने, साराका प्रभु, अविनाशी यसप्रकारका शिवजीलाई किन हवि दिइन्न! ॥४४॥ एउटाको दुर्बुद्धि भयो भने आउनेहरूले हटाउँछन् । के यहाँ यस्ता महात्माहरू छैनन् ? के यिनीहरूको भाग्य उल्टो छ ? ॥४५॥ यसरी यस्तो बोल्ने भएकी पार्वतीलाई देखेर वृषा यौता हाँस्न लागे । त्यस्तै अभागी भृगु पनि जुँधा मुसार्न लागे॥४६॥ अरूहरूले कुम उफार्ने,गोड़ा चलाने, तिघ्रा हल्लाउने, काखी बजाउने (खुचिम गर्ने) गरे । अभागीउनका

बहुधा निन्दनं चक्रे तत्पिता हतभाग्यवान् ॥४७॥ तच्छ्रुत्वा रुद्रभार्या सा कोपाकुलितमानसा ॥ प्रायश्चित्तं श्रुतेः कर्तुं देहं तत्याज्य सा सती ॥४८॥ होमाग्नौ वेदिकामध्ये सर्वेषामेव पश्यताम् ॥ हाहाकारो महानासीदुद्द्रुवः प्रमथा द्रुतम् ॥४९॥ आचख्युर्देवदेवाय वृत्तान्तमखिलं तदा ॥ तत् श्रुत्वा सहसोत्थाय रुद्रः कालान्तरोपमः ॥५०॥ जटामुत्पाठ्य हस्तेन भूतले तामताडयत् । ततोऽभवन्महाकायो वीरभद्रो महाबलः ॥ ५१ ॥ सहस्रबाहुरभवत्कालान्तकसमप्रभः ॥ बद्धाञ्जलिपुटः स्थित्वा व्याजहार हरं तदा ॥५२॥ मत्सृष्टिस्तु यदर्थं ते तदर्थं तां नियोजय । इत्युक्तः प्राह तं क्रुद्धो धूर्जटिस्तत्पुरःस्थितम् ॥५४॥ हन त्वं निन्दकं दक्षं यदर्थं मत्पिता मृता । भूतसङ्घाँस्तु गच्छन्तु सहे·

पिताले चाहिं निन्दा गरे ॥४७॥ यस्तो सुनेर क्रोधले आकुल भएकी शिव की भार्या सतीले त्यस्तो दुर्वाच्य सुनेको प्रायश्चित गर्नका लागि वेदीको बीचमा होमको आगोमा शरीर त्यागिन् । त्यहाँ ठूलो हाहाकार भयो, शिवका गण तुरुन्तै दौडे॥४८-४९॥ र महादेवलाई सारा वृत्तान्त सुनाए । त्यो सुनेर यमराजतुल्य रूप धारेका महादेवले उठेर ॥५०॥ हातले आफ्नू याँटा जटा उखेलेर भूईंमा पच्छारे । तब त्यसबाट ठूलो शरीर भएको, बलियो वीरभद्र उत्पन्न भयो ॥५१॥ त्यो हज्जार बाहुवाला, यमराज तुल्य उसले दुवै अँजुलि जोरेर भन्यो ॥५२॥ जेका लागि मलाई सृष्टि गर्नुभयो, तपाईंको त्यो काम अह्राउनुहोस् । यसरी बिन्ती चढ़ाइएका क्रुद्ध महादेवले अगाडि उभिएको उसलाई भने ॥५३॥ त्यो निन्दकदक्षलाई मार। अत्यन्त बलिया भूतका समुदाय पनि जाउन् ॥५४॥ शिवले यस्तो अऱ्हाइएका ती सारा तुरुन्तै दक्षका सभामा गए, अनि



तेन महाबलाः ॥५४॥ इत्यादिष्टा भगवता ययुर्दक्षसभां द्रुतम् ॥ जघ्नुः सर्वान्महावीरान् देवासुरनरादिकान् ॥ ५५ ॥ पूष्णश्च हसतो दन्तान्भृगोश्च बभञ्ज ह । श्मश्रूण्युत्पाटयाञ्चक्रे भृगोस्तस्य दुरात्मनः ॥५६॥ यद्यदास्फालितं पूर्वं तत्तच्छिच्छेद वीर्यवान् । ततो दक्षशिरो हर्तुं बहूद्योग चकार सः॥५७॥ मुनिमन्त्रप्रगुप्त तु नैव कृन्तति तद्बलात् । हरोज्ञात्वा तु चिच्छेद स्वयमेत्यदुरात्मनः॥५८॥ एवं मखगतान् हत्वा सानुगः स्वालयं ययौ ॥ हतावशिष्टाः केचित्तु शरणं ब्रह्माणं ययुः ॥५९॥ तैरन्वितो ययौ ब्रह्मा कैलाशं तु शिवालयम् ॥ ततो रुद्रं शान्तयित्वा वचोभिर्विविधैरपि ॥६०॥

ठूला-ठूला वीर योद्धा दैत्यहरूलाई मारे ॥५५॥ हाँस्ने त्यो पूषाको दाँत उखेले। भृगुको जुंगा दाही उखेले ॥५६॥ पहिले जजसले जे-जे हल्लाएका थिए; बलिया उनले ती-ती उखाड़े । त्यसका बाद दक्षको शिर काट्न उनी धेरै उद्योग गर्न लागे ॥ ५७ ॥ मुनिका मन्त्रले गरिएको त्यो शिर वीरभद्रका बलले काट्दैन भन्ने जानेर शिवजी आफै आएर उस दुष्टको शिर काटे ॥ ५८ ॥ यस्ता प्रकार यज्ञमा गएकाहरूलाई मारेर अनुचरहरूका साथ आफ्ना आश्रममा गए । मारिनबाट बचेका कोही-कोही ब्रह्माको शरणमा गए ॥ ५९ ॥ तिनीहरू सहित ब्रह्माजी शिवको वासस्थान कैलासमा गए । तब नाना प्रकारका वचनले शिवजीलाई सान्त्वना दिए ॥६०॥ तब शिवजी पनि तिनीका साथ यज्ञशालामा गए । अनि दक्षका सभामा आएका सबैलाई उनले नै बचाइदिए॥६१॥ त्यसका बाद शिवजीले प्रसिद्धिका लागि दक्षलाई बोकाको

तेनैव सहितः प्रागाद्यज्ञवाटं महाप्रभुः ॥ तेनैवोज्जीवयामास सर्वान् दक्षसभागतान् ॥६१॥
ख्यात्यै प्रादादजमुखं दक्षस्य तु तदा शिवः ॥ अजश्मश्रूण्यदाच्छम्भुर्भृगवे तु महात्मने ॥६२॥ मा०
वैशाख पूष्णश्च दन्न प्रादात पिष्टाद च चकार तम् ॥ अवयवानां व्यतिकरं केषाश्चिदपि व शिवः ॥६३॥ अ ८
६५ शिवमापुस्ततः सर्वे ब्रह्मणा च शिवेन च ॥ पुनः प्रवर्तितो यज्ञो यथापूर्वं महात्मनः ॥६४॥
यज्ञान्ते सर्वदेवाश्च जग्मुस्ते स्वं स्वमालयम् ॥ नैष्ठिकं ब्रह्मचर्यं तु कृत्वा रुद्रो महत्तपः ॥६५॥
गङ्गातटे तपस्तेप पुन्नाग तरुमूलतः ॥ दक्षात्मजा सती देवी त्यक्तदेहा पतिव्रता ॥६६।
यज्ञे हिमाद्रेर्मेनायां बबुधे तस्य वेश्मनि ॥ एतस्मिन्नेव काले तु तारकाख्यो महासुरः ॥६७॥

मुख भएको बनाइदिए र महात्मा भृगुलाई बोकाका दाही दिए अर्थात् बोकेदाही बनाइदिए।६२। पूसालाई दाँतवाला बनाइदिएनन्, उनलाई सधैं ढिँडे खानुपर्ने बनाए। शिवजीले कतिलाई कतैको कतै, कतैको कतै पारी अङ्गहरू जोरिदिए ॥६३॥ तब ब्रह्मा तथा शिवजीद्वारा सबैको कल्याण भयो। फेरि पहिले जस्तै महात्माहरू यज्ञ गर्न थाले॥६४॥ यज्ञ सकिएपछि सबै देवताहरू आ-आफ्नू घर गए। ठूला प्रतापी महादेवजी भने अटल ब्रह्मचर्यमा रहेर॥७५॥ गंगाजीका किनारमा पुन्नाग वृक्षको फेदमा बसेर तपस्या गर्न लागे। उता देहत्याग गरेकी दक्षकी छोरी पतिव्रता सती देवी भने।६६। हिमाद्रिमा रहने मेनाको गर्भबाट जन्मिन् र उनैको घरमा बढिन्। यसै बेलामा नै तारकनामको ठूलो असुरले॥६७॥ ठूलो तपस्याले परमेष्ठी ब्रह्माजी-

सुतीव्रतपसाऽऽराध्य ब्रह्माणं परमेष्ठिनम् ॥ अवध्यत्वं वरं वव्रे देवासुरनरोरगैः ॥६८॥
आयुधैरस्त्रसङ्घैश्च सर्वैरेव महाबलः ॥ रुद्रपुत्रं विना दैत्यो ह्यवध्यः सकलैरपि ॥६९॥
वैशाख इति तस्मै वरं प्रादाद् ब्रह्मा लोकपितामहः। अस्त्राकत्वादपुत्रत्वाद् रुद्रस्येति तथास्त्विति ॥७०॥ मा०
६६ वरं गृहीत्वा स्वगृहं प्राप्य लोकान् बबाध ह ॥ दासादेवा मार्जनादौ दास्यो देव्यश्च तद्गृहे ॥७१॥ अ० ८
ततस्तत् पीडिता देवा ब्रह्माणं शरणं ययुः ॥ तैः पीडां वर्णितांश्रुत्वा वेधाःप्राह सुरानिदम् ॥७२॥
वरप्रदानकालेऽहं रुद्रपुत्रं विना सुराः ॥ नान्यैर्वध्य इति प्रादां वरं तस्मै दुरात्मने ॥७३॥

को आराधना गरी देवता दैत्य मनुष्य सर्प; सारा र शस्त्रहरूबाट त्यो महाबली दैत्यले नमर्ने वर माँग्यो र "शिवजीको छोरोबिना सकलवस्तुबाट पनि अवध्यहोलास्" भन्ने॥६८-६९॥ यस्तो वर लोकमा पितामह ब्रह्माजीले उसलाई दिए। शिवका स्त्री पुत्र नहुनाले उसले पनि 'ठीकै छ, त्यै सही' भन्ने मान्यो ॥७०॥ यस्तो अवध्य वर दिएर अनि आफ्नू घर गएर उसले दुनियालाई दुःखदिनलाग्यो। सारा देवतालाई नोकर बनायो, देवीहरूलाई उसका घरमा कुचा लाउने नोकर्नी गरायो ॥७१॥ तब त्यसले सताइका देवताहरू ब्रह्माजीको शरणमा गए। तिनीहरूले वर्णन गरिएको पीडा सुनेर ब्रह्माजीले देवताहरूलाई यो कुरो भने॥७२। हे देवताहरूहो ! वर दिंदाखेरि मैले रुद्रको छोरो-बिना अरूबाट नमरेस्' भन्ने वर उस दुष्टलाई दिएको थिएँ ॥७३॥ पहिले दक्षको यज्ञमा शरीर त्यागेकी सती रुद्रपत्नी हिमालयकी छोरी भएर जन्मेकी छन्, उसलाई

 

पुरा सती रुद्रपत्नी सत्रे त्यक्तकलेवरा ॥ जाता हिमवतः पुत्री पार्वतीति च यां विदुः ॥७४॥
रुद्रो हिमवतः पृष्ठे तपश्चरति दुश्चरम् ॥ योजयध्वं च पार्वत्या रुद्रं लोकेश्वरं प्रभुम् ॥७५॥
तस्माज्जातः सुतः शत्रुं युष्माकं तु हनिष्यति । इति ब्रह्मसमादिष्टा इन्द्राद्याः स्वगृहं गताः ॥७६॥
पुनर्देवेन्द्रसदने सङ्गतैरमरेश्वरैः ॥ धिषणेनाभिसंमन्त्र्य देवेन्द्रः पाकशासनः ॥७७॥ सस्मार च
स कार्यार्थं नारदं स्मरमेव च । तत्रागतौ ततस्तौ तु बलभिद्वाक्यमब्रवीत् ॥७८॥ हिमवन्तं भवान्
गत्वा वचसा तं प्रबोधन ॥ पुत्री तवाऽऽसीत् प्राक् दाक्षी हरपत्नी महागिरे ॥७९॥ तपश्चरति ते शृङ्गे
वियुक्ता दक्षकन्यया । मृडस्तस्य सपर्यायै विनियोजय तत प्रियाम् ॥८०॥ तस्यैव पत्नी भविता स

अहिले पार्वती भन्छन् ॥७४॥ शिवजी पनि हिमालयको टाकुरामा कठिन तपस्या गरिरहेका, अब लोकेश्वर प्रभु शिवजीको पार्वतीका साथ बिहा गराउनुपर्छ ॥७५॥ तिनबाट पैदा भएको छोरोले तिमीहरूको शत्रुलाई मार्नेछ भनी ब्रह्माजीले दुझाइएका इन्द्रादि दौताहरू आफाफ्ना घर गए॥७६॥ फेरि इन्द्रका सभामा जम्मा भएका दौताका अधिपतिहरूले बृहस्पतिसित सल्लाह गरेर पाकशासन इन्द्रले ॥७७॥ आफ्नो कामका लागि नारद र कामदेवलाई सँझे। तब त्यहाँ आएका ती दुइ जना लाई इन्द्रले यो कुरो भने ॥७८॥ 'हे नारदजी! तपाईं हिमालय भाठौँ गएर उनलाई मीठो बोलीले सम्झाउनोस् कि हे हिमाचल! तिम्री छोरी पहिले दक्षकी पुत्री महादेवकी पत्नी थिइन् ॥७९॥ दक्ष कन्याका साथ बिछोड भएपछि तिम्रो टाकुरामा शिवजी तपस्या गरिरहेका छन् उनको सेवाको लागि उनकी प्रिया उनैलाई सुम्प ॥८०॥ उनैकी पिनी हुनेछन्, उनै

 

एव भविता पतिः । इत्यादिष्टो मघोना च नारदो ह्येत्य तं गिरिम् ॥८१॥ तथैव कारयामास देवे-
न्द्रेणोदितं यथा ॥ पश्चात् कामं समाहूय मघवानिदमाह च ॥८२॥ देवानां च हितार्थाय तथा
मृडहिताय च । वसन्तेन समायुक्तो गत्वा रुद्रतपोवनम् ॥८३॥ गुणान्विजृम्भयित्वा तु वासन्तान्
हृच्छयावहान् ॥ यदा सन्निहिता देवी पार्वती तु मृडस्य च ॥८४॥ तदा प्रयुज्य त्वं बाणान् मोह
यस्य महाप्रभुम् ॥ तयोस्तु सङ्गमे जाते कार्यं नोऽद्धा भविष्यति ॥ ८५ ॥ इत्यादिष्टः स्मरस्तूर्णं
प्रतस्थे बाढमित्यथ ॥ सवसन्तः सरतिकः सानुगस्तद्वनं ययौ ॥८६॥ अकाले तु वसन्ते तु जृम्भ-
यित्वा स्वशक्तितः ॥ तद्वने सर्वतोरम्ये मन्दानिलनिषेविते ॥८७॥ कदाचिद्देवदेवोऽपि पार्वत्याश्च

पति हुनेछन्।' इन्द्रले यसरी अह्राइएका नारदजी ती हिमालय भाठौँ पुगेर ॥८१॥ देवेन्द्रले जस्तो भनेका थिए त्यस्तै गरे। त्यसपछि कामदेवलाई बोलाएर इन्द्रले यो कुरो भने ॥८२॥ देवताहरूको कल्याण को लागि र शिवजीको पनि हित लागि वसन्तका साथ महादेवको तपोवनमा गएर॥८३॥ उहाँ इच्छानुरूपका वसन्त गुणहरूलाई फैलाएर जब देवी पार्वती महादेवका नजीक हुन्छिन् ॥८४॥ तब तिमीले वाण चलाएर महाप्रभुलाई मोहित पार। ती दुइको सङ्गम भएपछि हामाहरूको काम अवश्य हुनेछ ॥८५॥ यसरी इन्द्रले अह्राइएको कामदेवले 'अच्छा' भनेर तुरुन्तै प्रस्थान गर्‍यो र उ वसन्तले सहित भएर, रतिले सहित भएर र आफ्ना सेवकहरू सहित भएर वनमा पुग्यो ॥८६॥ र आफ्नु शक्तिले असमयमा नै वसन्त ऋतुलाई फैलाएर, चारैतिर मन्द हावा चलेको सुन्दर त्यस वनमा ॥८७॥ ध्यानमग्न महादेवको काखमा पार्वतीलाई बसाई, मानो

सपर्यया । प्रातःस्वाङ्कं समारोप्य किञ्चिद्व्याहर्तुमारभत् ॥८८॥ प्राणप्रियासङ्गमस्य कालोऽयमिति निश्चितः । पेशलं धनुरादाय स तस्थौ हरपृष्ठतः॥८९॥ कृत्वा यवनिकां वृक्षं बाणमेकं मुमोच ह ॥ द्वितीयमपि सन्धाय चक्रे मोक्तुं महोद्यमम् ॥९०॥ अथ क्षुब्धमना भूत्वा मृडश्चिन्तामवाप ह । न मे मनश्चलेत् कापि केन वा कश्मलीकृतम् ॥९१॥ इति चिन्ताकुलो वामे पार्श्वे कामं ददर्श ह॥ क्रुद्धोन्मील्य ललाटाक्षं स्वाङ्काद्देवीमपास्य च ॥ ९२ ॥ तस्याक्ष्णः समभूदग्निस्तीक्ष्णो लोकविभीषणः ॥ तेन दग्धोऽभवत्सद्यो मन्मथः सशरासनः ॥ ९३॥ कार्यसिद्धिमपश्यन्तो दुद्रुवुश्चामरा दिवम् । शङ्कमानाः स्वदाहं च वसन्तोरतिरेव च ॥ ९४ ॥ निमील्य लोचने भीता देवी दूरं प्रदुद्रुवे ॥

महादेवले पार्वतीको सेवाले खुशी भएर आफ्नू काखमा राखेर केही भन्नथाले किजस्तो पारी॥८८। प्राणप्रियाका साथ संगम गर्ने यही समयहो भन्ने यस्तो निश्चय गरेर उत्तम धनु लिएर महादेवको पछाडि उ उभियो॥८९॥ र रूखलाई आड़ बनाएर यौटा वाण छोड्यो । अर्को वाण धनुमा राखेर छोड्न ठूलो उद्योग गर्दै थियो ॥९०॥ कि यत्तिकैमा मोहित मनको भएर शिवजी चिन्ता गर्न लागे । मेरो मन तकहिल्यै पनि चंचल हुँदैन, अथवा कसैले मलिन पारिदियो॥९१॥ यस्तो चिन्ताले आकुल शिवजीले बायाँपट्टि कामलाई देखे । तब क्रुद्ध भएर निधारको तेस्रो आँखोलाई उघारेर, आफ्नू काखबाट देवीलाई पनि हटाएर हेरे त ॥९२॥ उनको आँखाबाट संसारैलाई भय पैदा गर्ने आज्वल्य आगो उत्पन्न भयो । उसै अग्निले धनुसहित कामदेव तुरुन्तै डढ्दो भयो ॥९३॥ कार्यसिद्धि नदेखेर दैवताहरू स्वर्गतिर भागे । वसन्त र रति आफू पनि डढ्छौं कि भनी



॥ सन्निधानं स्त्रियो हर्तुं मृडोऽप्यन्तरधीयत ॥ ९५ ॥ रुद्रस्येष्टं प्रकुर्वाणो देव्याश्च मनसा हितम् । लेभेऽनर्थमनिर्वृत्तं विप्रियं कुर्वतस्तु किम् ॥ ९६ ॥ तस्मादिक्ष्वाकुतनयः साधूनामप्रियः सदा । तस्मादात्महितां सेवां नाकरोन्मन्दधीःसताम् ॥९७॥ अनुभूतं महद्दुःखं तस्माद् दुर्योनिरेव च । तस्मात्कार्या तु साधूनां सेवाकार्यार्थसाधिनी ॥९८॥ रुद्रस्याप्रियकारित्वात्स्मरो भाविनि जन्मनि ॥ दुःखं तु बहुलं लेभे जन्मकाले महाप्रभोः ॥ ९९ ॥ इतिहासमिमं पुण्यं ये शृण्वन्ति दिवानिशम् ॥ जन्ममृत्युजरादिभ्यो मुच्यन्ते नात्र संशयः ॥१००॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे कामदहनं नाम अष्टमोऽध्यायः ॥८॥

शंका गर्न लागे॥९४॥ डराएकी देवी पनि आँखा चिम्लेर टाढा भागिन् । आइमाईको समीपता हटाउन शिवजी पनि अन्तर्धान भए ॥९५॥ शिवजीको इष्ट र देवीका मनको हित गर्नेहरूले पनि बेकारको अनर्थ नै पाए भने अप्रिय गर्नेहरूको त के कुरा गर्ने ? ॥९६॥ त्यसकारण इक्ष्वाकुकुलको छोरो त सधैं साधुहरूको अप्रिय थियो । त्यसैले आफ्नू हित गर्ने सज्जनहरूको सेवा उस मूर्खले गरेन ॥९७॥ त्यसै कारण उसले ठूलो-ठूलो दुःखको अनुभव गर्नुपर्‍यो र खराब योनिहरूमा जन्मनुपर्‍यो । त्यसकारण सबै मतलब सिद्ध गर्ने साधुहरूको सेवा अवश्यै गर्नुपर्छ ॥९८॥ महाप्रभु शिवजीको अप्रिय गरेको हुँदा कामदेवले पछि हुने जन्ममा र जन्मकालमा पनि धेर धेरै दुःख पायो ॥९९॥ यो पुण्यदायी इतिहास जो रात-दिन सुन्दछन्, ती जन्म-मृत्यु जरा (बुढ्याइँ) इत्यादि छुट्तछन्, यसमा कुनै शंका छैन ॥१००॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यमा नारद र अम्बरीष संवादमा स्नान-प्रशंसा नाम भै पढिआ आठवाँ अध्याय सकियो ॥८॥

# अथ नवमोऽध्यायः

मैथिल उवाच—अथ दग्धस्य कामस्य कस्माज्जन्माभवद्विभो । किं दुःखमभवत्तस्मिन् कर्मणामिह लङ्घनात् ॥ १ ॥ एतदाचक्ष्व मे ब्रह्मन् श्रोतुं कौतूहलं हि मे । श्रुतदेव उवाच—कुमारजन्म वक्ष्यामि श्रवणात्पापनाशनम् ॥ २ ॥ यशस्यं पुत्रदं धर्म्यं सर्वरोगविनाशनम् । शम्भुना तु हते कामे तत्पत्नीं रतिसञ्ज्ञका ॥ ३ ॥ मुमोह पुरतो दृष्ट्वा पतिं भस्मावशेषितम् । जातसंज्ञा मुहूर्तेन विललाप ह चित्रधा ॥४॥ यद्विलापाद्वनं सर्वं समदुःखमभूत्तदा । तच्चिन्ताग्नौ स्वकायं तु त्यक्तकामा च माधवम् ॥५॥ पत्युः सखायं सस्मार कर्तुं तत्कालिकीं क्रियाम् । स चागतश्चितिं कर्तुं

मिथिलाका महाराजले भने—हे प्रभु ! त्यसरी डढेका कामदेवको कसबाट जन्म भयो ? त्यस जन्ममा यहाँ गरिएका कर्मका उल्लंघनले के दुःख भयो॥१॥ हे ब्रह्मन्, मलाई यो कुरा भन्नुहोस्, यो सुन्ने मलाई धेरै उत्कण्ठा छ। श्रुतदेवले भन्नुभयो सुन्नाले मात्रै पनि पाप नाश हुने कुमारको जन्म सुनाउँछु॥२॥ जो सुन्नाले यश मिल्छ, सन्तान मिल्छ,धर्म हुन्छ र सारा रोग पनि नाश हुन्छ । शिवजीले कामदेवलाई मारे पछि रति नामकी उसकी पत्नी॥३॥ आफ्नू अगाडि पतिलाई खरानी हुनमात्र बाँकी रहेको देखेर मूर्च्छा परी र दुइ घडीमा होश आएपछि किसिम-किसिमका अलौना-बिलौना गर्न थाली॥४॥ तब त्यसका विलापले सारा वन नै उ-जस्तै दुःखी भयो। अब कामदेवको चिताको आगोमा आफ्नू शरीर पनि त्याग्ने इच्छा गर्ने भएको



वीरपत्न्या महाभुजः ॥ ६ ॥ स तु त्रस्तः सखीं दृष्ट्वा क्षणं मूर्च्छापरोऽभवत् । रतिं तु सान्त्वयामास सान्त्वैर्बहुविधैरपि ॥ ७ ॥ पुत्रतुल्योऽस्मि ते भद्रे स्थितं मयि च नार्हसि । कायं त्यक्तुं धर्महेतुमित्याद्यैर्बहुधाऽपि सा ॥ ८ ॥ नैव स्थातुं मनश्चक्रे तेन संस्तम्भिता रतिः । दृष्ट्वा दार्ढ्यं वसन्तोऽपि चितिं चक्रे सरित्तटे ॥९॥ साऽवगाह्य धुनद्यां च कृत्वा कार्याणि सर्वशः । सन्नियम्येन्द्रियग्रामं निवेश्यात्मनि वै मनः ॥१०॥ चितिमारोढुमारेभे ततोजाताऽशरीरवाक् । मा प्रवेशय कल्याणि वह्निं पतिपरायणा ॥ ११ ॥ भविष्यति च ते पत्युर्हराद्विष्णोश्च यादवात् । जन्मद्वयं

आफ्ना पतिको मित्र वसन्तलाईतात्कालिक क्रिया गर्नलाई संझी । त्यो महावीर पनि वीरपत्नीका साथ चिता बनाउन आइपुग्यो ॥५-६॥ डराएको उनले पनि सखीको हालत देखेर एकछिन त बेहोश जस्तै भयो र अनेक प्रकारका सन्त्वनाहरूले रतिलाई सम्झाउन थाल्यो ॥७॥ हे भद्रे ! म तिम्रो पुत्र तुल्य हुँ, म छँदाछँदै धर्मका लागि शरीर त्याग्नु उचित छैन भन्ने इत्यादि कुराले अनेक प्रकारले संझाइएकी पनि ॥८॥ धीरले आकुल भएकी उस रतिले मन गरिन। वसन्तले पनि उसको हठ देखेर नदीको किनारमा चिता बनायो॥९॥ रतिले पनि गंगाजीमा न्वाहेर चिताका सारा विधिहरू सकेर आफ्ना इन्द्रिय समूहलाई संयम गरेर,मनलाई स्थिर गरेर ॥१०॥ जब चितामा चढ्न थाली तब यस्तो आकाशवाणी भयो- हे पतिमा प्रेम राख्नेवाली कल्याणी ! आगोमा नपस॥११॥ महादेवबाट र यादव कुलमा जन्मेका विष्णुबाट क्रमैले तेरा पतिको दुइ जन्म

क्रमेणैव तत्र चोत्तरजन्मिनि ॥१२॥ भैष्म्यां कृष्णान्महाविष्णोः प्रद्युम्नाख्यो भविष्यति । वसिष्यसि त्वं च शापाद्ब्रह्मणः शम्बरालये ॥ १३ ॥ प्रद्युम्नाख्येन ते पत्या सङ्गतिश्च भविष्यति । इत्युक्त्वा विरराम्राथ वाणी चाकाशगोचरा ॥१४॥ श्रुत्वातां तु निवृत्ताऽभून्मरणे कृतनिश्चया । ततो देवाः समाजग्मुः स्वार्थे कामे हरे हरात् ॥ १५ ॥ रत्या दृष्टं प्रकुर्वाणा गुर्विन्द्राग्निपुरोगमाः । तां ते निवर्तयामासुर्वरेण्यां महतीं सतीम् ॥१६॥ अनङ्गोऽपि भवेत्साङ्गो मृत एवाक्षिगो भवेत् । इति तां विनिवर्त्याशु धर्मं चोपदिदेशिरे ॥१७। पूर्वकल्पे स्वयं राजा सुन्दराख्यो महाप्रभुः । त्वमेव

हुनेछ तीमध्ये पछिल्लो जन्ममा॥१२॥ महाविष्णुको कृष्णावतारबाट भीष्मकको छोरीमा 'प्रद्युम्न' नामको भएर जन्मनेछ । तँचाहिं ब्रह्माको श्रापले शम्बरको घरमा बसेकी हुनेछस् ॥१३॥ त्यहीं प्रद्युम्न कहिने पतिका साथ तेरो भेट हुनेछ । यति भनेर आकाशवाणी रोकियो ॥१४॥ यस्तो आकाशवाणी सुनेर मर्न तयार भएकी उनी रोकिइन् । तब महादेवबाट कामदेव मारिएपछि देवताहरू आफ्नू मतलबका लागि भेला भए ॥१५॥ कामलाई रतिले देखिने पार्ने भएका गुरु इन्द्र अग्नि अग्रसर हुने ती देवताहरूले ठूली सती ती स्तुत्य रतिलाई निर्धक हुने गराए ॥१६॥ शरीर नभए पनि शरीरवाला होस् मरेको भए पनि देखिने होस् । यस्तो वरले रतिलाई ढुक पारेर उस बेला धर्मको पनि उपदेश गरे ॥१७॥ पहिलेको कल्पमा यो कामदेव ठूलो प्रभुसत्ता भएको सुन्दर नामको राजा थियो । त्यस बेला पनि रज छ्यासमिस पार्नेवाली तिमी नै पत्नी थियौ



पत्नी तत्रापि रजःसङ्करकारिणी॥१८॥तेनेयं च दशाऽभूत्ते कुर्विदानीं च निष्कृतिम् । मन्दाकिन्यां तु वैशाखे प्रातःस्नानं सदा कुरु ॥ १९ ॥ मधुसूदनमभ्यर्च्य कथां दिव्यां तथा शृणु । अशून्य शयनं नाम व्रतमाचर भामिनि ॥२०॥ धर्मेणानेन ते भद्रे व्रतेनापि च माधवे । नूनं ते भविता पत्युरुपलब्धि न संशयः ॥२१॥ इति तस्यै वरं दत्वा देवा जग्मुर्यथागतम् । ततः कृच्छ्रान्निवृत्ता सा देवी कामावती तथा ॥ २२ ॥ गङ्गावाहनं चक्रे मेषसंस्थे दिवाकरे । अपशून्यशयनं नाम व्रत चापि महामना ॥२३॥ तेन पुण्यप्रभावेण सद्यः कामोऽक्षिगोचरः । अभूत्तस्या महाराज लोके

॥१८॥ त्यसै कारणले तिम्रो यो दशा भयो, अब अहिले उसैको प्रायश्चित्त गर । वैशाख महीनामा सधैं गंगाजीमा प्रातः स्नान गर ॥१९॥ रोजै मधुसूदन भगवान्लाई पूजा गरेर उनको दिव्य कथा सुन र हे भामिनी ! अशून्यशयन नामको व्रत गर ॥२०॥ हें भद्रे ! तिम्रो यो धर्मले र वैशाखमा गरिएको व्रतले पनि, अवश्य नै तिम्रा पतिको प्राप्ति हुनेछ,यसमा कुनै संशय छैन ॥२१॥ यस्तो उनलाई वर दिएर देउताहरू जसरी आएका थिए उसैगरी गए । तब अगाध पीरबाट छुटेकी उस कामवती देवीले, देउताहरूले भने जस्तै॥२२॥ मेषराशिमा सूर्य रहेको बेला गंगास्नान गरिन् । ठूलो मन भएकी उनले अशून्यशयन नामको व्रत पनि गरिन्॥२३॥ त्यस पुण्यका प्रभावले हे महाराज ! संसारमा कसैले रोक्न नसकिने पराक्रमी काम-

वैशाख ७५ | मा० अ० ५

चावार्यवीर्यवान् ॥२४॥ पूर्वकल्पे त्वयमपि राजा धर्मपरायणः । वैशाखोक्तान्महाधर्मान्न चक्रे तन वै स्मरः ॥२५॥ देहहानि प्रपेदेऽसौ पुत्रोऽपि परमात्मनः । वृथा नीते तु वैशाखे मेषसंस्थे दिवाकरे ॥२६॥ अवस्थेयं च देवानां मनुष्याणां तु का कथा । त्र्यम्बकेऽन्तर्हिते पश्चान्निराशा गिरिकन्यका ॥२७॥ तूष्णीं स्थितां मदा भ्रान्तां तां दृष्ट्वा हिमवान् गिरिः । चकितः स्वगृहं निन्ये दोर्भ्यां तां परिरभ्य च ॥२८॥ रूपौदार्यगुणान् दृष्ट्वा हरस्यैव महात्मनः । स एव मे पतिर्भूयादिति तन्निष्ठमानसा ॥ २९ ॥ गङ्गोपकूलमापेदे तपस्तप्तुं दृढव्रता । निवारितापि सा देवी पित्रा मात्रा स्वकैर्जनैः ॥३०॥ अर्चयन्ती महालिङ्गं निराहारा जटाधरा । दिव्यवर्षसहस्रान्ते प्रत्यक्षोऽभून्महे-

देव तुरुन्तै रतिले देखिने भयो ॥२४॥ पूर्वकल्पमा यो कामदेव पनि अत्यन्त धर्मात्मा राजा थियो । यसले वैशाखमा गर्न बताइएका ठूला धर्महरू गरेन, त्यसैले यस कामदेवले ॥२५॥ खास परमात्माको छोरो भएर पनि देहत्यागी हुनुपर्‍यो । मेषमा सूर्य रहेको वैशाख महीना बेकार बिताउँदा ॥२६॥ दैवताहरूको यस्तो हालत हुन्छ भने मनुष्यहरूको त के कुरा गर्नु ! महादेव अन्तर्धान भएपछि हिमालयकी छोरी निराश ॥२७॥ अन्यमनस्क भएर चुपचाप रहेकी पार्वतीलाई देखेर चकित भएका हिमालय पर्वतले दुवै हातले उनलाई समाएर आफ्नू घर लगे ॥२८॥ महात्मा शिवजीको रूप र उदार गुण देखेर 'उ नै मेरा पति होऊन्' भनी उनैमा एकचित्त भएर॥२९॥ तपस्या गर्नका लागि गंगाको किनारमा गइन् । बाबु-आमा र आफ्ना जनहरूले रोकिएकी पनि ती दृढ प्रतिज्ञावाली पार्वती॥३०॥ भोकै रहेर जटाधारी भएर शिवलिङ्गको पूजा गर्दैन ।

वैशाख ७६ | मा० अ० ६

श्वरः॥३१॥ भूत्वा वर्णी तु सायाह्ने पर्णशालामुखे विभुः । स्वनिष्ठमनसो दार्ढ्यं वाक्यैर्नानाविधैरपि ॥३२॥ ज्ञात्वाऽब्रवीद्वरं भद्रे वरयेति महाप्रभुः । सा वव्रे मे पतीं रुद्रस्त्वं भवेति मनोरमा ॥३३॥ स तथैव वरं दत्त्वा ऋषीन् सस्मार सप्त च । आजग्मुस्तेऽपि मुनयः स्थिताः प्राञ्जलयः पुरः ॥ ३४ ॥ ऋषीणां ज्ञापयामास कन्यां प्रष्टुं हिमालयम् । तथाऽऽदिष्टा भगवता कन्यार्थं हिमवद्गृहम् ॥ ३५ ॥ प्रापुर्विहायसा सर्वे द्योतयन्तो दिशो दश । प्रत्युज्जगाम स गिरिः सर्वैतान् ब्रह्मवित्तमान् ॥ ३६ ॥ सम्पूज्य विधिवत्सर्वान् सुखासीनानपृच्छत । धन्योऽस्मि कृतकृत्योऽस्मि

तब हजार दिव्यवर्ष बितेपछि महेश्वर महादेव प्रत्यक्ष भए ॥३१॥ साँझमा पार्वतीका छाप्राको ढोकामा महादेव ब्रह्मचारीको रूप लिएर आए र अनेक किसिमका कुराले आफूमा गडेको उनको मनको दृढतालाई ॥३२॥ जानेर महाप्रभु महादेवले— 'हे भद्रे ! वर माँग' यस्तो भने । तब ती सुन्दरीले–'मेरा पति तपाईं महादेव हुनुहोस्' यस्तो भनिन् ॥३३॥ महादेवले त्यस्तै वर दिएर सप्त ऋषिलाई सम्झे । ती मुनिहरू पनि आइपुगे र अगाडि हात जोडेर खडा रहे ॥३४॥ महादेवले कन्याका बारेमा हिमालयलाई सोध्नका लागि ऋषिहरूलाई अह्राए। त्यसरी भगवान्ले अह्राइएकाहरू कन्या माग्नका लागि हिमालयका घरमा॥३५॥ आकाशमार्गले दशै दिशा प्रकाशमान पार्दै पुगे । हिमालय पर्वतले पनि ती साते ब्रह्मज्ञानीहरूलाई घरसम्म आएर साथैमा लिई गए ॥३६॥ यथायोग्य आसनमा विराजमान गराई सुखपूर्वक बसेका सबै ऋषिहरूलाई विधिपूर्वक पूजा

परिपाकमुपागतम् ॥४३॥ तेषां तद्वचनं श्रुत्वा संहृष्टात्मा महागिरिः । व्याजहार पुनर्वाक्यं पुत्री
वल्कलधारिणी ॥४४॥ गङ्गातीरे निराहारा तपस्तपति दुश्चरम् । काङ्क्षमाणा पतिं शम्भुं तस्या
श्लो० इष्टमिदं त्विति ॥ ४५ ॥ दत्ता कन्या मया तस्मै त्र्यम्बकाय महात्मने । शीघ्रं गत्वा भवन्तस्तु मा०
४८ यत्र शम्भुर्महाप्रभुः ॥ ४६ ॥ श्रोत्या हिमवता दत्तां गृहाणेति निवेद्य च । भवन्त एव कुर्वन्ति अ० ९
चैतद्वैवाहिकीं क्रियाम् ॥४७॥ इत्युक्तास्ते हिमवता तमामन्त्र्य शिवं ययुः । लक्ष्म्याद्या य.पितः
सर्वा विष्ण्वाद्या देवता अपि ॥४८॥ षण्मातरोऽथ मुनयो द्रष्टुं जग्मुर्महोत्सवम् । शिवः सर्वामर-

सिवाय अर्को हुनेछैन । कल्याण चाहने तपाईंले ती देवी शम्भुलाई नै दिइनुपर्छ ॥४२॥ हजारौं पूर्व जन्महरूमा तपाईंले पुण्य गर्नुभएको थियो । यस बेला तपाईंका भाग्यले ती पुण्य फुली-फली पाकिसकेका छन् ॥४३॥ तिनीहरूको त्यो कुरो सुनेर अति प्रसन्न चित्त भएका हिमालयले फेरि कुरो भने–मेरी छोरी रूखका बोक्रा लगाएर॥४४॥ भोकै रहेर गंगाजीको तीरमा कठिन तपस्या गरिरहेकी छ। शम्भुलाई पति चाहनेवाली उसका लागि यो असल भयो ॥४५॥ मैले महात्मा ती शिवजीलाई कन्या दिएँ। जहाँ महाप्रभु शम्भु हुनुहुन्छ, तपाईंहरूउहाँ चाँडै पुगेर॥४६॥'हिमालयले श्रद्धाले दिएकी कन्यालाई ग्रहण गर्नुहोस्' यस्तो निवेदन गरेर तपाईंहरु नै यो विवाह सम्बन्धी क्रिया पनि गरिदिनुहोस् ॥४७॥ हिमालयद्वारा यस्तो भनिएका ती ऋषिहरु उनसित सल्लाह गरेर शिव भाकहाँ पुगे । लक्ष्मी आदि सबै देवीहरु, विष्णु आदि सकल देवताहरु ॥४८॥ छः वटै मातृकाहरु, धेरै मुनिहरु त्यो ठूलो उत्सव हेर्न गए। शिवजी सारा देवताहरु, मुनिहरु अनि मातृकाहरूले

गणैर्मुनिभिर्मातृभिस्तथा ॥४९॥ आन्वितो वृषभारूढः प्रमथैः कोटिभिर्वृतः । भेरीशङ्खमृदङ्गाद्यैः
काहलीपटहादिभिः ॥ ५० ॥ ब्रह्मघोषैर्वन्दिभिश्च प्राविशद्धिमवत्पुरीम् । सुमुहूर्ते शुभे लग्ने शुभ-
श्लो० ग्रहनिरीक्षिते ॥ ५१ ॥ विवाहमकरोच्छैलः प्रहृष्टेनात्मनात्मना । महोत्सवस्तदा चासीत्त्रिलोक्यां मा०
४९ प्राणिनां नृप ॥५२॥ महोत्सवे निवृत्ते तु शङ्करो लोकशङ्करः । रेमे स्वच्छन्दया देव्या लोकधर्मा- अ. ९
नुव्रतः ॥५३॥ ऋद्धिमद्भिर्भवद्गेहे देवेन्द्रभवनोपमे । स शर्वर्यां नदीतीरे वनराजिषु शङ्करः
॥५४॥ मत्तालिद्विजसन्नादमयूरवरमण्डिते । दिव्यवर्षसहस्राणि रेमे स्वच्छन्दतो विभुः ॥ ५५ ॥

॥४९॥ युक्त भएर करौडौं भूतहरूले घेरिएर, बसाहामाथि चढेर दमाहा, शंख, मादल, कर्नाल, झ्याम्टा आदि बाजाहरू ॥५०॥ तथा वेदध्वनि र बन्दीहरूका स्तुतिगानका साथ हिमालयको नगरमा प्रवेश गरे । राम्रो मुहूर्तमा, शुभलग्नमा, असल ग्रहहरूले देखेको बेला ॥५१॥ हिमालयले मित्रैदेखि खुशी मनले विवाह गरिदिए । हे राजन् ! तीनै लोकका प्राणीहरुको लागि त्यस बेला त्यो ठूलो उत्सव थियो ॥५२॥ संसारैलाई कल्याण गर्ने भएका शंकर त्यो ठूलो उत्सव सकिएपछि दुनियाँको धर्मलाई पालन गर्दै स्वतन्त्रतापूर्वक देवीका साथ रमण गर्न लागे ॥५३॥ राती देवेन्द्रको घर जस्तो ऐश्वर्यशाली आफ्नू घरमा,उन्मत्त भ्रमरा र चराहरूको सुन्दर गुञ्जन र मधुपको तीखो स्वरले सुन्दर भएको नदीका तीरहरूमा, वनका लाँतीहरूमा दिव्य हजार वर्षसम्म सर्वसक्तिमान् ती शंकरले स्वच्छतापूर्वक मनमानी रमण गरे ॥ ५४–५५ ॥ हे राजन् !

स्त्राणामन्द्रशरामावात्तास्मन् काल नृपात्तम । पुंसङ्गात्पुनगभा नाराणा स्रवात ध्रुवम् ॥५६॥
प्रत्यहं रमणाद्देव्यां नाभूद्गर्भो हरादतः । देवानामभवच्चिन्ता पुत्रलाभाद्धराद्विभोः ॥५७॥
सर्वे सङ्गत्य संमन्त्र्य मिथ एवं बभाषिरे । कामी वाभूद्रतौ नित्यं सक्तो देव्या हरः स्वराट् ॥५८॥
नास्माकं सिद्ध्यते कार्यं नित्यं गर्भस्य संस्रवात् । पुनारतिर्यथा न स्यात्तथाऽस्माभिर्विधीयताम्
॥५९॥ मिथ एवं तु सम्भाष्य विचिन्वन् क्षणमत्र ते । अग्निं कल्पं विनिश्चित्य ह्यूचुर्मानपुरः-
सरम् ॥६०॥ मुखं त्वदग्ने देवानां त्वं बन्धुर्गतिरेव च । इदानीमपि गच्छ त्वं रमते यत्र वै हरः

'पुरुषका अति संसर्गले नारीहरुको गर्भमाथिको गर्भ अवश्यै झर्छ भन्ने स्त्रीहरुलाई इन्द्रको श्राप हुनाले त्यस बेला ॥५६॥
रोजै रमण गर्ने महादेवबाट देवीमा गर्भ रहेन । यसकारण शिवजीबाट पुत्रको लाभ नभएकोले तारकासुरले पाएको वरदेखि
देउताहरुलाई चिन्ता भयो ॥५७॥ तब सबै देवताहरु मेला भएर परस्परमा सल्लाह गरेर यस्तो भने–सर्वशक्तिमान् शिवजी
हमेशा देवीका साथरतिमा आसक्त भएर महान् कामुक जस्ता भये ॥५८॥यसरी अविच्छिन्न रमण गरिरहे भने त रोजै गर्भ-
को स्राव हुनाले हामीहरुको काम त सिद्ध हुँदैन । त्यसकारण जसरी हुन्छ महादेवले अति रति गर्न नपाऊन्, यस्तो काम
हामीहरुले गर्नुपर्छ ॥५९॥ परस्पर यस्तो बातचीत गरेर 'यसमा के गर्ने, भन्ने सोच्तै एकछिन रोकिएर यो कामफत्ते गर्न
सक्ने अग्निलाई नै ठानेर बड़ो सम्मानपूर्वक उनीहरुले उनलाई भने ॥६०॥ हे अग्नि, तिमी देवताहरुका मुख हौ, तिमी नै



॥ ६१ ॥ रत्यन्ते दर्शयात्मानं सम्भवेन्न रतिर्यथा । त्वां दृष्ट्वा व्रीडिता देवी ततश्चापसरेद्-
ध्रुवम् ॥ ६२ ॥ शिष्यो भूत्वा तु रत्यन्ते पृच्छ तत्त्वं स्मरान्तकम् । तत्त्वसम्प्रश्नव्याजेन कालं
बहु नय प्रभोः ॥ ६३ ॥ बहुकाले गते देवा कुमारं प्रसविष्यति । देवै रेव प्रार्थितोऽग्निरोमित्यु-
क्त्वा हरं ययौ ॥ ६४ ॥ वीर्योत्सर्गात्पूर्वमेव गतो वह्नि रतान्तरे । तं दृष्ट्वा व्रीडिता देवी विवस्त्रा
विलना ययौ ॥ ६५ ॥ रतिं विहाय त्वरया ततो रुद्रोऽतिकोपितः । वह्निं प्राह गृहाणेदमविसृष्टं
तु दुर्मते ॥६६॥ मद्वीर्यं दुःसहं पाप रतिविघ्नस्त्वया कृतः । उत्स्रक्षामि च मद्वीर्यं त्वन्मुखे हव्य-

बन्धु हौ,तिमी नै गतिपनि हौ। जहाँ शिवजी रमण गरिरहे छन् अहिले उहाँ गैहाल ॥६१॥ रतिसकिनेबित्तिकै तिमी आफू-
लाई देखाऊ,जसरी हुन्छतुरुन्तैफेरि रतिक्रीड़ा हुन नपाओस् । किनकि तिमीलाई देखेर लजाएकी देवी निश्चयै त्यहाँबाट हटनेछन्
॥६२॥ अनि रतिपछि शिष्य भएर भस्म गर्ने महादेवलाई तत्त्व सोध। तत्त्व सोध्ने छलले प्रभुको धेरै समय बिताऊ ॥६३॥
यसरी धेरै समयबितेपछि देवीले'कुमार'पाउनेछिन् । देउताहरुले यसरी प्रार्थना गरिएका अग्नि'हुन्छ' भनेर महादेव भाकहाँ
गए ॥६४॥ रतिको बिचमा वीर्य खस्नुभन्दा पहिले नै अग्नि उहाँ पुगे । उनलाई देखेर लजाएकी नाङ्गी देवी खिन्न भइन्
॥६५॥ अत्यन्त क्रोधी भएका शिवले तुरुन्तै रति त्यागेर अग्निलाई भने–'हे दुर्मति ! यो मेरो वीर्य लेऊ' ॥६६॥ मेरो

वाहन ॥ ६७ ॥ इत्युक्तोत्सृष्टवान्वीर्यं हव्यवाहमुखे हरः । तद्भृत्वा दह्यमानः सन् स्वोदरे वीर्यः मुल्वणम् ॥ ६८ ॥ चिन्तमानो ययौ धाम देवानां यज्ञपूरुषः । कथञ्चित्प्राणमुद्धृत्य देवेभ्यस्तन्न्यवेदयत् ॥६९॥ देवा वह्निरितं श्रुत्वा हर्षशोकौ समाययुः । स्थितं वीर्यमिति ह्लादं कथं तु प्रसवो भवेत् ॥७०॥ इति दुःखं तदा चासीद्वह्नेः कुक्षौ तु शाम्भवम् । ववृधे तेजसाक्षिप्तं दश मासागतास्तदा ॥७१॥ नापश्यत्प्रसवोपायं बहुदुःखपरायणः । देवान्वै शरणं प्राप गर्भमोचनहेतवे॥७२॥ ते देवा वह्निना साकं प्रापुर्गङ्गां यशस्विनीम् । गङ्गास्तोत्रेण ते स्तुत्वा प्रार्थयामासुरञ्जसा ॥७३॥

वीर्य सहिनसक्नु छ, तैंले रतिमा विघ्न गरिस् हे हव्यवाहन ! म मेरो वीर्य तेरो मुखमा कोचिदिन्छु ॥६७॥ यस्तो भनेर महादेवले अग्निको मुखमा वीर्य कोचिदिए । त्यो तेजिलो वीर्य आफ्नू पेटमा राखेर भतभत पोलिएको छँदो।६८॥ पीर मान्दै अग्निदेवता देउताहरुको धाममा गए । अनि देवताहरुलाई म कसरी प्राण धारेर रहूँ ? भनी निवेदन गरे ॥६९॥ द्यौताहरुले अग्निले भनेको सुनेर हर्ष-शोक दुबै अनुभव गरे । वीर्य स्थिर रह्यो भन्ने कुराले हर्ष भो, तर कसरी प्रसव होला ॥७०॥ भनेर दुःख भयो । वलले कोचिएको शम्भुको वीर्य अग्निको कोखमा बढ्न थाल्यो, त्यसरी नै दश महीना बित्यो ॥७१॥ प्रसव हुने कुनै उपाय नदेखेर, अत्यन्त दुःखी भएर गर्भको त्यागका निमित्त द्यौताहरुको शरणमा पुगे ॥७२॥ तब ती द्यौताहरू अग्निका साथ यशस्विनी गंगाजी भाठो पुगे र गंगाका स्तोत्रले स्तुति प्रार्थना गरे ॥७३॥ सारा द्यौताहरूको तिमी



त्वं माता सर्वदेवानां त्वमेव जगतां गतिः । देवतार्थं तु त्वं भद्रे धत्स्व तेजस्तु शाम्भवम् ॥७४॥ तद्वह्नेर्वर्धते गर्भो न स्रोतत्वात्प्रसवोऽस्य न ॥ तस्माद्वह्निं च नः सर्वान् समुद्धर दयां कुरु ॥७५॥ इत्येवं प्रार्थिता देवी तथाऽस्त्विति वचोऽब्रवीत् । देवास्तु वह्नये प्राहुर्मन्त्रं गर्भविमोचनम् ॥७६॥ तन्मन्त्राद् गर्भमाकृष्य व्यसृजद्धव्यवाहनः । गङ्गायां शाम्भवं तेजो भास्वल्लोकसुदुःसहम् ॥७७॥ सा पोढी कतिचिन्मासान्न शशाकः ततः परम् । निर्गतां तत्प्रभावेण स्फुटोद्रिक्तकलेवरा ॥७८॥ बहुदुःखाकुला देवीं पातिव्रत्यप्रभावतः । उज्जहार स्वोदरस्थं गर्भं लोकैकपावनी ॥७९॥

माता हौ, तिमी नै जगत्की गति हौ । हे भद्रे ! देवताहरूको कल्याणको लागि यो शम्भुको तेज धारण गरिबक्सियोस् ।७४। वह्निको त्यो गर्भ बढिरहेको छ, स्रोत्व नहुनाको कारण यिनको प्रसव हुँदैन त्यस कारण अग्निलाई र हामी सबैलाई उद्धार गर्नुहोस्, दया गर्नुहोस्॥७५॥ यस्ता किसिमले प्रार्थना गरिएकी देवीले 'त्यस्तै होस्' भन्ने वाणी भनिन् । द्यौताहरूले अग्निलाई गर्भ त्याग गर्ने मन्त्र बताइदिए ॥७६॥ उस मन्त्रले अग्निले गर्भलाई निकालेर गङ्गाजीमा फ्याँकिदिए । देदीप्यमान, संसारमा सहिन सक्नु त्यो शम्भुको तेजलाई॥७७॥ गङ्गाजीले केही महीनासम्म त्यो गर्भ राखिन्, त्यसका बाद सहन सकिनन् । उसको प्रभावले प्रष्टै उनी रक्तहीन शरीरवाली (पातली) भइन् ॥ ७८ ॥ पतिव्रता हुनाले देवी गङ्गा दुःखै-दुःखले आकुल भइन् र लोकमा यौटै पवित्र गङ्गाले आफ्नू पेटमा रहेको गर्भलाई निकालिन्॥७९॥ र वारैतिरबाट भतभत रापिएकी

शरकाण्डे तु चिक्षेप दह्यमाना समन्ततः । शरकाण्डैस्तु संभिन्नः षोढा भिन्नो बभूव ह ॥८०॥
षट्कृत्तिकाः समाजग्मुर्ब्रह्मणा चोदितस्तदा । शरकाण्डे विनिर्भिन्नं षोढां सन्ध्याय शाम्भवम् ॥८१॥
षण्मुखं पुरुषं कृत्वा चैकदेहमिति स्फुटम् । कृत्तिका विधिनाऽऽज्ञप्तास्तं तथा चक्रिरे द्रुततम् ॥८२॥
तद्देहं पुरुषाकारं षण्मुखं शरकाण्डगम् । अरक्ष्यमाणमेवासीच्छरकाण्डेषु वै चिरम् ॥८३॥
एकदा वृषमारूढौ पार्वतीपरमेश्वरौ । श्रीशैलगन्तुमनसौ तत्स्थानात्परिजग्मतुः ॥८४॥
तदासीत्पार्वती देवी सद्यः स्नुतपयोधरा । विस्मितोवाच तं रुद्रं स्नुतौ कस्मात्पयोधरौ ॥८५॥
कारणं ब्रूहि विश्वात्मन्नियुक्तस्तु हरोऽब्रवीत् । शृणु देवि प्रवक्ष्यामि पुत्रोऽधो वर्तते तव ॥८६॥

उनले त्यसलाई शरकाण्ड ( काँसघारी ) मा फ्याँकिन्, शरकाण्डले काटिएको त्यो भ्रूण टुक्रा-टुक्रा भयो ॥ ८० ॥ तब ब्रह्माद्वारा प्रेरित भएर षट्कृत्तिका त्यहाँ आए, शरकाण्ड ( काँसघारी ) मा छिन्न-भिन्न भएको शम्भुको त्यो तेज भ्रूणलाई जोडेर ॥८१॥ साफ यौटै देह भएको छः मुख भएको पुरुष बनाएर ब्रह्माजीले अह्राइएका कृत्तिकाहरूले त्यस भ्रूणलाई चाँडै नै अनेमुताबिक गरिदिए ॥८२॥ शर (काँस) को झाङमा रहेको,छः मुखभएको, पुरुषका आकारको त्यो देह धेरै कालसम्म शर (काँसको) झाङमा नै बिनै रक्षकको थियो ॥८३॥ एकपल्ट बसाहामाथि चढेका श्रीशैलमा जाने मन धरेका पार्वती र परमेश्वर त्यसै ठाउँबाट गइरहेका थिए ॥८४॥ त्यस ठाउँमा आइपुगेपछि देवी पार्वती एकाएक स्तन पग्लिएकी भइन् । आश्चर्य चकित भएर पार्वतीले 'के कारणले मेरा दुवै स्तन चुहन लागे ?' भनी महादेवसित भनिन् ॥८५॥ 'हे विश्वात्मन्



त्वयि वीर्यमनुत्सृष्टं प्रागेवागाद्धविर्वहः । तं दृष्ट्वा व्रीडिता त्वं वै प्रविष्टा च स्थलान्तरम् ॥८७॥
मया क्रोधाद्वह्निमुखे विसृष्टं वीर्यमुत्तमम् । देवानां च प्रसादेन गङ्गायां व्यसृजद्धि सः ॥८८॥
गङ्गा च दह्यमानाऽथ चिक्षेप च शरान्तरे । तत्र षोढा प्रभिन्नं तु मातृभिश्च दृढीकृतम् ॥८९॥
पुरुषाकृतिमापेदे तं दृष्ट्वा ते स्तनौ स्नुतौ । पालयैनं महावीर्यं विष्णुना समविक्रमम् ॥९०॥
अयमेवौरसः पुत्रस्तव भामिनि निश्चितम् । तस्माद् गृहाण शीघ्रं त्वं ख्यातिर्भूयादतीव ते ॥९१॥

यसको कारण बताउनुहोस् भनी सोधिएका शिवजी भन्न लाग्नुभो । हे देवि ! सुन भन्छु—तिम्रो छोरो तल छ ॥ ८६ ॥ तिमीमा वीर्य खस्नुभन्दा पहिले नै अग्नि उहाँ आइपुग्यो, उसलाई देखेर तिमी लज्जै लुकन गएकी थियौ॥८७॥ मैले क्रोधले त्यो तेजस्वी वीर्य अग्निको मुखमा फोचिदिएँ । उसले देवताहरूको कृपाले त्यो गङ्गामा फ्याँकिदियो॥८८॥ अनि गङ्गाले पनि पीडित भएर त्यसलाई शर (काँस-ढड्डी) को वनमा फ्याँकिदिइन् । त्यो छिन्नभिन्न भएको भ्रूणलाई कृत्तिकाहरूले यौटै साह्रो गराए ॥८९॥ अनि उसले पुरुषको आकार पायो, त्यसैलाई देखेर तिम्रा स्तन नग्न लागेका हुन् । विष्णुतुल्य पराक्रम भएको यो पराक्रमीलाई लगेर पाल ॥९०॥ हे भामिनि ! निश्चय नै यही तिम्रो औरस पुत्र हो । त्यसकारण तिमी त्यसलाई चाँडै लिन्छौ, यसले तिम्रो ठूलो प्रसिद्धि हुनेछ ॥९१॥ शम्भुले यस्तो आज्ञा गरिएकी उनले तुरुन्तै उगाठी भएर

इत्यज्ञप्ता शम्भुना सा तमादायान्तिके द्रुतम् । अङ्कमारोप्य तं देवी पाययामास स्वौ स्तनौ ॥९२॥
देवेन मोहिता देवी पुत्रस्नेहपराऽभवत् । पुनः कैलासमगमत् प्रभुणा सह शाङ्करी ॥९३॥
पुत्रं लालयतीं देवी सन्तोषं परमं ययौ । एवं कुमारजननं वर्णितं ते मयाऽद्भुतम् ॥९४॥
य इदं शृणुयान्नित्यं कुमारजननं शुभम् । पुत्रपौत्राभिवृद्धिं तु लभते नात्र संशयः ॥९५॥
महद्दुःखं तु जनने हरस्याप्रियतोऽभवत् । प्रीत्या तु श्रुववैशाखधर्मोऽप्यप्रतिमो भवेत् ॥९६॥
तस्माद्वैशाखधर्मो हि सर्वाघौघविनाशतः । अवैधव्यप्रदः पुण्यः सर्वसम्पद्विधायकः ॥९७॥

उसलाई लिएर काखमा राखेर देवीले आफ्ना स्तन प्याइन् ॥ ९२ ॥ शीवाले मोहित गराइएकी देवी पार्वती छोरालाई असाध्यै प्यारोगर्न लागिन् फेरि पार्वती शिवका साथै कैलासमा फर्किन् ॥९३॥ पुत्रलाई प्यारो गर्दा देवीले ठूलो सन्तोष पाइन्। यस्ता प्रकारले मैले आश्चर्यलाग्दो कुमारको जन्म तिमीलाई वर्णनगरें ॥९४॥ जो यो कुमारका जन्मको शुभवृत्तान्त रोजै सुन्दछउसका छोरा नातिका बढ्दो हुन्छ, यसमा कुनै सन्देह छैन॥९५॥ शिवजीको अप्रिय गर्नाले कामदेवको जन्मनुमा ठूलो दुःखभयो। रतिले प्रेमपूर्वकवैशाखको धर्म सुन्ने-गरेकी हुनाले अहिले उ उपमारहित अपूर्व भएको छ।।९६॥ त्यसकारण वैशाखमा गरिएको धर्म नै सारा पाकसमूहलाई नाश गर्नेवाला छ। यो सुन्नेले विधवा हुनुपर्दैन,यो सुन्ने गर्नु ठूलो पुण्य हो र सारा सुख सम्पत्ति दिनेवाला हो ।९६। उसका प्रभावले अनङ्ग पनि अङ्गवालामा प्राप्त भयो। जसको वैशाखमहीमा विना



अनङ्गोऽपि च साङ्गत्वं यत्प्रभावादवाप्तवान् । अस्नात्वा चाप्यदत्त्वा च वैशाखो यस्य वै गतः ॥९८॥
सर्वधर्मकृतो वापि भवेद्दुःखपरम्परा । सर्वधर्मोज्झितो येन यद्येकोऽप्यनुष्ठितः ॥९९॥
यमदूतांस्तिरस्कृत्य स याति परमां गतिम् ॥१००॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे कुमारोत्पत्तिकथनं नाम नवमोऽध्यायः ॥९॥

स्नान दानले बित्छ ॥९८॥ उसले अरू सबै धर्म गरेको भए पनि उसलाई दुःख परिरहन्छ । कुनै धर्म नगरेकोले पनि यदि केवल यो यौटे मात्र गर्‍यो भने पनि उसले यमदूतहरूलाई फट्कारेर परम गति पाउँदछ ॥१००॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यमा नारद र अम्बरीष संवादमा कुमारोत्पत्ति कथन नामको नवौं अध्याय सकियो ॥९॥



# अथ दशमोऽध्यायः

मैथिल उवाच–यत्कामपत्न्या चरितमशून्यशयनव्रतम् । देवोपदिष्टं तस्यास्य विधानं ब्रूहि भूसुर ॥१॥ किं दानं को विधिस्तस्य पूजनं किं फलं तथा । एतदाचक्ष्व भूदेव श्रोतुं कौतूहलं हि मे ॥२॥ श्रुतदेव उवाच–शृणु भूप प्रवक्ष्यामि व्रतं पापप्रणाशनम् । अशून्यशयनं नाम रमायै हरिणोदितम्॥३॥ येन चीर्णेन देवेशो जीमूताभः प्रसीदति । लक्ष्मीभर्ता जगन्नाथः समस्ताघौघनाशनः ॥४॥ अकृत्वा यस्त्विदं राजन् व्रतं पातकनाशनम् । गार्हस्थ्यमनुवर्तेत तस्येदं निष्फलं भवेत् ॥५॥ श्रावणे शुक्लपक्षे तु द्वितीयायां महीपते । अशून्यशयनाख्यं तद् ग्राह्यं व्रतमनुत्तमम् ॥६॥

मैथिल महाराजले भने—हे ब्राह्मण देवता ! कामकी पत्नी रतिले देवताहरूले उपदेश गरिएको जो 'अशून्यशयन नामको व्रत गरिन् त्यसको मलाई विधान बताउनोस् ॥१॥ यस व्रतमा के दान गरिन्छ ? विधि के हो ? पूजा कसरी गरिन्छ ? त्यसको फल के हो? हे पृथ्वीका चौता यो भन्नुहोस्, मलाई यो सुन्ने उत्कट इच्छा छ ॥२॥ श्रुतदेवले भन्नुभयो हे राजन् ! हरिले रमालाई बताउनुभएको सारा पापलाई नाश गर्ने अशून्यशयन नामको व्रत म तपाईलाई बताउँछु सुन्नुहोस् ॥३॥ जुन व्रत गर्नाले चौताहरूका अधिपति, लक्ष्मीका स्वामी; जगत्का नाथ सारा पापसमूहलाई नाशगर्ने विष्णु भगवान् खुशी हुनुहुन्छ ॥४॥ हे राजन् ! जो जन, पातक नाश गर्ने यो व्रत नगरी गृहस्थी जीवन बिताउँछ त्यसको यो गार्हस्थ्य निष्फल हुन्छ ॥५॥ हे राजन् ! श्रावणको शुक्लपक्षको द्वितीयादेखि त्यो उत्तम 'अशून्यशयन'नामको व्रत शुरू गर्नुपर्छ



चतुर्मासं च राजेन्द्र हविष्याशी भवेन्नरः । चतुर्भिः पारणं मासैः सद्भिः स्यादितो विभो ॥७॥ लक्ष्मीयुक्तो जगन्नाथः पूजनीयो जनार्दनः । पारणादिवसे प्राप्ते भक्ष्यं चैव चतुर्विधम् ॥८॥ उपायनं च दातव्यं ब्राह्मणाय कुटुम्बिने । सौवर्णीं राजतीं वापि मूर्तिं कृत्वा मनोरमाम् ॥९॥ पीताम्बरधरां दिव्यां वनमालाविभूषिताम् । शुक्लपुष्पैः सुगन्धैश्च पूजयेत्पुरुषोत्तमम् ॥१०॥ शय्यादानैर्वस्त्रदानैर्विप्राणां भोजनैस्तथा । दम्पत्योर्भोजनैश्चैव दक्षिणाभिः प्रपूजयेत् ॥११॥ एवं तु चतुरो मासान्पूजयित्वा जनार्दनम् । मार्गशीर्षादिमासेषु पूजयेत् पूर्ववद्धरिम् ॥१२॥ संरक्तचरणं ध्यायेत्

॥६॥ हे राजेन्द्र ! चतुर्मासभरि व्रती जनले हविष्य भोजन गरोस्, चार महीना सकिएपछि व्रतको पारायण गरोस् त हे राजन् ! यसले कल्याणहुन्छ॥७॥ रोजै लक्ष्मीले सहित जगत्का पति जनार्दन विष्णुको पूजा गर्नुपर्छ । पारणको दिन चार प्रकारको खाना खानुपर्छ॥८। बालबच्चा हुने ब्राह्मणलाई दक्षिणा दिनुर सुनको या चाँदीकोसुन्दर विष्णु-मूर्ति बनाएर उसलाई पीताम्बर पहिराएर, राम्रा फूलका मालाहरूले सजाएर, बास्ना आउने सेता फूलहरूले पुरुषोत्तम भगवान्को पूजा गर्नुपर्छ ॥९-१०॥ शय्यादान, वस्त्रदान, ब्राह्मण भोजन गराउनुपर्छ । अनि दम्पतीलाई भोजन गराएर दक्षिणाहरूले पूजा गर्नुपर्छ ॥११। यस्ता किसिमले चार महीनासम्म विष्णु भगवान्को पूजा गरेर पारण गरेपछि । मङ्सीर आदि महीनाहरूमा पहिले झैं हरिको पूजा गर्नुपर्छ ॥१२॥ यस बेला रुक्मिणीले सहित राता चरण भएका हरिको ध्यान गर्नुपर्छ । चैत्र आदि चार

रुक्मिणीसहितं हरिम् । चैत्रादिचतुरो मासानेवं सम्पूजयेद्धरिम् ॥१२॥ भूम्या च सहितं देवमर्चये-द्भक्तिपूर्वकम् । सनन्दनाद्यैर्मुनिभिः स्तूयमानं समन्ततः ॥ १४ ॥ आषाढस्य च मासस्य द्वितीः यायां समापयेत् । अष्टाक्षरेण मन्त्रेण जुहुयादादिपारणे ॥ १५ ॥ मार्गशीर्षादिमासानां पारणे भूमिपालक । जुहुयाद्विष्णुगायत्र्या चैत्रादीनां निबोधय ॥ १६ ॥ पौरुषेयेण मन्त्रेण जुहुयादनले शुभे । पञ्चामृतं पायसञ्च त्वपूपं घृतपाचितम् ॥१७॥ एवं क्रमेण द्रव्याणि प्रतिमास्तु निबोधय । ताम्रीं तु प्रथमं दद्याल्लक्ष्मीनारायणस्य च ॥१८॥ सौवर्णीं मध्यमे दद्यात् कृष्णस्य परमात्मनः ।

महीनामा पनि यसै गरी हरिको पूजा गर्नुपर्छ ॥१३॥ यसमा सनन्दन आदि मुनिहरूले चारैतिरबाट हमेशा स्तुति गरिइने भूमिका साथ रहने हरिलाई संझी भक्तिपूर्वक पूजा गर्नुपर्छ ॥१४॥ यस्ता प्रकारले सालभरिको व्रत पूर्ण भैसकेपछि आषाढ महीनाको द्वितीयामा व्रतको समाप्ति गर्नुपर्छ । पहिलो पारायणमा अग्निस्थापनाले पञ्चसंस्कार गरिएको अग्निमा अष्टाक्षर मन्त्रले हवन गर्नुपर्छ ॥१५॥ हे राजन् ! मङ्सीर आदि चार महीनाको पारणमा विष्णुगायत्रीले हवन गर्नुपर्छ, अनि चैत्रादि चार महीनाको पारणमा तिमी जान ॥१६॥ पौरुषेय मन्त्रलेशुभ अग्निमा हवन गर्नुपर्छ, भगवानलाई हर-महीना पञ्चा-मृत, खीर र घिउमा पकाएको मालपूआ भोग लगाउनुपर्छ ॥१७॥ यस प्रकारले पूजा सामाग्रीहरूको क्रम मैले बताएँ, अब प्रतिमाहरू पनि तिमी जानिराख–पहिलो चतुर्मासाको पारायणमा लक्ष्मी-नारायणको तामाको मूर्ति दान गर्नुपर्छ ॥१८॥





राजतीमन्तिमे दद्याद्वराहस्य महात्मनः ॥ १९ ॥ ब्राह्मणान्भोजयेत् पश्चान्नामभिः केशवादिभिः । वस्त्रयुग्मैरलङ्कारैर्यथावित्तानुसारतः ॥ २० ॥ अर्चयित्वा ततो दद्यादपूपान् घृतपाचितान् । उपाय-नानि विप्रेभ्यो द्वादशेभ्यो निवेदयेत् ॥२१॥ आचार्याय ततो दद्यात्प्रतिमां पूर्वकल्पिताम् । शय्यां सङ्कल्पितां पूर्वं सर्वालङ्कारभूषिताम् ॥ २२ ॥ तस्यामभ्यर्च्य विधिवल्लक्ष्मीनारायणं परम् । कांस्य पात्रेण सहितामपूपैर्बहुभिस्तथा ॥ २३ ॥ वस्त्रालङ्कारसहितां दक्षिणाभिस्तथैव च । ब्राह्मणाय विशिष्टाय वैष्णवाय कुटुम्बिने ॥२४॥ प्रदद्याद्विधिवत्पूज्य ब्राह्मणाश्चापि भोजयेत् । लक्ष्म्या त्वश्च-

बीचको चार महीनाको पारायणमा परमात्मा कृष्णको स्वर्णमूर्ति दान गर्नुपर्छ, अन्तिम चार महीनाको पारायणमा महात्मा वराहको चाँदीको मूर्तिदान गर्नुपर्छ ॥९१॥ अनि केशव आदि नामले ब्राह्मणहरूलाई भोजन गराउनु । आफ्नू धनअनुसार जोड़ा वस्त्रले र अलंकारहरूले ॥२०॥ पूजा गरेर घिउमा पकाएका मालपूआहरू दिनू र बाह्रजना ब्राह्मणहरूलाई दक्षिणा या कुनै सौगात दिनू॥२१॥ अनि आचार्यलाई पहिले बनाइएका प्रतिमा दान दिनू र पहिले दान गर्ने निश्चय गरिएको शय्या लाई सबै अलंकारहरूले सजाएर ॥२२॥ त्यसमा विधिपूर्वक सर्वश्रेष्ठ लक्ष्मी-नारायणलाई पूजा गरेर काँसको भाँडा र अरु धेरै अपूर्व ॥२३॥ वस्त्र अलंकारहरूले र दक्षिणाले पनि युक्त पारेर बालबच्चा भएको, आफ्नू आचार-विचार नियममा रहेको वैष्णव ब्राह्मणलाई॥२४॥ पूजा गरेर विधिपूर्वक दान दिनू ब्राह्मणहरूलाई पनि भोजन गराउनू । हे जनार्दन ! जसरी तपा-

न्यशयन यथा तव जनार्दन ॥ २५ ॥ शय्या ममाप्यशून्या स्याद्दानेनानेन केशव । एवं सम्प्रार्थ्य देवेश स्वयं भोजनमाचरेत् ॥ २६ ॥ पुरुषो वा सती वापि विधवा वा समाचरेत् । अशून्यशयनाख्यं च कर्तव्यं व्रतमुत्तमम् ॥ २७ ॥ एवं तव मयाऽऽख्यातं विस्तरान्नृपसत्तम । सुप्रसन्ने जगन्नाथे भवेयुर्विविधाः शुभाः ॥ २८ ॥ तस्मिंस्तुष्टे तु देवेशे देवानामपि दुर्लभाः । तस्मात्सर्वप्रयत्नेन व्रतमेतत्समाचरेत् ॥ २९ ॥ अवश्यं गन्तुकामस्तु तद्विष्णोः परमं पदम् । एवमुक्त मया सर्वं किमन्यच्छ्रोतुमिच्छसि ॥३०॥ इत्युक्तस्तेन राजर्षिः पुनरप्याह तं मुनिम् । वैशाखेछत्रदानस्य

ईको शयन लक्ष्मीले खाली रहँदैन॥२५॥ यस्तै मेरो शय्या पनि हे केशव! यस दानले खाली नरहोस । यसरी भगवानको प्रार्थना गरेर अनि आफूले पनि भोजन गर्नु ॥ २६ ॥ पुरुषले, सधवा सती वा विधवाले पनि राम्ररी अशून्यशयन नाम गरिएको यो अति उत्तम व्रत गर्नुपर्छ ॥२७॥ हे राजाहरूमा श्रेष्ठ राजा! यसरी मैले तिमीलाई विस्तारपूर्वक व्रतको विधि बताएँ। जगत्का नाथ भगवान् खुशी हुनुभो भने नाना प्रकारका कल्याणहरू हुन्छन् ॥२८॥ ती देवताहरूका पनि मालिक खुशी भएका देवताहरूका पनि दुर्लभ मनोरथ पूरा हुन्छन् । अतः सकभर प्रयत्न गरेर यो व्रत अवश्यै गर्नुपर्छ ॥२९॥ निश्चय गरेर विष्णुको त्यो परमपदमा पुग्न चाहनेहरूले यो व्रत यसरी गर्नुपर्छ । यस्ता प्रकार मैले तिमीलाई यस व्रतको गर्ने विधि र फल सबै बताएँ । अब अरू के सुन्न चाहन्छौ ? ॥३०॥ श्रुतदेवले यस्ता प्रकारले सोधिएका राजर्षि मैथिलले फेरि



माहात्म्यं विस्तराद्वद ॥३१॥ शृण्वतोऽपि न तृप्तिर्मे वैशाखोक्ताञ्छुभावहान् । इति तद्वचनं श्रुत्वा यशस्यं पुण्यवर्धनम् । प्रत्युवाच महाभागं श्रुतदेवो महायशाः ॥ ३२ ॥ श्रुतदेव उवाच—वैशाखे घर्मतप्तानां मानवानां महात्मनाम् ॥३३॥ ये कुर्वन्त्यातपत्राणां तेषां पुण्यमनन्तकम् । अत्रैवोदाहरन्तीममितिहासं पुरातनम् ॥३४॥ वैशाखधर्ममुद्दिश्य पुरा कृतयुगे कृतम् । वङ्गदेशे पुरा कश्चिद्धेमकान्त इति श्रुतः ॥ ३५॥ कुशकेतोः सुतो धीमान् राजा शस्त्रभृतां वरः । एकदा मृगयासक्तो गहनं वनमाविशत् ॥ ३६ ॥ तत्र नानाविधान् हत्वा मृगान् क्रोडादिकान् बहुन् । श्रान्तो

पनि ती मुनिलाई भने—हे ब्रह्मन् ! वैशाखमा छातादानको महिमा विस्तारपूर्वक बताउनोस्॥३१॥ वैशाखमहीनामा गर्न बताइएका कल्याणकारी कुराहरू सुनेरपनि मेरो अरू सुन्ने इच्छा तृप्त भएको छैन । यस्ता प्रकारको तिनको कीर्तिकारी पुण्य बढाउने कुरो सुनेर ती भाग्यमानीलाई ठूला कीर्तिवाला श्रुतदेवले भन्नुभयो ॥३२॥ श्रुतदेवले भन्नुभयो—वैशाखमा घामले तातेका महात्मा मनुष्यहरूलाई ॥३३॥ जो छाता छत्री आदिको दान गर्छन् तिनीहरूलाई ठूलो पुण्य हुन्छ । यस विषयमा म तिमीलाई अतिपुरानो इतिहास उदाहरणस्वरूप बताउँछु ॥३४॥ वैशाखमहीनाको धर्मलाई लक्ष्य गरेर पहिले सत्ययुगमा यो इतिहास बनेको थियो । उहिले बङ्गाल देशमा हेमकान्त भन्ने नामले विख्यात भएको ।३५॥ कुशकेतुको छोरो जो राजा शस्त्रधारीहमा श्रेष्ठ र बुद्धिमान् थियो । एकपल्ट शिकारमा आशक्त भएर निबिड जङ्गलमा पस्यो ॥३६॥ त्यस जङ्गलमा धेरै

मध्याह्नवेलायां मुनीनामाश्रमं ययौ ॥ ३७ ॥ तदा शर्तार्चिनो नाम ऋषयः शंसितव्रताः । समाधिस्था न जानन्ति बाह्यकृत्यं तु किञ्चन ॥ ३८ ॥ तान् दृष्ट्वा निश्चलान् विप्रान् क्रुद्धो हन्तुं मनो दधे । भूपं निवारयामास शिष्याणामयुतं तदा ॥ ३९ ॥ दुर्बुद्धे शृणु नो वाक्यं गुरवस्तु समाधिगाः । नो जानन्ति बहिः कृत्यं तस्मात् क्रोद्धुं न चार्हसि ॥४०॥ ततः शिष्यानुवाचेदं वचनं क्रोधविह्वलः । यूयं कुरुध्वमातिथ्यमध्वश्रान्तस्य मे द्विजाः ॥ ४१ ॥ एवमुक्ताश्च भूपेन शिष्या ऊचुस्तदा नृपम् । नाज्ञप्ता गुरुभिर्भूप वयं भिक्षाशिनः कथम् ॥ ४२ ॥ गुरुतन्त्राः स्वतः कर्तुमा-

प्रकारका मृगहरूलाई र बँदेलहरूलाई मारेर थकाइले पलस्त भएको मध्याह्न समयमा मुनिहरूको आश्रममा गयो ॥३७॥ त्यस वेला शतर्चिनामका ऋषिहरू व्रतमा तल्लीन भएर समाधि लाइराखेका थिए, यसकारण ती बाहिरी जगत्का कार्यहरू क्यै पनि जान्दैनथिए ॥३८॥ आफू आउँदा पनि निश्चलरहेका ती ब्राह्मणहरूलाई देखेर क्रोधिएको उसले मार्ने मन गर्‍यो । तब ऋषिका दश हजार शिष्यहरूले राजालाई रोके ॥३९॥ अरे दुर्बुद्धि! हाम्रो कुरो सुन ! समाधिमा रहेका गुरुहरू बाहिरी कार्यहरू क्यै जान्दैनन्, त्यसकारण क्रोध नगर ॥४०॥ तब क्रोधले धबडाएर त्यसो भए 'हे ब्राह्मण केटाहो ! हिंडाइले थाकेका मेरो अतिथिसत्कार तिमीहरू नै गर' भन्ने यस्तो कुरो शिष्यहरूलाई भन्यो ॥४१॥ तब यसरी राजाले भनिएका शिष्यहरूले भिक्षा माँगेर खाने हामीहरूले गुरुहरूको आज्ञा नपाईकन हे राजन् ! कसरी आतिथ्य गर्ने ? भनी राजालाई भने ॥४२॥



तिथ्यं न वयं क्षमा । प्रत्याख्यातो नृपः शिष्यैस्तान् हन्तुं धनुराददे ॥ ४२ ॥ मृगदस्युभयादिभ्यो बहुधा रक्षिता मया । ते मामेवापजीवन्तो मया दत्तप्रतिग्रहा ॥ ४४ ॥ एते मां न विजानन्ति कृतघ्ना भूरिमानिनः । घ्नतोऽपि मे न दोषः स्यादेतान् खल्वाततायिनः ॥ ४५ ॥ एवं विकत्थमानः सञ्छरान्मुञ्चन् शरासनात् । तान् विद्रुता ननुद्रुत्य जघ्ने शिष्यशतत्रयम् ॥४६॥ दुद्रुवुर्भयतः सर्वे विहायाश्रममञ्जसा । विद्राविते‌षु शिष्येषु बलादाश्रमसंस्थितान् ॥ ४७ ॥ सम्भाराञ्जगृहुः शीघ्रं सैनिकाः पापबुद्धयः । यथेष्टं भोजनं चक्रुर्नृपेणैवानुमोदिताः ॥ ४८ ॥

गुरुहरूको अधीनमा रहने हामीहरू आफ्नै मनले अतिथि-सत्कार गर्न सक्तैनौं । ऋषिका शिष्यहरूबाट यस्तो उत्तर पाएको उस राजाले तिनीहरूलाई मार्न धनु लियो ॥ ४३ ॥ पशु चोर डाकाको भयहरूबाट अनेक प्रकार मैले रक्षा गरिएका, मैले दिएका प्रतिग्रह(दान) लिने यी मेरै भरोशामा बाँचेका छन्।४४। यी कृतघ्नी अभिमानीहरू मलाई नै जान्दैनन्। यस्ता यी
९ आततायीहरूलाई लुकन नदिइ ती सौ ऋषि-शिष्यहरूलाई मारिदिय ॥४६॥ अरू सबै शिष्यहरू डरले तुरुन्तै आश्रम छोडेर तिनीहरूलाई लुकन नदिई तीन सय ऋषि-शिष्यहरूलाई मारिदियो ॥४५॥ अरू सबै शिष्यहरू डरले तुरुन्तै आश्रम छाडेर सुइँकुच्चा ठोके । शिष्यहरू बेपत्ता भएपछि आश्रममा राखेका ॥ सामाग्रीहरू राजाबाटै आज्ञा पाएका, पाप बुद्धि भएका सेनाहरूले तुरुन्तै जबर्जस्ती लुटे र पेटभर भोजनगरे ॥४७-४८॥ तब साँझ परेपछि सेनाहरूले घेरिए राजा आफ्नू शहरमा

ततः सेनावृतो राजा पुरीमागाद्दिनात्यये । कुशकेतुस्ततः श्रुत्वा तनयस्य विचेष्टितम् ॥ ४९ ॥
पुरान्निर्यापयामास गर्हयन्नात्मनः सुतम् । राज्यानर्हं क्षमाहीनं स्वदेशादपि भूमिप ॥ ५० ॥
पित्रा त्यक्तस्ततो राजा हेमकान्योऽतिविह्वलः । वनं विवेश गहनं हत्याभिश्च सुपीडितः ॥ ५१ ॥
बहुकालमवासीच्च गह्वरे निर्जने वने । आहारं कल्पयामास व्याधधर्ममुपाश्रितः ॥ ५२ ॥
न क्वापि स्थितिमापेदे हत्ययाऽभिद्रुतो भ्रमन् । अष्टाशीतिस्तु वर्षाणि गतान्येव दुरात्मनः ॥५३॥
तीर्थयात्राप्रसङ्गेन त्रितो नाम महामुनिः । तस्मिन्नरण्ये वैशाखे रवौ मध्यन्दिने गते ॥ ५४ ॥

आयो । तब कुशकेतुले छोराको खराब काम सुनेर ॥४९॥ आफ्नू छोराको निन्दा गर्दै शहरबाट निकालिदियो हे राजन् ! क्षमा हीन हुनाले राज्य (शासन) गर्न अयोग्य उसलाई आफ्नू देशैबाट निकालिदियो ॥५०॥ त्यसरी बाबुले त्यागिएको राजा हेमकान्त अत्यन्त विह्वल हुँदै घना जंगलभित्र पस्यो र हत्याले पनि अतिपीड़ित भयो॥५१॥ त्यस निर्जन अटाम्मे जंगलमा धेरै कालसम्म उनी बसे । व्याधाको काम गरेर खाना चलाउँथ्यो।५२। हत्याको कारण, भागी-भागी भट्कने उसले कहीं पनि ठेकान पाएन। यस्तै प्रकार अट्ठासी वर्ष त्यस दुष्टका बिते॥५३॥ यस्तैमा तीर्थयात्रा गर्न हिंडेका 'त्रित' नामका महामुनि वैशाख महीनामा घाम टाउकोमाथि भएको बेला त्यसै जंगलमा॥५४॥ हिंड्दा, घामले छटपटाएर, प्यासले व्याकुल

---




गच्छन्नातपविक्लान्तस्तृषया चातिपीडितः । क्वचिद् वृक्षविहीने तु प्रदेशे मूर्छितोऽपतत् ॥५५॥
दैवाद्दृष्ट्वा हेमकान्तस्त्रितं नाम महामुनिम् । तृषार्तं मूर्छितं श्रान्तं कृपां चक्रे नृपाधमः ॥ ५६ ॥
ब्रह्मपत्रैस्तु संवीज्य कृत्वा चातपवारणम् । मुनेर्जग्राह शिरसि ह्यलाबुत्थं जलं ददौ ॥ ५७ ॥
लब्धसंज्ञोऽभवत्तेन सूपचारेण वै मुनिः । ततश्छत्रं छत्रदत्तं गृहीत्वा गतविक्लमः ॥ ५८ ॥
ग्रामं कञ्चिच्छनैः प्राप्य किञ्चिदाप्यायितेन्द्रियः । तेन पुण्यप्रभावेण ब्रह्महत्याशतत्रयम् ॥ ५९ ॥
विनष्टमभवत्तस्य क्षणादेव महात्मनः । ततो विस्मयमापन्नो हेमकान्तो महारथः ॥ ६० ॥

भएर छायादार रूख नभएको कुनै ठाउँमा मूर्छा परेर पच्छारिए ॥५५॥ दैवसंयोगले हेमकान्तले ती त्रित महामुनिलाई देखेर प्यासले प्याकप्याक भएका, मूर्छा परेका, थाकेका उनलाई उस अधमराजाले दया गर्‍यो॥५६॥ पलाशका स्यौंलाले हंकेर, घामको प्रखर किरणलाई छेकेर, मुनिको शिरमा सुम्सुम्याए अनि आफ्नू तुम्बीमा रहेको पानी पनि प्याइदिए॥५७॥त्यस बेस सेवाले मुनि बौरिए । तब टण्टलापुर घामको राप, थकाइ, श्वासको पीड़ा हटेका ती मुनि राजाले दिएको त्यो छाता लिएर॥५८॥ केही स्वस्थ भएका उनी बिस्तार-बिस्तार कुनै गाउँमा पुगे । ब्राह्मणलाई ओत गरेर छाता दिएको त्यसै पुण्यका प्रभावले तीन सय ब्रह्महत्या ॥५९॥ ती महात्माका तुरुन्तै नाश भए । तब महारथी हेमकान्त आश्चर्यचकित भयो ॥६०॥

बहुधा पीड्यमानस्य ब्रह्महत्या इमाः कथम् । केनाप्यनिष्कृता ह्येताः कः गताः केन हेतुना ॥६१॥
इत्येवं चिन्तयामास ब्रह्महत्याविमोचनम् । एवं चात्रस्तिते राशि यमदूता अथागमन् ॥ ६२ ॥
नेतुमेनं महात्मानं हेमकान्तं वने स्थितम् । ग्रहणीं जनयामासुः प्राणान् हर्तुं महात्मनः ॥ ६३ ॥
तथा प्राणवियोगार्तः पुरुषांस्त्रीन् ददर्श ह । यमदूतान्महाघोरानूर्ध्वकेशान् भयङ्करान् ॥ ७४ ॥
चिन्त्यमानः स्वकर्माणि तूष्णीमासीत्तदा नृपः । छत्रदानप्रभावेण जाता विष्णुस्मृतिर्नृप ॥ ६५ ॥
तेन स्मृतो महाविष्णुर्विष्वक्सेनं स्वमन्त्रिणम् । उवाच तूर्णं गच्छ त्वं यमदूतान्निवारय ॥ ६६ ॥

असाध्यै दुःख पाएको मेरो यी ब्रह्महत्याहरूलाई कसले कसरी हटायो? कुन कारणले यी कहाँ गए? ॥६१॥ यस्ता प्रकारले ब्रह्महत्या छुट्नाको कारण सोच्न लागे। राजा यसरी सोचिरहेका थिए कि उसै बेला यमराजका दूत उहाँ आइपुगे ॥६२॥ यी महात्मा हेमकान्तलाई लिन आएका तिनीहरू वनमा बसे अनि ती महात्माको प्राण हर्नका लागि उनले संग्रहणी रोग उत्पन्न गरे॥६३॥ तब प्राण निस्किन दुःख पाएको उसले तीनोटा पुरुषलाई देख्यो। ती देख्तै डरलाग्दा, ठाड-ठाडा केश भएका, महाभयंकर, यमदूत थिए ॥६४॥ तब राजा आफ्ना कर्महरू संझदै चुपचाप रहे। राजन्! छातादानको प्रभावले यत्तिकैमा उसलाई विष्णुको स्मरण भयो ॥६५॥ उस राजाले सँझिएका महाविष्णुले विष्वक्सेन नामको आफ्नू मन्त्रीलाई बोलाएर भने किझट्टै तिमी गएर यमदूतहरूलाई रोक॥६६॥वैशाखको धर्ममा लागेको हेमकान्तको रक्षा गर। पाप निस्कि-



वैशाखधर्मं निरत हेमकान्तं तु पालय । निष्पापमेनं मद्भक्तं पित्रे देहि पुरं गतः ॥ ६७ ॥
मदीरितेन वाक्येन कुशकेतुं च बोधय । सर्वधर्मोज्झितो वापि ब्रह्मचर्यादिवर्जितः ॥ ६८ ॥
वैशाखधर्मनिरतो मत्प्रियः स्यान्न संशयः । कृतागा अपि त्वत्पुत्रो मुनित्राणपरायणः ॥ ६९ ॥
वैशाखे छत्रदानेन निष्पापो नात्र संशयः । तेन पुण्यप्रभावेण शान्तो दान्तश्चिरायुषः ॥ ७० ॥
शौर्यौदार्यगुणोपेतस्त्वत्समोऽयं गुणैरपि । तस्मादेनं राज्यभारे संस्थापय महाबलम् ॥ ७१ ॥
विष्णुनैवं समाज्ञप्तमित्यादिश्य नृपोत्तमम् । पितृवंशे हेमकान्तं स्थाप्यायाहि च मां पुनः ॥ ७२ ॥

एको यो मेरा भक्तकन उसको बाबुलाई सुम्प, उसको शहरमा गएर।॥६७॥ मैले भनेकाकुराले कुशकेतुलाई बुझाओ। 'सारा धर्म त्यागेको अथवा ब्रह्मचर्य आदि नियम नभएको पनि॥६८॥मानिस वैशाखको धर्ममा लागेको छ भने त्यो मेरो प्यारो हुन्छ, यसमा कुनै संशय छैन। पाप गरेको पनि तिम्रो छोरो, मुनिको रक्षामा लाग्दा॥६९॥वैशाखमा गरेको छातादानले पाप रहित भयो, यसमा कुनै शंका छैन। त्यसै छातादानको प्रभावले शान्त, दान्त र दीर्घायु भएको ॥७०॥ यो शूरता, उदारता आदिले युक्त भएको छ र अरू गुणहरूले पनि अब तिमीसमान भएको छ। त्यसकारण यस महाबलीलाई राज्यको भार सुम्प ॥७१॥ भनी विष्णुले आज्ञा भएको छ भनेर राजाहरूमा उत्तम कुशकेतुलाई अह्राई बाबुको वंशमा हेमकान्त-लाई राखी मभाठौं आऊ ।७२॥ यसरी भगवान्ले अह्राइएको बलवान विष्वक्सेन हेमकान्तकहाँ पुगेर, यमदूतहरूलाई

इत्यादिष्टो भगवता विष्वक्सेनो महाबलः । हेमकान्तं समासाद्य यमदूतान्निवार्य च ॥ ७३ ॥
पाणिनाशु तमेनं वै पस्पर्शाङ्गेषु भूमिपम् । भगवद्भक्तसंस्पर्शाद्गतव्याधिः क्षणादभूत् ॥ ७४ ॥
विष्वक्सेनस्ततस्तेन सह तस्य पुरीं ययौ । तं दृष्ट्वा विस्मयाविष्टः कुशकेतुर्महाप्रभुः ॥ ७५ ॥
ननाम शिरसा भक्त्या दण्डवत् पतितो भुवि । गृहं प्रवेशयामास पार्षदं परमात्मनः ॥ ७६ ॥
स्तुत्वा च विविधैः स्तोत्रैः पूजयामास वैभवैः । तस्मै प्रीतमनाः प्राह विष्वक्सेनो महाबलः ॥७७॥
हेमकान्तं समुद्दिश्य यदुक्तं विष्णुना पुरा । तत् श्रुत्वा कुशकेतुश्च पुत्रं राज्ये निवेश्य च ॥७८॥
विष्वक्सेनाभ्यनुज्ञातः सभार्यो वनमाविशत् । विष्वक्सेना हेमकान्तमनुमन्त्र्याभिपूजितः ॥ ७९ ॥

हटाएर ॥७३॥ त्यस पापी राजालाई उसका अङ्गहरूमा आफ्ना हातले चाँडै नै सुम्सुम्याए । भगवानका भक्तको स्पर्शले तुरुन्तै व्याधिरहित भयो ॥७४॥ अनि त्यसैसित विष्वक्सेन उसको नगरमा गए । तिनलाई देखेर प्रभु कुशकेतु आश्चर्यचकित भए ॥७५॥ भक्तिपूर्वक भूइँमा दण्ड ( लौरो ) झैं पसारिएर शिरले ढोगे र परमात्माका पार्षदलाई घरभित्र प्रवेश गराए ॥७६॥ अनेक प्रकारका स्तोत्रले स्तुति गरेर अनेक वैभवहरूले उनको पूजा गरे । महाबली विष्वक्सेनले धेरै खुशी भएर, हेमकान्तको उद्देश्य गरेर पहिले विष्णुले जति कुरा भनेका थिए ती सबै उनलाई भने । त्यो सुनेर कुशकेतुले छोरालाई शासन कार्यमा राखेर॥७७-७८॥ विष्वक्सेनले उपदेश गरिएका उनी आफ्नी पत्नीसहित भै वनमा गए। विष्वक्सेन पनि हेमकान्तलाई सरसल्लाह दिएर,हेमकान्तले पूजिएका हुँदा॥७९॥उदार दिलका, बुद्धिमान् उनी विष्णुका पासमा रहन श्वेत-



श्वेतद्वीपं ययौ धीमान् विष्णुपार्श्वे महामनाः । हेमकान्तस्ततो राजा वैशाखोक्तान्शुभावहान्॥८०॥
विष्णुप्रीतिकरान्धर्मान्प्रतिवर्षं चकार ह । ब्रह्मण्यो धर्ममार्गस्थः दान्तो शान्तो जितेन्द्रियः ॥८१॥
दयालुस्सर्वभूतेषु सर्वयज्ञेषु दीक्षितः । समृद्धः सर्वसम्पद्भिः पुत्रपौत्रादिभिर्वृतः । भुक्त्वा भोगान्
समस्तांश्च विष्णुलोकमवाप्तवान् ॥ ८२ ॥ नेक्षेत्तु वैशाखसमांश्च धर्मान् सुखप्रयत्नान् बहुपुण्य-
हेतून् । पापेन्धनौघाग्निनिभान्स्तुलभ्यान् धर्मादिमोक्षान्तपुमर्थहेतून् ॥८३॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे छत्रदानप्रशंसनं नाम दशमोऽध्यायः॥१०॥

द्वीपमा गए । तब राजा हेमकान्तले पनि वैशाख महीनामा गर्न बताइएका, कल्याणकारी॥८०॥ विष्णुलाई खुशी गराउने धर्महरू हरेक साल गरे । ब्राह्मणहरूमा भक्ति गर्ने, धर्ममार्गमा रहने, शान्त, दान्त, जितेन्द्रिय॥८१॥ सारा प्राणीमा दयालु, सारा यज्ञमा दीक्षित, सारा सम्पत्तिले परिपूर्ण, छोरा-नाति पनातिहरूले घेरिएको भै सबका भोगहरू भोगेर अन्त्यमा विष्णुको लोक प्राप्त गरे ॥८२॥ सुखैले गर्न सकिने, धेरै पुण्यको कारण भएका, पापरूपी इन्धनको समूहलाई नाश गर्ने अग्नि तुल्य भएको, सजिलै पाइने धर्मदेखि लिएर मोक्षपर्यन्त पुरुषार्थको कारण भएको, वैशाख महीनाको धर्मको समान धर्म अरू देखिदैन ॥८३॥

श्रीस्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीषको संवादमा छत्रदान प्रशंसन नामको दशौं अध्याय सकियो ॥ १० ॥

# अथ एकादशोऽध्यायः

मैथिल उवाच–वैशाखधर्माः सुलभाः पुण्यराशिविधायकाः। विष्णुप्रीतिकराः सद्यःपुमर्थानांतु हेतवः ॥ १ ॥ न प्रख्याताः कथं लोके शाश्वताः श्रुतिचोदिताः । प्रख्याता राजसा धर्मास्तामसा अपि भूरिशः ॥ २ ॥ दुर्घटा बहुयत्नाश्च बहुद्रव्यव्ययावहाः । केचिन्माघं प्रशंसन्ति चातुर्मास्यान् परे जगुः ॥३॥ व्यतीपातादिधर्मांश्च वर्णयन्तीह भूरिशः । एतद्विवेकं विस्तार्य श्रोतुकामायमेवद ॥४॥ श्रुतदेव उवाच–शृणु भूप प्रवक्ष्यामि न प्रख्याता इमे कथम् । इतरषां च धर्माणां कथं ख्यातिश्च

मैथिल राजाले सोधे–पुण्यका राशि दिने, विष्णुलाई खुसी तुल्याउने, तुरुन्त धर्म अर्थ काम मोक्ष दिन कारण भएका सजिलै गर्न सकिने यस्ता वैशाखका धर्महरू॥१॥ श्रुतिहरूमा बताइएका, शाश्वत भएर पनि लोकमा किन प्रसिद्ध छैनन् ? बड़ा कठिनले गरिने, ठूलो परिश्रम सफलहुने, धेरै धन खर्च गर्नुपर्ने राजसधर्म र तामस धर्म भने खूब प्रसिद्ध छन् । कोही भने माघको प्रशंसा गर्दछन् , कति चतुर्मासाका धर्मलाई असल मन्छन्॥२-३॥ कति विद्वान्हरू यहाँ व्यतीपात आदि धर्म-हरूको धेरै धेरै वर्णन गर्छन्,यो फरक-फरक विचारको कारणसुन्न चाहने मलाई विस्तारपूर्वक कहिबक्सियोस्॥४॥ श्रुतदेवले भन्नुभयो—हे राजन् ! यी वैशाख धर्म किन प्रख्यात भएनन ? र अरू धर्मतरूको चाहिं संसारमा ख्याति कसरी भयो ?



भूतले ॥ ५ ॥ राजसास्तामसा भूमौ बहवः कामुका जनाः । इच्छन्त्यैहिकभोगाँस्ते पुत्रपौत्राँश्च सम्पदः ॥ ६ ॥ क्वचित्कथञ्चन क्वापि जनेष्वेकोतिकृच्छ्रतः । स्वर्गाय यतते लोके तस्माद्यज्ञादि-सत्क्रियाः ॥ ७ ॥ कुरुतेऽतिप्रयत्नेन मोक्षं नोपासते नरः । क्षुद्राशा भूरिकर्माणो जनाकाम्यानुपा-सते ॥८॥ प्रख्याता राजसा धर्मास्तामसा अपि तेन वै । न ख्याताः सात्विका धर्मा हरिप्रीतिकरा इमे ॥९॥ निष्कामका इमे धर्मा ऐहिकामुष्मिकप्रदाः । न जानन्ति जना मूढा मोहिता देवमायया ॥ १० ॥ यथाऽऽधिपत्ये सम्प्राप्ते सर्व सिद्धो मनोरथः । मोहनार्थं स्थलं प्राप्तमाधिपत्यं न हीयते

त्यसको कारण सुन ! ॥५॥ संसारमा राजस र तामस प्रकृतिका धेरै यस्ता कामुक जन छन् जो कि ती संपत्ति,छोरा-नाति इत्यादि सांसारिकसुख-भोग चाहन्छन्॥६॥संसारमा हजारौं मनुष्यहरूमा यौटा कोही कहीं कतै गरी अत्यन्तदुःखसहेर स्वर्ग प्राप्तिका लागि प्रयत्न गर्दछ; त्यसै कारण उ यज्ञ आदि असल कार्य॥७॥गर्दछ,तर मानिसप्रयत्न गरेर मोक्षको उपासना गर्दैन । क्षुद्र आशा भएका मानिसहरू ठूला-ठूला कर्महरू गरेर सांसारिक भोगको इच्छा राख्छन्॥८॥त्यसै कारणले नै पनि राजस र तामस धर्महरू प्रख्यात छन्। वैशाखमा गरिने,हरिलाई प्रसन्न पार्ने यी सात्विक धर्महरूचाहिं प्रसिद्ध छैनन्॥९॥ सांसारिक र पारलौकिक दुवै सुख दिने, कामना-रहितका यी वैशाखी धर्महरू ईश्वरका मायाले मोहित भएका मूर्ख जन-हरू जान्दैनन्॥१०॥जसरी अधिकार पाएहुँदि सारा मनोरथ सिद्ध हुन्छ,मोहका लागिप्राप्त भएको अधिकारको स्थान नाश

॥ ११ ॥ कारणं च प्रवक्ष्यामि गोपनं भूतलेऽञ्जसा । यद्वैशाखोक्तधर्माणां सात्विकानां नृणामिह ॥ १२ ॥ सार्वभौमः पुरा कश्चिदिक्ष्वाकुकुलभूषणः । कीर्तिमानिति विख्यातो नृगपुत्रो महायशाः ॥१३॥ जितेन्द्रियो जितक्रोधो ब्रह्मण्यो राजसत्तमः । एकदा मृगयासक्तो वसिष्ठाश्रममाययौ॥१४॥ गच्छन्मार्गेददर्शाऽसौ वैशाखे धर्मनिष्ठुरे । भूयो भूयः कार्यमाणाञ्छिष्यैस्तस्य महात्मनः ॥१५॥ क्वचित्प्रपां प्रकुर्वन्ति छायामण्डपमेव च । तटप्रपातं निःसार्य वापीं कुर्वन्तिनिर्मलाम् ॥१६॥ सूपविष्टान् क्वचिद्वृक्षे व्यजनैर्वीजयन्ति च । क्वचिददुर्दीक्षुदण्डान् क्वचिद्गन्धान् क्वचित्फलम् ॥१७॥

हुँदैन ॥११॥ सात्त्विक मनुष्यहरूका लागि बताइएका वैशाखका धर्महरूको यस संसारमा गुप्त हुनाको जो कारण छ त्यो अहिल्यै म बताउँछु॥१२॥प्राचीन समयमा इक्ष्वाकु कुलको भूषण,ठूलो यशस्वी, नृग राजाको छोरो, कीर्तिमान भन्ने नामले प्रसिद्ध भएको कुनै चक्रवर्ती राजा थियो ॥ १३ ॥ इन्द्रिय जितेको, क्रोध जितेको, ब्राह्मणहरूको सेवा गर्ने, राजाहरूमा उत्तम उ एक दिन शिकारमा आसक्त भएको छँदो वसिष्ठको आश्रममा पुग्यो॥१४॥ बाटामा जाँदा कठ्ठर धर्मवाला वैशाख महीनामा ती महात्माका शिष्यहरूले बारम्बार गरिइरहेका वैशाखी धर्महरू उसले देख्यो॥१५॥कहीं पौशाला बनाइरहेका थिए, कहीं ओत लाग्ने ठाउँ बनाइरहेका थिए, कहीं तटका छाँगोसम्म पुग्नुपर्ने कष्ट पन्साउन कुलेपोद्वारा पानी ल्याएर बाटैमा निर्मल जलवाला पनेरा बनाइरहेका थिए ॥१६॥ कहीं रूखमनि मजासंग बसेकाहरूलाई पंखाले हंकिरहेका पनि थिए । कहीं उखुका लाँक्रा दिन्थे,कहीं चन्दन लगाइदिन्थे,कहीं रसिला ताजा फल बाँडिरहेका थिए॥१७॥कहीं मध्याह्नमा



मध्याह्ने छत्रदानं तु सायाह्ने पानकस्य च । क्वचिद्यच्छति ताम्बूलं नेत्रे कर्पूरलेपनम् ॥ १८ ॥ सुच्छाये च वने केचित्सुसंमृष्टाङ्गणे शुभे । केचिद्यास्तरयन्त्यद्धा वालुकानि हितानि च ॥ १९ ॥ कुर्वन्त्यान्दोलिकां राजन् वृक्षशाखावलम्बिनीम्। के यूयमिति पप्रच्छवासिष्ठा इतितेऽब्रुवन् ॥२०॥ किमेतदिति पप्रच्छ धर्मा वैशाखचोदिताः । सद्धर्महेतव इमे क्रियन्तेऽस्माभिरञ्जसा ॥ २१ ॥ वसिष्ठस्याज्ञया चेति तेऽब्रुवन्नृपपुङ्गवम् । एतदाचरणे पुंसां किं फलं कस्तु तुष्यति ॥ २२ ॥ एतद्विस्तार्य मे ब्रूत यूयं सम्यग्यथा श्रुतम् । इति राज्ञा तु संपृष्टा प्रत्यूचुस्ते महीपतिम् ॥ २३ ॥

छाता दान दिन्थे, कहीं साँझमा पन्ना प्याउँथे; कहीं मसालदार पान दिन्थे, कहीं आँखामा कपूर लाइदिन्थे॥१८॥ कति असल छायावाला वनमा आँगन सफा पारी बढारिरहेका थिए । कति यात्रीलाई कंकडले नबोचोस् भनी उनको कल्याणका लागि बाटामा चचाँडो बालुवा बिछाइरहेका थिए॥१९॥ हे राजन्! कति यात्रीहरूको मनोरञ्जनका लागि रूखका हाँगामा पीङ बनाइरहेका थिए । अनेक कार्य गरिरहेका तिनीहरूलाई राजाले—'तिमीहरू को हौ ?' भनी सोधे । उनीहरूले 'हामी वसिष्ठका शिष्य हौं' भने ॥२०॥ फेरि राजाले 'यो के गरेको ?' भनी सोधे । तब तिनीहरूले–'सद्धर्मको कारण भएका यी वैशाखमा गर्न बताइएका धर्महरू वसिष्ठको आज्ञालेहामीहरू चचाँडै गरिरहेका छौं' भनी भने । 'यो गर्नालि मानिसहरूलाई के फल मिल्छ ? को प्रसन्न हुन्छ ?॥२१-२२॥ यो कुरा विस्तारपूर्वक,तिनीहरूले जस्तो सुनेका हौ त्यस्तै ठीकसँग

गुरोराज्ञाक्रमेणैव कुर्वतां पथि सत्क्रियाः । नास्माकमवकाशोऽत्र गुरूं पृच्छ यथेप्सितम् ॥ २४ ॥
स वेत्ति तत्त्वतो नूनं धर्मानितान्महायशाः । इति शिष्यैर्वसिष्ठस्य प्रत्युक्तस्तु द्रुतं ययौ ॥ २५ ॥
वसिष्ठस्याश्रमं पुण्यं विद्याघोषोपबृंहितम् । समायान्तं नृपं वीक्ष्य वसिष्ठः प्रीतमानसः ॥ २६ ॥
आतिथ्यं विधिवच्चक्रेसानुगस्य महात्मनः । सूपविष्टः कृतातिथ्यस्ततः पप्रच्छ तं गुरुम् ॥ २७ ॥
राजावाचा मार्गेदृष्टं महाश्चर्यं त्वच्छिष्यैस्तु कृतं शुभम्। मया पृष्टं चतैर्नोक्त क्रियमाणंशुभावहम्॥२८॥
नास्माकमवकाशोऽत्र ह्येतद्धर्मप्रशंसने । कर्तव्या चक्रियाऽस्माभिर्गुरुणा या च चोदिता ॥ २९ ॥

मलाई बताओ !' यसरी राजाले सोधिएका तिनीहरूले राजालाई भने--॥२३॥ गुरुको आज्ञा-अनुसार बाटामा असल काम गरिरहेका हामीहरूलाई यहाँ अवकाश छैन, जस्तो इच्छाछ, गुरुजीलाई सोध्नुहोस्॥२४॥ ठूलो कीर्ति भएका उहाँ नै पनि धर्महरूलाई यथार्थ रूपले निश्चय गरेर जान्नुहुन्छ । यसरी वसिष्ठका शिष्यहरूद्वारा जवाफ पाएका राजा तुरुन्तै वसिष्ठ भाठाँ गए ॥२५॥ वेदध्वनिले गुँजिएको वसिष्ठको पुण्य आश्रममा आएका राजालाई देखेर प्रशन्न मन भएका वसिष्ठले ॥२६॥विधिपूर्वक राजाको अतिथि-सत्कार गरे । आतिथ्य गरिएका उनले आएका महात्माहरूका साथ आरामसँग बसेपछि अनि गुरुलाई सोधे॥२७॥ राजाले भने–'बाटामा तपाइँका शिष्यहरूले गरिएको आश्चर्यलाग्दो शुभ कार्य देखें । गरिइरहेको शुभकार्यको बारेमा सोद्धा उनीहरूले केयै भनेनन् ॥२८॥ गुरुले बताए-अनुसार हामीहरूले काम गरिएको छ, यस बेला यस धर्मको प्रशंसा गर्न हामीलाई फुर्संत छैन॥२९॥ गुरुमाठाँ जानुहोस् भनी तिनीहरूले भनेकाले, शिकारमा आसक्तचित्त



इति सम्भाष्य तं शिष्यं जातहर्षस्तमब्रवीत् । शृणु भूप प्रवक्ष्यामि यत्पृष्टोऽहं त्वयाऽधुना ॥३६॥
यस्य श्रवणमात्रेण मुच्यन्ते सर्वकिल्बिषैः । सर्वधर्मान् परित्यज्य वर्ततेऽविषयात्मकः ॥३७॥
वैशाखस्नाननिरतः स प्रियो मधुविद्विषः । साङ्गान् धर्माननुष्ठाय वैशाखो येन नादृतः ॥३८॥
स्नानदानार्चनैः पुण्यैस्तस्य दूरतरो हरिः । अस्नात्वा चाप्यदत्वा च वैशाखो येन नीयते ॥३९॥
कर्मणा स तु चाण्डालो नात्र कार्या विचारणावैर्म । शाखोक्तैर्हाधर्मैर्येन चाराधितो हरिः ॥४०॥
तैश्च तोषं समायाति प्रददाति समीहितम् । लक्ष्मीभर्ता जगन्नाथो ह्यशेषाघौघनाशनः ॥४१॥

उनलाई भने—हे राजन् ! तपाईंले अहिले मलाई जो सोध्नुभो सुन्नुहोस्, त्यसबारे म भन्दछु ॥ ३६ ॥ जुन सुन्नाले मात्र प्राणी सारा पापबाट छुट्तछन् र सम्पूर्ण सांसारिक धर्म छोडेर विषयमा अनासक्त भएर रहन्छ॥३७॥जो वैशाख महीनाको स्नान नियमपूर्वक गर्छ, त्यो भगवान् विष्णुको प्रिय हुन्छ । सारा धर्महरूलाई विधिपूर्वक गरेर पनि स्यान दान पूजा र पुण्यकालले वैशाखको धर्म जसले गरेन, त्यसदेखि हरि भगवान् टाढा रहनुहुन्छ । नन्वाहेर, दान नदिएर जसले वैशाख बिताइन्छ ॥ ३८-३९ ॥ त्यस कर्मले त्यो चांडाल हो, यसमा कुनै विचार गर्नुपर्दैन । वैशाख महीनामा गर्न बताइएका महाधर्महरूद्वारा जसले हरिको आराधना गर्‍यो ॥ ४० ॥ ती धर्मले भगवान् खुशी हुनुहुन्छ र लक्ष्मीका भर्ता, समस्त पाप समूहलाई नाश गर्ने जगत्का नाथले चाहेको कुरो पुर्‍याइदिनुहुन्छ ॥ ४१ ॥ धेरै धन र कष्टले हैन कि सूक्ष्म धर्मले नै

धर्मैः सूक्ष्मैश्च प्रीणाति न प्रयासैर्धनैरपि । भक्त्या सम्पूजितो विष्णुः प्रददाति समीहितम् ॥४२॥
तस्माद्राजन् सदा भक्तिः कर्तव्या मधुविद्विषि । जलेनापि जगन्नाथः पूजितः क्लेशहा हरिः॥४३॥
परितोषं व्रजत्याशु तृषार्तः सलिलैर्यथा । महदप्यल्पदं कर्म तथा लघ्वपि भूरिदम् ॥४४॥
कर्मणो भूरि हेतुत्वे न हेतू महदल्पके । किन्तु कर्मस्वरूपं च गहना कर्मणो गतिः ॥४५॥
वैशाखोक्ता इमे धर्माः स्वल्पायासकृता अपि । बहुव्ययविहीनाश्च विष्णोः प्रीतिकराः शुभाः॥४६॥
तस्मात्त्वमपि भूपाल वैशाखोक्तं समाचर । त्वद्राष्ट्रीयैर्जनैः सर्वैः कारयेमान् शुभावहान् ॥४७॥

भगवान प्रसन्न हुनुहुन्छ; भक्तिसहित पूजा गरिएका विष्णु इच्छित वर दिनुहुन्छ ॥४२॥ त्यसैहेतु हे राजन्! भगवानमा सधैं भक्ति गर्नुपर्दछ। जस्तै—प्यासो व्यक्ति पानीले तत्काल तुष्ट हुन्छ; त्यस्तै जलैले पनि भक्तिपूर्वक पूजिएका हरि भगवान सारा कष्ट हरिदिनुहुन्छ। कति ठूला कर्म पनि थोरै फल दिने हुन्छन्; कति साना कर्म पनि धेरै फल दिन्छन् ॥३८-४४॥ कर्म ठूलो वा सानो भन्ने कारण छैन किन्तु कर्मको रूप हेरेर हुन्छ, कर्मको गति गहन छ॥४५॥ वैशाखमा गर्न बताइएका यी धर्म थोरै कष्टले गरिने र धेरै खर्च पनि नहुने, विष्णु भगवानलाई खुसी गराउने, कल्याणकारी छन् ॥४६॥ अतः हे राजन्! तपाईं पनि वैशाखमा गर्न बताइएका धर्महरू गर्नोस् र तपाईंका राज्यमा रहने सबै जनहरूलाई पनि यी कल्याणकारी धर्म गर्न लगाउनोस ॥४७॥ हे राजन्! जो अधम व्यक्ति अनेक प्रकारले बुझाउँदा पनि वैशाखमा गर्न कहिएका धर्महरू गर्दैन, त्यसलाई तपाईं दण्ड दिनुहोस॥४८॥ यसरी वसिष्ठले शास्त्रमा कहिएका सबै कुराहरूलाई



न करोति च यो धर्मान् वैशाखोक्तान्नराधमः । बहुधा शिक्ष्यमाणोऽपि स दण्ड्यस्तव भूपते ॥४८॥
इत्यावश्यकतां सम्यक् शास्त्रे व्युत्पाद्य तस्य च। पश्चाद्वैशाखनिर्दिष्टान् धर्मान्प्रोवाच सर्वशः ॥४९॥
श्रुत्वा तान् सकलान् धर्मान् गुरुं सम्पूज्य भक्तितः। स राजा गृहमापन्नः सर्वान्धर्मांश्चकार ह॥५०॥
भक्तिमान् केशवे राजन् देवदेवे निरञ्जने । नान्यं पश्यति देवेशात् पद्मनाभान्महीपतिः ॥५१॥
भेरीमुद्घाष्य मातङ्गे स्वराष्ट्रेऽघोषयद्भटैः । अष्टवर्षाधिको मर्त्यो ह्यशीतिर्नहि पूर्यते ॥ ५२ ॥
प्रातर्न स्नाति मेषस्थे सूर्ये सर्वोऽपि यो जनः । स मे दण्ड्यश्च वध्यश्च विर्यास्यो विषयाद्ध्रुवम् ॥५३॥

सम्झाई उसका बाद वैशाखमा निर्देश गरिएका सबै धर्महरू भने ॥४९॥ ती सारा धर्म सुनेर गुरुलाई भक्तिसहित पूजा गरी ती राजा आफ्नू घर आए र सारा धर्म गरे ॥५०॥ हे राजन्! देवताका पनि देवता, निरंजन, केशव भगवानमा भक्तिमान ती राजा देवताहरूका मालिक पद्मनाभलाई छाडी अरूलाई ईश्वर देख्दैनथे ॥५१॥ आफ्नू राज्यमा आएर तिनले हात्तीमा दमहा रखाई आफ्नू राज्यभरिमा बन्दीहरूद्वारा घोषणा गराए कि आठ वर्ष नाघेका असी वर्ष नपुगेका मानिस ॥५२॥ यदि मेषका सूर्य हुँदा बिहान न्वाउँदैन भने जोसुकै मानिस होस त्यो मबाट दण्ड गरिने छ मारिनेछ र देशबाट निकालिने छ ॥५३॥ पिता-पुत्र, स्त्री, मित्र चाहे कोही होस वैशाख-धर्मले हीन छ भने म त्यसलाई शत्रुसमान

पिता वा यदि वा पुत्रो भार्या वाऽथ सुहृज्जनः । वैशाखधर्महीनश्च निग्राह्यो दस्युवन्मया ॥५४॥
ददध्वं विप्रमुख्येभ्यः स्नात्वा प्रातर्जले शुभे । प्रपादानादिधर्मांश्च कुरुध्वं शक्तितोऽनघान् ॥५५॥
विप्रं च धर्मवक्तारं ग्रामे ग्रामे न्यवेशयेत् । पञ्चानामेव ग्रामाणामकरोदधिकारिणम् ॥ ५६ ॥
दण्डार्थं त्यक्तधर्माणां दश वाजिनिषेवितम् । एवं प्रवृष्टे सर्वत्र सार्वभौमस्य शासनात् ॥ ५७ ॥
प्रवृद्धो धर्मवृक्षोऽयं सर्वदेशेषु विस्तरात् । ये केचिन्निधनं यान्ति भूपालविषये नराः ॥ ५८ ॥
प्रमादाद्वा नृपश्रेष्ठ ते यान्दि हरिमन्दिरम् । अवश्यं वैष्णवो लोकः प्राप्यते मानवैर्द्रुतम् ॥ ५९ ॥
व्याजेनापि सकृत्स्नातः प्रातर्मेषगते रवौ । सर्वपापविनिर्मुक्तो याति विष्णोः परं पदम् ॥ ६० ॥

ठान्नेछु ॥५४॥ बिहानै निर्मल जलमा न्वाहेर श्रेष्ठ ब्राह्मणहरूलाई दिने र शक्तिअनुसार पाप नाश गर्ने पौशाला थापने, दान आदि दिने धर्महरू पनि गर्ने गर ॥५५॥ भन्ने घोषणा गराई गाउँ-गाउँमा धर्म-प्रचार गर्ने विद्वान् ब्राह्मण राखे र पाँच-पाँच गाउँमा एक अधिकारी (हाकिम) खटाए॥५६॥ धर्म त्याग्नेहरूलाई दण्ड दिनका लागि दसोटा घोड़चढ़ी राखे । यसरी सर्वत्र प्रबन्ध गरेपछि उस चक्रवर्तीका शासनले ॥५७॥ यो धर्मरूपी वृक्ष सबै देशमा फैलँदै बढ्यो । यस्ता राजाको राज्यमा जो कोही मानिस कालगतिले वा लापरवाहीले मर्दछन् हे नृपश्रेष्ठ, ती मृतात्माहरू अवश्य हरिको मन्दिरमा जान्छन् त्यस्ता मनुष्यहरूले तुरुन्तै वैष्णवलोक पाउँछन्॥५८-५९॥मेषमा सूर्य गएको महीनामा संयोगले या आफ्नू सफाईकै लागि



न प्राप्नोति यमं धर्मं सकृद्वैशाखस्नानतः । वैलेख्यमगमद्राजा रविसूनुस्तदा नृप ॥ ६१ ॥
लेख्यकर्मणि विश्रान्तश्चित्रगुप्तोऽभवत्तदा । मार्जितानि च लेख्यानि पुरा पापोद्भवानि च ॥ ६२ ॥
गच्छद्भिर्वैष्णवं लोकं स्वकर्मस्थैर्जनैः क्षणात् । शून्यास्तु नरकाः सर्वे पापप्राणिविवर्जिताः ॥६३॥
भग्नयानोऽभवन्मार्गो वैशाखस्य प्रभावतः । सर्वोऽपि विमलाकारो जनो याति हरेः पदम् ॥६४॥
दिवौकसां तु ये लोकाः शून्याः सर्वे तथाऽभवन् । शून्ये त्रिविष्टपे जाते शून्येषु नरकेषु च॥६५॥
नारदो धर्मराजानं गत्वा चेदमुवाच ह । नाक्रन्दः श्रूयते राजन् प्राक् श्रुतो नरके यथा ॥६६॥

एकैपल्ट न्वाहे पनि सारा पाप छुटेर त्यो मानिसले विष्णुको परमपद पाउँछ॥६०॥ एकैपल्ट पनि वैशाख न्वाह्यो भने उसले यमराजको लोकमा जानुपर्दैन । हे राजन् ! त्यसरी ती सूर्यवंशी राजाले भावीको लेखलाई रद्दी गराइदिए ॥६१॥ र चित्रगुप्तले पनि पापीहरूको पाप लख्ने कामबाट बिसाउन पाए । पहिले पाप कर्महरू जो लेखिएका थिए ती सारा मेटाइदिए ॥६२॥ वैशाखमा गरिएका आफ्ना कर्मले मानिसहरू तुरुन्त विष्णुको लोकमा गएकाले सारा नरक शून्य भयो । समस्त प्रजाहरू पापरहित भए॥६३॥ वैशाखमा गरिएका धर्मका प्रभावले यममार्ग यात्रीरहित भयो । सारा जन निष्काम,स्वच्छ रूपका भई विष्णुलोकमा ज नथाले ॥ ६४ ॥ दौताहरूका जो स्वर्गलोक थिए ती पनि सब प्राणी वैकुण्ठ पुगेकाले शून्य भयो । यस्ता प्रकारले स्वर्ग खाली भएपछि र सारा नरकहरू रित्तिएपछि॥६५॥ नारदजी धर्मराज भाठौं पुगी हे राजन् ! नर्कमा पैले जस्तो सुनिन्थ्यो त्यस्तो चिल्लाहट अबेल किन सुनिन्न ? यस्तो साधे॥६६॥ त्यस्तै खराब कर्मका बारेमा कुनै

तथा न क्रियते लेख्यं किञ्चिद्दुष्कृतकर्मणि। चित्रगुप्तो मुनिरिव स्थितोऽद्य मौनमास्थितः ॥६७॥
कारणं ब्रूहि राजेन्द्र न यान्ति तव मन्दिरम्। मनुष्याः पापकर्माणो मायादम्भविवर्जिताः ॥६८॥
वैशाख एवमुक्ते तु वचने नारदेन महात्मना। आह वैवस्वतो राजा किञ्चिद्दैन्यसमन्वितः ॥ ६९ ॥ मा०
११३ योऽयं नारद भूपालः पृथिव्यां साम्प्रतं स्थितः। सोऽतिभक्तो हृषीकेशे पुराणपुरुषोत्तमे ॥ ७० ॥ अ.११
प्रबोधयति वैशाखधर्मं भेरीस्वनेन च। अष्टवर्षाधिको मर्त्यो ह्यशीतिर्न हि पूर्यते ॥ ७१ ॥
यो वै त्यक्तवैशाखः स मे दण्ड्यो न संशयः। तद्भयाद्धि जनाः सर्वे नोल्लंघन्ति कदाचन॥७२॥

लेख पनि लेखिदैन। यी चित्रगुप्त पनि मुनिझैं चुपचाप बसिरहेका छन्॥६७॥हे राजेन्द्र ! माया र घमण्ड भरिएका पापी मनुष्यहरू तपाईंका मन्दिरमा अघेल किन आइरहेका छैनन् ! यसको कारण बताउनुहोस् ॥६८॥ यसरी महात्मा नारदले कारण सोद्धा क्यै खिन्न भएका वैवस्वत (धर्मराज) राजाले भने ॥६९॥ हे नारद ! अहिले पृथ्वीमा रहेको जो यो राजा छ पुराणपुरुषोत्तम हृषीकेश भगवान्मा अति भक्ति गर्नेवाला छ ॥७०॥ उनी दमाहा पिटाई आफ्ना प्रजाहरूलाई वैशाखको धर्म बोध गराइरहेका छन्। आठ वर्ष नाघेका असी वर्ष नपुगेको मानिस ॥७१॥ जो वैशाखको धर्म गर्दैन त्यसले मद्वारा सास्ती पाउनेछ, यसमा फरक पर्नेछैन; त्यस डरले नै सारा मानिसहरू कुनै हालतमा पनि आज्ञा उल्लंघन गर्दैनन्॥७२॥ नारद ! त्यही पुण्य कर्मले वैकुण्ठ गइरहेका छन् ! किनकि वैशाखको धर्म गर्नाले मानिसहरू हरिको मन्दिरमा जान्छन्

गच्छन्ति वैष्णवं धाम कर्मणा तेन नारद। वैशाखसेवनाल्लोका यास्यन्ति हरिमन्दिरम् ॥७३॥
तेन राज्ञा मुनिश्रेष्ठ मार्गो लुप्तो ममाधुना। कृता हि नरकाः शून्या लोकाश्चापि दिवौकसाम्॥७४॥
वैशाख विश्रान्ता लेखको लेख्यालिखितं मार्जितं जनैः। वैशाखमासधर्मस्य माहात्म्यं त्वादृशं मुने ॥७५॥ मा०
११४ ब्रह्महत्यादिपापानि विमुक्तानि जनैर्द्विज। कृत्वा वैशाखकृत्यानि यान्ति विष्णोः परं पदम् ॥७६॥ अ.११
सोऽहं काष्ठसमो जातो न कश्चिन्मम गोचरः। युद्धं कृत्वा तु तं हन्मि सर्वथाऽद्य महाबलम् ॥७७॥
अकृत्वा स्वामिकार्यं तु निर्व्यापारो यदि स्थितः। तस्य वित्तं समश्नाति स याति नरकं ध्रुवम् ॥७८॥

॥७३॥ हे मुनिश्रेष्ठ ! तिनै राजाले गर्दा अहिले मेरो बाटो खाली भएको छ। ती राजाले त नरकहरूलाई त खाली पारे-पारे ! धौताको लोक ( स्वर्ग )—हरूलाई पनि रित्ता गराइदिए ॥ ७४ ॥ पाप-लेखक पनि लेख्ने कामबाट बिसाइरहेछ, लेखिएका पापहरू पनि मानिसहरूले मेटाइदिए। हे मुनि ! वैशाख महीनाको धर्मको माहात्म्य यस्तो छ॥७५॥ हे मुनि मानिसहरूले वैशाखका धर्महरूलाई गरेर ब्रह्महत्यादि पापहरूबाट छुटी विष्णुको परमपद पाउँछन् ॥ ७६ ॥ पापीहरूलाई घोर दण्ड दिन प्रसिद्ध भएको उही म अहिले काठजस्तो (किंकर्तव्यविमूढ) भएको छु। मलाई क्यै छुइरहेको छैन। मलाई त यस्तो लाग्छ कि आवै सहसा युद्ध गरेर उस बलवान्लाई मारिद्युँ ॥७७॥ किनकि स्वामीले खटाएको काम नगरी यदि कोही नोकर काम-न-काजको भई बस्छ भने,स्वामीको धनले त्यसलाई खान्छ अर्थात् उसको नूनले पिर्छ र उ नोकर अवश्यै

यदि दैवादवध्योऽयं तदा ब्रह्माणमेत्य च । निवेद्य तस्मै तत्सर्वं पश्चात् स्वस्थो भवाम्यहम् ॥ ७९ ॥
इत्युक्त्वा द्विजमामन्त्र्य सानुगः प्रययौ भुवम् । स कालो महिषारूढो दण्डमुद्यम्य भीषणम् ॥८०॥
मृत्युरोगज्वराद्यैश्च पार्षदैश्च महोत्कटैः । पञ्चाशत्कोटि-संख्याकैर्यमदूतेश्वरैर्वृत ॥ ८१ ॥
स तूर्णं तस्य राजर्षे रुरोध सकलां पुरीम् । शङ्खं दध्मौ महाघोषं सर्वलोकभयङ्करम् ॥ ८२ ॥
तच्छ्रुत्वा स तु राजर्षिर्ज्ञात्वा वैवस्वतं यमम् । ससज्जीकृतसर्वस्वः पतनान्निर्ययौ रुषा ॥ ८३ ॥
तयोर्युद्धमभूत्तत्र: भीषणं रोमहर्षणम् । मृत्युं कालं तथा रोगं यमदूतपतींस्तथा ॥ ८४ ॥

नरकमा जाकिन्छ ॥ ७८ ॥ यदि दैवसंयोगले यो मारिएन भने, तब ब्रह्मा भाठीं उहाँलाई त्यो सबै कुरो निवेदन गरेर अनि मात्र म दुक्क हुन्छु ॥७९॥ यति भनी मुनिसँग सल्लाह गरेर अनुचरले युक्त भै उ पृथ्वीमा गयो । भैंसीमाथि चढेको त्यो कालपुरुष भयंकर लाठो उजारेर॥८०॥ मृत्यु रोग ज्वरो आदि भयंकर पार्षदहरू र पचास करोड ठूलठूला यमराजका दूतहरूले घेरिएको भएर॥८१॥उसले तुरुन्तै ती राजाको समस्त शहरलाई घेर्‍यो र हाँक दिनका लागि सारा मानिसलाई-भय गर्ने ठूलो आवाज भएको शंख बजायो॥८२॥त्यो शब्द सुनेर ती राजर्षिले 'वैवस्वत यम हो' भन्ने जानेर सेना आदि आफ्नो सारा शक्ति तयार पारी उनी क्रोधले शहरबाट निस्के॥८३॥त्यहाँ ती दुइको रौं नै जुरुङ्ङ हुने र भयङ्कारी भय-ङ्कर लडाई भयो, मृत्यु, काल, रोग र त्यस्तै यमदूतका सेनापतिहरूलाई पनि॥८४॥एकै छिनमा जितेर ती राजर्षिले टाढा



जित्वा क्षणेन राजर्षिर्द्रावयामास दूरतः । ततः क्रुद्धो यमो राजा स्वयमभ्येत्य तं रुषा ॥ ८६ ॥
युयुधे बहुभिर्बाणैः सिंहनाद चकार च । चकर्त राजा तस्यापि कार्मुकं विशिखैस्त्रिभिः ॥ ८६ ॥
पुनश्चर्मासिमादाय यमो हन्तुमथागमत् । तं दृष्ट्वा तु नृपः क्रुद्धः पुनश्छित्वाऽसिचर्मणी ॥ ८७ ॥
निचखान ललाटे च शरं कालोरगप्रभम् । यमस्तेनाहतः क्रुद्धस्ततो दण्डमुपाददे ॥ ८८ ॥
ब्रह्मास्त्रेण च संमन्त्र्य दण्डं तस्मै मुमोच ह । हाहाकारो महानासीज्जनानां पश्यतां तदा ॥८९॥
तदा विष्णुः स्वभक्तस्य रक्षार्थं प्राहिणोदरिम् । विष्णुमुक्तं तदा चक्रं शीघ्रमागत्य तद्रणे ॥९०॥

भगाइदिए । तब राजा यमराज क्रुद्ध भएर रिसले ए राघै भन्दै आफै ती राजाका पास आई ॥८५॥ असंख्य बाण वर्षाई युद्ध गरे र सिंह गर्जेझैं गर्जे पनि । त्यो घमण्डी यमराजको धनुलाई पनि राजाले केवल तीनोटै बाणले काटे ॥ ८६ ॥ अनि फेरि यमराज ढाल तलवार लिएर राजालाई मार्न आए । त्यसरी आएका तिनलाई देखेर क्रुद्ध राजाले फेरि तरवार र ढाललाई पनि काटिदिए ॥८७॥ कालो नागतुल्य एक बाण यमराजको निधारमा गाडिदिए । त्यस बाणका चोटले तिर-मिराएका क्रोधी यमराजले तब क्यै नलागेर आफ्नू भयङ्कर कालदण्ड उठाए॥८८॥ र ब्रह्मास्त्रले मन्त्रेर त्यो दण्ड राजाका उपर छोडे । तब तमाशा हेर्ने मानिसहरूको ठूलो हाहाकार भयो॥८९॥यत्तिकैमा विष्णु भगवान्‌ले आफ्नो भक्तको रक्षाका लागि अरिचक्र ताने । तब विष्णुले हानेको अरिचक्र त्यो युद्धमा आइपुगेर॥९०॥यमदण्डसँग युद्ध गरेर, त्यो ब्रह्मास्त्रलाई

यमदण्डेन संयुध्य तद्ब्रह्मास्त्रं निवार्य च। यमं हन्तुमथारेभे सहस्रारं महाद्भुतम् ॥ ९१ ॥
देवभक्तस्ततो भीतस्तदाऽस्तौच्चक्रमञ्जसा। सहस्रार नमस्तेऽस्तु विष्णुपाणिविभूषण ॥ ९२ ॥
त्वं सर्वलोकरक्षार्थे हरिणा च धृतं पुरा। त्वां याचेऽद्य यमं त्रातुं विष्णुभक्तं महाबलम् ॥ ९३ ॥
नृणां देव द्रुहां कालस्त्वमेव हि न चापरः। तस्मादेनं यमं रक्ष कृपां कुरु जगत्पते ॥ ९४ ॥
नृपेणैवं स्तुतं चक्रं यमं हित्वा नृपान्तिकम्। पुनर्ययौ महाराज देवानां पश्यतां दिवि ॥ ९५ ॥
ततो यमोऽतिनिर्विण्णो ब्रह्मणः सदनं ययौ। स ददर्श समासीनं मूर्तामूर्तजनैर्वृतम् ॥ ९६ ॥

पनि हटाएर हजारौं तारा झैं बढो आश्चर्यलाग्दो त्यस चक्रले यमराजलाई नै मार्न आँट्यो ॥९१॥ तब डराएका विष्णुभक्त राजाले त्यतिखेरै तुरुन्त चक्रको यसरी स्तुति गरे—हे नारायणका बाहुको अलङ्कार स्वरूप सहस्र धार! तपाईंलाई नमस्कार ॥९२॥ तिमी अघि सम्पूर्ण विश्वको रक्षाका लागि हरिद्वारा धारण गरियौ। विष्णुका भक्त, अत्यन्त बलिया तिमीमित यमराजको रक्षाका लागि आज म क्षमा माग्दछु ॥९३॥ दौताहरूको द्रोह गर्ने मनुष्यहरूका काल तिमी नै हौ, अर्को क्वै छैन, त्यसैकारण हे जगत्पति! यमराजको रक्षा गर्नुहोस् जनी गर्नोस् ॥९४॥ राजाले यसरी स्तुति गरिएको त्यो चक्र राजाकै नगीचमा यमराजलाई छाडेर देवताहरूले देख्तादेख्दै फेरि स्वर्ग गयो ॥९५॥ अनि यमराज अत्यन्त विस्मित भई ब्रह्माको घर गए। त्यहाँ उनले देहधारी र मृतात्माहरूले घेरिएर मजासित बसेका—॥९६॥ सारा विश्वका



सर्वाश्रयं जगद्बीजं सर्वलोकपितामहम्। उपास्यमानं विविधैर्लोकपालैर्दिगीश्वरैः ॥ ९७ ॥
इतिहासपुराणाद्यैर्वेदैर्विग्रहसंस्थितैः। मूर्तिमद्भिः समुद्रैश्च नदीभिश्च सरोवरैः ॥ ९८ ॥ देहव-
द्भिस्तथा वृक्षैरश्वत्थाद्यैरशेषतः। वापीकूपतडागैश्च मूर्तिमद्भिश्च पर्वतैः ॥९९॥ अहोरात्रैस्तथा
पक्षैर्मासैः संवत्सरैस्तथा। कलाकाष्ठानिमेषैश्च ऋतुभिश्चायनैर्युगैः ॥ १०० ॥ सङ्कल्पैश्च विकल्पैश्च
निमेषोन्मेषणैस्तथा। ऋक्षैर्योगैश्च करणैः पौर्णमासीन्दुसंक्षयैः ॥१०१॥ सुखैर्दुःखैर्भयैश्चैव
लाभालाभैर्जयाजयैः। सत्त्वेन रजसा चैव तमसा च समन्वितम् ॥१०२॥ शान्तिमूढातिघोरैश्च
विकारैः प्राकृतैरपि। वायुना चैव देवेन श्लेष्मपित्तादिभिर्वृतम् ॥१०३॥ तेषां मध्येऽविशत्सौरिः

आश्रय, जगतको बीज, सम्पूर्ण लोकका जिजुबाजे, अनेक थरिका लोकपाल र दिक्पालहरूले उपासना गरिने ॥९७॥ इतिहास र पुराणादिले, विग्रहमा स्थित वेदहरू, मूर्तिमान समुद्र, नदी-सरोवरहरूले ॥ ९८ ॥ त्यस्तै देह धारण गरेका सकल पीपल आदि रूखहरूले, वापी-कूप, पोखरीहरू र देह धारण गरेका पर्वतहरूले ॥ ९९ ॥ दिन-रात तथा पक्ष र महीना, संवत्सरहरू, कला-काष्ठा र निमेषहरू, ऋतु-अयन, युगहरूले ॥ १०० ॥ सङ्कल्प-विकल्प-चिम्लाई-हेराईहरू, ऋक्ष, योग, करण, औंसी पूर्णिमाहरूले ॥ १०१ ॥ सुख-दुःख, भयहरू र लाभ-हानि, जय-पराजयले, सत्व-रज-तमले युक्त भएर रहेका ॥१०२॥ शान्ति-मूढ-अघोरादिहरू र प्राकृतिक विकारहरू, वायु देवता, खकार-पित्तहरूले युक्त ब्रह्माजीलाई देखे ॥१०३॥

सव्रीडा च वधूर्यथा । विलोकयन्धराग्रष्ठ म्लानवक्त्रं व्यदर्शयत् ॥१०४॥ सम्प्रविष्टं यमं दृष्ट्वा सकाशस्थं सहानुगम् । विस्मितास्ते मिथः प्रोचुः किमर्थं भास्करिस्त्विह ॥१०५॥ सम्प्राप्तो लोककर्तारं द्रष्टुं देवं पितामहम् । निर्व्यापारः क्षणमपि योऽयं नास्ति रवेः सुतः ॥१०६॥ सोयमभ्यागतः कस्मात् कच्चित्क्षेमं दिवौकसाम् । आश्चर्यातिशयो यश्च संमार्जितपटस्त्वयम्॥१०७॥ लेखकस्तमनुप्राप्तो दैन्येन महतान्वितः । न कदाचित्पटो ह्यस्य मार्जितोऽधर्मभीरुणा ॥१०८॥

तिनीहरूका बीचमा हेर्दै ललाएकी नयाँ बुहारी झैं यमराज पसे, त्यस बेला उनी अत्यन्तै मलिन मुखमा भएका देखिन्थे ॥ १०४ ॥ पिछलग्गू नोकरहरूका साथ छातीमा हात राखेर कराक-कराक थोक्तै सभाभित्र पसेका यमराजलाई देखेर आश्चर्य-चकित भएका ती सभासदहरू परस्परमा कुरा गर्न लागे कि यी सूर्यपुत्र यहाँ ॥ १०५ ॥ जगत्को सृष्टि गर्ने पितामह धाताला‍ई भेट्न आए । यी रविका पुत्र त एकछिन पनि विनाकामै भएर बस्नेवाला हैनन्॥१०६॥तिनै यी यहाँ कसरी आइपुगे ? के धाताहरूको कल्याण त छ ? अत्यन्त आश्चर्यको कुरो त यो छ कि यिनको पाटी पनि सफासित पुछिएको छ ॥ १०७ ॥ असाध्यै निन्याउरो भएर उनको लेखक पनि पछि लागेर आएको छ । यिनको पाटो कुनै पनि धर्मात्माले कहिल्यै पुछिएको थिएन॥१०८॥ जुन कुरो न देखेको थियो न सुनेको थियो त्यो यहीं भैरहेको छ,यस्तो कुरा





अत्र दृष्टं श्रुतं वापि तदिहैव प्रपद्यते। एवमुच्चरतां तेषां भूतानां भूतशासनः ॥१०९॥ निपपाताग्रतो भूमौ ब्रह्मणो रविनन्दनः । कृन्तमूलो यथा शाखी त्राहि त्राहीति वै रुदन् ॥११०॥ परिभूतोऽस्मि देवेश संमार्जितपटः कृतः । त्वयि नाथेऽपि विफलं पश्यामि कमलासन ॥१११॥ एवं ब्रुवन् हि निश्चेष्टो बभूव नृपसत्तम । ततः कोलाहलः शब्दः सभायां समजायत ॥११२॥ यो हि चादयतं मर्त्यान्सर्वान्स्थावरजङ्गमान् । स वै रोदति दुःखार्तः कस्माद्वैवस्वतो यमः॥११३॥ जनसन्तापकर्तायः सोऽचिराद्यात्यशोभनम् । न हि दुष्कृतकर्ता हि नरःप्राप्नोति शोभनम्॥११४॥

गरिरहेका तिनीहरूका बीचमा प्राणीहरूको भूत (प्रेतशरीर) मा शासन गर्ने॥१०९॥ सूर्यका पुत्र, यमराज फेद काटिएका रूख झैं ब्रह्माको अगाडि भूईंमा "रक्षा गर्नोस्, रक्षा गर्नोस्" भनी कोकोहोलो गरी रुँदै ढ्वाङ्ङ पच्छारिए ॥११०॥ हे देवेश! पाटी पुछिएको भएर तिरस्कृत भएको छु। तपाईं जस्तो मालिक छँदाछँदै पनि हे कमलासन ! म आफूलाई विफल देखिरहेको छु॥१११॥हे राजन् ! यस्तो भन्दाभन्दै उ बेहोश भयो । तब यमराजलाई बेहोश भएको देखेर सभामा कोला-हल मच्चियो ॥ १११ ॥ जुन यमराज सबै प्राणी,स्थावर जङ्गमलाई नचाउँदछ, उही वैवस्वत यम किन दुःखले छटपटाएर रोइरहेको छ ? ॥११३॥ जुन यमराज मानिसहरूलाई दुःख दिनेवाला छन् उनै यति चाँडै यस्तो दुःखी हुन्छन् भने यो सिद्ध हुन्छ कि पाप गर्ने मनुष्य निश्चय नै कल्याण पाउँदैन॥११४॥तब वायुले ब्रह्माजीको आशय बुझेर ती जम्मा भएका सभासद्हरूको विवादलाई 'सारा सभासद्हरू चुपो लाग' भनी रोकिदिए॥११५॥र सबै जनलाई पर-पर हटाएर प्राणीमात्र-

ततो निवारयामास वायुस्तेषा वचस्तदा । लोकानां समवेतानां मतं ज्ञात्वा स वेधसः ॥११५॥
निवार्य लोकान्मार्तण्डि शनैरुत्थापयन्मरुत् । भुजाभ्यां शालपीनाभ्यां लोकसूत्र उदारधी ॥११६॥
विह्वलन्तं परायत्तमासने सन्न्यवेशयत् । आसनस्थमुवाचेदं व्योमसूनू रवेः सुताम् ॥११७॥
केन त्वमभिभूतोऽसि केन स्थानान्निवारितः । केनाऽयं मार्जितो देव पटो लोक पतेस्तव ॥११८॥
ब्रूहि सर्वमशेषेण कुशकेतोः सुताग्रतः । यः प्रभुस्तात सर्वेषां स ते कर्ता ममापि च ॥
अपह्नष्यति मार्तण्डे दुःखं हृदयसंस्थितम् ॥११९॥ स एव मुक्तः श्वसनेन सत्यमादित्यसूनुर्वचनं
बभाषे । विलोक्य वक्त्रं कुशकेतुसूनोः सगद्‌गदं चेदमहोऽतिदीनः ॥१२०॥

इति श्रीस्कन्दपुराणे वैशाखमहात्म्ये नारदाम्बरीषसंवादे कीर्तिमद्विजयवर्णनंनामैकादशोऽध्यायः॥११॥

का प्राण, उदार बुद्धिवाला वायुले मोटा बलिया यमलाई उठाएर ॥११६॥ विह्वल भएको यमलाई आसनमा बसाए। अनि यमलाई वायुपुत्रले यो कुरो सोधे ॥११७॥ कसले तिमी आफ्नू ठाउँबाट हटाइयौ ? हे यम ! तिम्रो यो पाटी कसले पुछिदियो ॥११८॥ यो सारा कुशकेतुका छोराका अगाडि भन–हे तात ! ती सबैका प्रभु हुन्, उनै तिम्रा र मेरा पनि कर्ता हुन् । उनै तिम्रो हृदयमा रहेको दुःख हटाइदिन्छन् ॥११९॥ यस्ता प्रकारले भनि एका सूर्यपुत्र विचरा निन्यउरा यमराजले कुशकेतुका छोराको मुखमा हेरेर खुशी भै 'ठीक छ' यस्तो भने ।'१२०।

श्री स्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीष सम्वादमा कीर्तिम द्विजय नामको एघारौं अध्याय सकियो ॥ ११ ॥



# अथ द्वादशोऽध्यायः

यम उवाच–शृणु मे वचनं शम्भो लोपितोऽहं पितामह । मरणादधिकं मन्ये मत्पदस्य च खण्डनम्
॥ १ ॥ निर्योगी न नियोग्यं हि करोति कमलासन । प्रभोर्वित्तं समश्नाति स भवेत्काष्ठकीटकः
॥ २ ॥ योऽश्नाति लोभाद्वित्तानि प्रज्ञावाँश्च महीपतेः । नियोगी नरकं याति यावत् कल्पशतत्रयम्
॥ ३ ॥ निःस्पृहो नाचरेद्यस्तु नियोगं पद्मसम्भव । भुक्त्वा तु नरकान्घोरान्स पुमान् वायसो भवेत्
॥ ४ ॥ आत्मकार्यपरो यस्तु स्वामिकार्यं विलुम्पति । भवेद्वेश्मनि पापात्मा आखुः कल्पशतत्रयम्
॥ ५ ॥ नियोगी यस्तु भूत्वा वै तिष्ठन्नित्यं स्ववेश्मनि । शक्तस्तु कार्यकरणे मार्जारो जायते नरः

यमराजले भने—हे शम्भो ? मेरी बिन्ती सुन्नुहोस्, हे पितामह ! म नाशिएँ । मेरो पदको खण्डनलाई म मरणभन्दा पनि अधिक ठान्दछु॥१॥हे कमलासन! कुनै काममा लगाइएको व्यक्ति यदि अह्राइएको काम गर्दैन भने मालिकको धनले उसलाई पिर्छ, त्यो मरेपछि काठको कीरो (धमिरो) हुन्छ ॥ २ ॥ जो बाठो भएर लोभले राजाको धन हिनामिना पर्छ, त्यो अधिकारी तीन सय कल्प कालसम्म नरकमै गैरहन्छ ॥ २ ॥ हे ब्रह्मन् ! जो काममा खटाइएको जन बेवास्ती भएर खटाइएको काम गर्दैन, त्यो पुरुष घोर नरकहरूका यातना भोगेर पछि काग हुन्छ ॥ ॥ जो नोकर आफ्नू कामको गल्छि लागेर स्वामीको काममा हानि गर्दछ, त्यो पापी जन पछि तीन सय कल्पसम्म घरमा मूसो भइरहन्छ ॥ ५ ॥ जो

॥ ६ ॥ सोऽहं देव तवादेशात्प्रजा धर्मेण पालये । पुण्येन पुण्यकर्तारं पापं पापेन कर्मणा ॥७॥
सम्यग्विचार्य मुनिभिर्धर्मशास्त्रान्वितैः प्रभो ! कल्पादौ वर्तमानस्य यावदद्य दिनं मम ॥८॥
कर्तुं नियोगमेवं हि त्वदीयं नैव शक्नुयाम् । राज्ञा कीर्तिमता भग्नो नियोगस्तव च क्षितौ ॥९॥
भयादस्य जगन्नाथ पृथिवी सागराम्बरा । वैशाखधर्मनिरता न क्षितौ वर्तते क्वचित् ॥ १० ॥
विहाय सर्वधर्मांश्च विहाय पितृपूजनम् । विहायाग्निशपर्यां तु तीर्थयात्रादिसत्क्रियाः ॥ ११ ॥
योगसांख्यावुभौ त्यक्त्वा त्यक्त्वा प्राणनिरोधनम् । त्यक्त्वा स्वाध्यायहोमौ तु कृत्वा पापानि भूरिशः

नोकर भएर काम गर्न सक्तासम्मै पनि हमेशा घर बसिरहन्छ त्यो पछि चिरालो हुन्छ ॥ ६ ॥ हे देव ! त्यस्तै नियोगी म पनि तपाईंका आज्ञाले पुण्य गर्नेलाई पुण्यले, पापीलाई पाप कर्मले प्रजाहरूलाई इमानदारीसाथ पालना गर्छु ॥७॥ हे प्रभो ! कल्पको शुरूमा धर्मशास्त्र जान्ने मुनिहरूले खूब सोच विचार गरीकन यस काममा राखिएको मेरो आजसम्मको दिन बित्यो॥८॥अबचाहिँ पक्कै तपाईंले खटाएको काम गर्न नसक्ने नै भएँ । पृथ्वीतलमा कीर्तिमान् राजाले तपाईंको नियोग-लाई खतम पारिदिए ॥९॥ हे जगन्नाथ ! यस राजाका डरले समुद्रले घेरिएकी पृथ्वी नै वैशाखको धर्ममा तल्लीन छ । पृथ्वीमा कहीं कोही यस्तो छैन,जहाँ सारा धर्मलाई त्यागेर,माता-पिताको आदर-सत्कार त्यागे, बलि-वैश्वदेव र अग्निको पूजा छोडेर, तीर्थयात्रा, दा-धोताको पूजा दर्शन असल काम छोडेर, योग र सांख्य दुवैलाई त्यागे, प्राणायामलाई



॥१२॥प्रयान्ति वैष्णवं लोकं कृत्वा वैशाखसत्क्रियाः । मनुजाः पितृभिः सार्धं तथैव च पितामहैः
॥१३॥ तेषामतीतपितरः पितॄणां पितरस्तथा । तथा मातामहा यान्ति तेषां ते जनकादयः॥१४॥
तेषामपि जनेतारो जनितॄणां हि पूर्वजाः । एतत् दुःखं पुनर्देव मम मस्तकभेदनम् ॥१५॥
प्रियायाः पितरो यान्ति मार्जयित्वा लिपिं मम । पितॄणां बीजको यस्तु धात्र्या कुक्षौ धृतो विभो॥१६॥
यदेकेन कृतं कर्म तदेकेनैव भुज्यते । तन्निरस्य कृतं सर्वं जायत्येकः कुले तु यः ॥ १७ ॥
तारयंस्तावुभौ पक्षौ षड्विंशोपर्यलं विभो । प्रियायाश्चापि वै तात सर्वे वै कुक्षिसम्भवाः ॥ १८ ॥

त्यागेर, स्वाध्याय र होम पनि गर्न छोडेर,अनि अरू-अरू अनेक पाप गरेर पनि वैशाख महीनामा बताइएका सत्कर्महरू गरेर विष्णुको लोकमा नजाओस् । केवल आफू मात्रै हैन वैशाख उपास्ने मानिसहरू आफ्ना पितृहरूका साथ,तथा पिता-महहरूका साथ ॥ १०-१३ ॥ जिवाका मरेका पितृहरू, तिनका पितृका पितृहरू त्यस्तै मावली जियाहरू र तिनका बाबु बराजु जिजुहरू ॥ १४ ॥ तिनका पनि बाबु बाजेहरू र तिनका पनि पुर्खाहरू पनि मैले लेखेको लेखलाई मेटाएर वैकुण्ठ जान्छन् । यति मात्रै कहाँ हो र हे विभो ! रखोटी र रखौटीपट्टिका सन्तान पनि वैकुण्ठ गए ॥१६॥ यौटाले गरेको जो कर्म छ त्यो यौटैले भोगिन्छ भन्ने सबै नियम-हटाएर कुलमा कवै यौटा यस्तो पनि जन्मन्छ जो ॥१७॥ हे विभो ! मातृ पितृ दुवै कुललाई छब्बीस पिंढीसम्म तारोस् ! तर हे तात ! यहाँ त पितृ-मातृ दुवै कुलका सारा पितृ लिंडीवुर्बा लागेर,

तेऽपि सर्वे जगन्नाथ यान्ति विष्णोः परं पदम् । न मे प्रयोजनं देव वियोगेनेदृशेन वै ॥१९॥
वैशाखधर्मनिरतः स मां त्यक्त्वा व्रजेद्धरिम् । त्रिःसप्तकुलमुद्धृत्य त्यक्तपापोऽतिशोभनः ॥२०॥
संत्यक्त्वा मम लोकं हि प्रयाति हरिमन्दिरम् । न यज्ञैस्तादृशीं तात गतिं प्राप्नोति मानवः ॥२१॥
सर्वतीर्थैर्न दानाद्यैर्न तपोभिश्च न व्रतैः । अपि वा सकलैर्धर्मैर्युक्तो नाप्नोति तां गतिम् ॥२२॥
प्रयागपाताद्रणमध्यपाताद्भृगोश्च पातान्मरणाच्च काश्याम् । न तां गतिं यान्ति जनाश्च सर्वे
वैशाखनिष्ठेन च या प्रपद्यते ॥२३॥ प्रातः स्नात्वा देवपूजां च कृत्वा श्रुत्वा कथां मासमहात्म्य-

जगन्नाथ ! वैकुण्ठ जान्छन् भने हे देव ! यस्तो नियुक्तिले मलाई कुनै मतलब छैन, म यस्तो सेवा चाहन्नँ ॥ १८-१९ ॥ वैशाखको धर्ममा लागेको त्यो जन मात्रै मलाई त्यागेर हरि भाउँ जासुपर्ने हो,तर उत एक्काइस पिँढीसम्मकालाई उद्धार गरेर आफू अति पुण्यात्मा भएर समस्त पापबाट गएको छँदो ॥ २० ॥ मेरो लोकलाई नै त्यागेर वैकुण्ठ जान्छ । हे तात ! त्यस्तो गति त मनुष्यले यज्ञहरूद्वारा पनि पाउँदैन ॥ २१ ॥ त्यस्तो गति त सम्पूर्ण तीर्थ गरेर पनि पाउँ दैन दानहरू गरेर पनि पाउँदैन, तपस्याहरूले र व्रतहरूले पनि पाउँदैन, धेरै के भनूं सकल सकल धर्मले युक्त भएकोले पनि त्यो गति पाउँदैह ॥ २२ ॥ वैशाखको धर्म गर्नेले जो गति पाउँछ, त्यस्तो गति त प्रयागको त्रिवेणीमा डुब्नाले, लडाइंमा मर्नाले, भृगुबाट फाल हाल्नाले, काशीमा मर्नाले पनि मनुष्यहरूले पाउन सक्तैनन् ॥२३॥ वैशाखमा



संज्ञाम् । धर्मान्कृत्वा चोदितान्वैष्णवाँश्च स वै भवेद्विष्णुलोकैकनाथः ॥ २४ ॥ अप्रमाणमहं मन्ये
लोकं विष्णोर्जगत्पतेः । यो न पूर्येत कोट्योघैः सर्वतः पुण्यकृत्यगः ॥ २५ ॥ माधवस्य तु धर्मेण
समाः सन्ति पितामह । विकर्मस्थाविकर्मस्थाः शुचयोऽशुचयस्तथा ॥२६॥ कृत्वा वैशाखकृत्यानि
लोका यान्ति नृपाज्ञया । अस्माकं तु महाशत्रुर्भवतां च विशेषतः ॥ २७ ॥ निग्राह्यो जगतां
नाथ भवताऽसौ महीपतिः । हित्वा हि सकलान्धर्मान्सकृद्वैशाखस्नानतः ॥२८॥ असंस्कृतजना

प्रातःस्नान गरेर, धौताको पूजा गरेर, वैशाख माहात्म्यको कथा सुनेर, विष्णुका भक्तहरूले गरिने उचित धर्महरू गरेर रहने त्यो मान्छे निश्चयै विष्णुलोकमा प्रतिष्ठित हुन्छ ॥२४॥ जगत्पति विष्णुको लोकलाई म यत्रो भन्ने साँघी नभएको मान्छु । सिर्फ पुण्यात्माहरूले मात्र गइने जुनलोक वैशाखका धर्मले गएका करोडौं झुण्डका झुण्डले पनि भरिंदैन ॥२५। हे पितामह ! वैशाखका धर्मले खराब काम गर्ने-असल काम गर्ने, त्यस्तै पवित्र अपवित्र सब बराबर ( एकछत्त ) भएका छन् ॥२६॥राजाका आज्ञाले सबै नै वैशाख कृत्य गरेर वैकुण्ठ जान्छन् । यो राजा मेरो र अझ ज्यादा तपाईंको ठूलो शत्रु भएको छ ॥२७॥ हे जगत्का नाथ ! हजूरद्वारा यो राजा काबूमा ल्याइयोस् । किनकि हे हरिवल्लभ ! सारा धर्महरूलाई छाडेर केवल एकैपल्ट वैशाख न्वाहुनाले नै अशुद्ध पापी जनहरू वैकुण्ठ गैरहेका छन् । यदि विष्णुका पाउको मात्र आश्रय

यान्ति वैकुण्ठं हरिवल्लभ । अस्माभिस्तु कृतोपेक्षो विष्णुपादैकसंश्रय ॥ २९ ॥ समस्तं
नेष्यपे लोकं पार्थिवो नात्र संशयः । एष दण्डः पटो ह्येषस्तव पद्भ्यां निवेदितः ॥ ३० ॥
लोकपालत्वमतुलं मार्जितं तेन भूभुजा । किमपत्येन जातेन मातुः क्लेशकररेण वै ॥ ३१ ॥
यो न तापयते शत्रुं ज्येष्ठमासोव भास्करः । वृथा सुता हि युवतिर्जाता चैव कुपुत्रिणी ॥ ३२ ॥
न यस्य स्फुरते कीर्तिर्धनस्येव शतह्रदा । यः पितुर्नोद्धरेत्पापाद्विद्यया वा धनेन वा ॥ ३३ ॥
मातुर्जठरजो रोगः स प्रसूतो धरातले । धर्मे चार्थे च कामे च यः प्रतीपो भवेत्सुतः ॥३४॥

भएको यो राजा हामीहरूद्वारा उपेक्षा गरियो भने समस्त लोकलाई नै वैकुण्ठ लानेछ, यसमा केही संशय। यदि यस्तै स्थिति रहने हो भने यो कालदण्ड र यो पापकर्म लेखिने पाटी दुवै हजुरका चरणकमलमा टक्र्याएँ ॥ २८-३० ॥ त्यस राजाले ठूलो लोकपालनलाई मेटिदियो, केवल आमालाई कष्टमात्र गराउने छोरो जन्मेर के गर्नु ! ॥३१॥ जुन छोराले जेठमा बल्ने संसारै तताए झैं शत्रुलाई सन्तापित पार्दैन, त्यस्ती युवती छोरी कुपुत्रवाली हुन बेकार जन्मेकी हो अथवा त्यस्ती छोरी कुपुत्रिणी हुन बेकार युवती भएकी हो ॥ ३२ ॥ बिजुलीले मेघ झैं जसको कीर्ति चम्कँदैन, जो विद्याले वा धनले बाबुको उद्धार गर्दैन॥३३॥धर्म, अर्थ, काममा जुन छोरो विमुख रहन्छ,पृथ्वीमा जन्मिएको त्यो आमाको कोखबाट पैदा भएको रोग हो ॥३४॥सज्जनहरूद्वारा पुरुषमा अधम नीच त्यस्तो छोरो 'मातृहा' अर्थात् आमालाई मार्नेवाला कहिन्छ

मातृहेत्युच्यते सद्भिः स पुत्रः पुरुषाधमः । तन्माता नृपपत्नी च लोकविख्यातसत्क्रिया ॥३५॥
एकैकवीरसूर्लोके रचिता नात्र संशयः । यथा वै कीर्तिमान् जातो मल्लपेर्मार्जनाय वै ॥ ३६ ॥
नेदं व्यवसितं देव देनचित्क्षत्रियेण हि । पुराणेषु जगन्नाथ न श्रुतं पटमार्जनम् ॥३७॥ सोऽहं न
जानामि जगत्यधीश ऋते क्षितीशं हरितत्परं तम् । प्रचोदयन्तं पटहं सुघोषं विलोपमानं मन
वेश्ममार्गं ॥३८॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसं यमदुःखनिरूपणं नाम द्वादशोऽध्या ॥१२॥

परन्तु त्यस राजाकी आमा त वीर राजाकी स्त्री हो, जो विश्वमा धर्मात्मा भनिएर प्रसिद्ध छिन् ॥३५॥ मेरो लेख मेटाउन लाई जन्मेको यो जस्तो यशस्वी र वीर पुत्र जन्माउने आमा संसारमा विरलै हजूरबाट रचिए, यसमा शंका छैन ॥३६॥ हे भगवन् ! कुनै क्षत्रियले पनि यस्तो काम गरेको थिएन, हे जगन्नाथ ! समस्त पुराणहरूमा पनि फलानाले आफ्नू पुण्यका प्रतापले यमराजको पाटीलाई कारकेर पारेर पुछिदियो भन्ने सुनिएको छैन ॥३७॥ हे जगत्का अधिपति ! हरि भगवान्मा तल्लीन त्यस राजालाई छाडेर दमाहा ठटाउन लगाई घोषणा गराई मेरो घरको बाटो शून्य गराउने अर्को कुनै पनि वीर-लाई विश्वविख्यात मैले जानेको छैन ॥३८॥

# अथ त्रयोदशोऽध्यायः

ब्रह्मोवाच–किमाश्चर्यं त्वया दृष्टं किमर्थं खिद्यते भवान् । सद्गुणेषु कृतस्तापः सन्तापो मरणान्तिकः ॥१॥ तस्योच्चारणमात्रेण प्राप्यते परमं पदम् । न गच्छन्ति हरेर्लोकं कथं भूपस्य शासनात् ॥२॥ एकोऽपि कृष्णस्य कृतप्रणामः समस्तयज्ञावभृथेन तुल्यः । यज्ञस्य कर्ता पुनरेति जन्म हरेः प्रणामी न पुनर्भवाय ॥३॥ कुरुक्षेत्रेण किं तस्य सरस्वत्या च किं तथा । जिह्वाग्रे वर्तते यस्य हरिरित्यक्षरद्वयम् ॥४॥ ब्राह्मणः श्वपचीं भुञ्जन्विशेषेण रजस्वलाम् । स मुक्तश्चामलो याति मरणे हरि-

ब्रह्माजीले भन्नुभयो—तिमीले के आश्चर्य देख्यौ ? तिमी किन खिन्न हुन्छौ ? सद्गुणहरूमा पीर मान्यो भने, त्यो सन्ताप मरण गराउने हुन्छ ॥१॥ त्यस सद्गुणको उच्चारण मात्रले परमपद प्राप्त हुन्छ भने के राजाको शासनले जन हरिको लोकमा जाँदैनन् ॥२॥ यदि एकैचोटि पनि श्रीकृष्णलाई प्रणाम गरेको छ भने त्यो समस्त यज्ञान्त स्नान तुल्य हुन्छ । यज्ञ गर्नेवाला फेरि पनि जन्मन्छ तर हरिलाई प्रणाम गर्नेवाला फेरि जन्मदैन ॥३॥ जसको जिब्रोका टुप्पामा 'हरि' यो दुइ अक्षर रहन्छ, त्यसलाई कुरुक्षेत्र तथा सरस्वती स्नानले के मतलब ? ॥४॥ चाण्डालीसँग भोग गर्ने, अझ ज्यादातर रज-



मुच्चरन् ॥५॥ अभक्ष्यभक्षणाज्जातं विहायाघस्य सञ्चयम् । प्रयाति विष्णु सायुज्यं तत्ता विष्णुप्रियास्मृति ॥६॥ एवं विष्णुप्रियो मासो वैशाखो नाम वै यम । यद्धर्मश्रवणादेव मुच्यते सर्वकिल्बिषैः ॥७॥ यातीति किमु वक्तव्यं तस्यानुष्ठानतत्परः । अस्माकं जगतां नाथो जनिता पुरुषोत्तमः ॥८॥ तस्येष्टान्माधवे मासि धर्मानेतान्करोति यः । तस्य विष्णुः प्रसन्नात्मा सहाये सर्वदा स्थितः ॥ ९ ॥ न तस्य भूपतेः सौरे प्रभावो मम शिक्षणे । न वासुदेवभक्तानामशुभं विद्यते क्वचित् ॥ १० ॥ जन्ममृत्युजराव्या-

स्वलासँग भोग गर्ने त्यस्तो ब्राह्मण पनि मर्दा 'हरि' भन्दै मर्‍यो भने त्यो सारा पाप खारिई मुक्त हुन्छ ॥५॥ अभक्ष्य, खानाले भएका पापका थुप्रालाई त्यागी त्यस्तो जन विष्णुको परमपदमा प्राप्त हुन्छ किनकि मरणकालमा गरिएको हरिको स्मृति विष्णुलाई अति प्रिय छ ॥६॥ यसकारण, हे यम ! वैशाख नामको महीना विष्णुको अति प्रिय छ, जुन महीनाको धर्म सुन्नाले मात्र पनि मानिस सारा पापबाट छुट्दछ ॥७॥ वैशाखको पुण्य गर्नाले वैकुन्ठ जान्छ मात्र के भन्नु ? वैशाखको अनुष्ठानमा लागेका मानिस त हाम्रा लागि जगत्का नाथ पुरुषोत्तम नैं जन्मेको हो भने पनि हुन्छ ॥८॥ वैशाखमा भगवान्का प्रिय यी पुण्यहरूलाई जो गर्दछ, उसका उपर विष्णु सधैं प्रसन्न रहनुहुन्छ र उसको सहायताका लागि सधैं तत्पर रहनु हुन्छ ॥९॥ हे सूर्यपुत्र यमराज ! ती राजाको प्रभाव मेरो वशमा छैन, किनकि वासुदेवका भक्तहरूका लागि अकल्याण कहीं छैन ॥ १० ॥ न त त्यस्ता भक्तलाई जन्मनु, मर्नु, बुढाउनु आदिको भय नै पैदा हुन्छ । हे यम ! मालिकले

धिभय वाऽप्युपजायते । नियोगी स्वामिकार्यं तु यावच्छक्तिः समीहते ॥११॥ तावता स कृतार्थः
स्यान्नरकान्नैव गच्छति । कार्यं शक्तिविनिष्क्रान्ते स्वामिने च निवेदयेत् ॥१२॥ अनृणस्तावता मा०
 भृत्यो नियोगी सुखमश्नुते । तस्मान्निवेदितार्थस्य नानृतं न च पातकम् ॥ १३ ॥ यत्ने कृते अ.१३
१३१ स्वकर्तव्ये नापराधोऽस्ति देहिनः । तस्मादशक्यकार्येऽस्मिन्नैवं शोचितुमर्हसि ॥ १४ ॥ इत्युक्तो
ब्रह्मणा सौरिः पुनरत्यन्तखिन्नधीः । उवाच दीनया वाचा गलद्बाष्पाकुलेक्षणः ॥ १५ ॥ प्राप्तं

अह्राएको काम नगरी हात बाँधेर बस्ने निमकहरामी नोकरले नरक जानुपर्छ, मेरो अब क्यै काम छैन 'प्रभु ! अब आफ्नू तानावाना लिइबक्सियोस्' जो भन्यौं त्यो ठीक हो, तर नोकरले मालिकको काम सक्तो गर्नुपर्छ ॥११॥ त्यतिले नै त्यो कृतार्थ हुन्छ र उसले नरक जानुपर्दैन । काम शक्तिभन्दा बाहिर भएमा मालिकलाई भन्नुपर्छ ॥१२॥ मालिकलाई त्यति भनिदिनाले नै त्यो अह्राएको सेवक अऋणी हुन्छ र सुख पाउँछ,त्यसकारण साँचो कुरा निवेदन गर्नेलाई न ऋण लाग्छ
१२ न पाप लाग्दछ ॥१३॥ आफूले गर्नुपर्ने काम राम्रोसित गरेमा प्राणीलाई केही अपराध छैन । त्यसकारण गर्न नसकिने यस काममा तिमीले शोक वा फिक्री गर्नु ठीक छैन ॥१४॥ यस्ता प्रकारले ब्रह्माले सम्झाइएका पनि यमराज फेरि पनि अत्यन्त खिन्न बनि आफ्ना स्वबेदाएका आकल आँखा बनाउँदै दीन वचनले भने ॥ १५ ॥ हे तात ! तपाईको चरण

तात मया सर्वं त्वदङ्घ्रिभजनेन वै । नाहं यास्ये पुनः कर्तुं नियोगं पद्मसम्भव ॥१६॥प्रशातति
महावीर्ये भूपेऽस्मिन्भूमिमण्डले । चालयित्वा स्वधर्माच्च तमेकं भूपतिं विभो ॥ १७॥कृतकृत्योऽस्मि
 तनयो गयायां पिण्डदो यथा । कृपालो तदिदं कार्यं साधयस्व ममाऽव्यय ॥१८॥विज्वरस्तु ततो मा०
१३२ भूयः शासनं ते करोम्यहम् ॥१९॥ श्रुत्वा ब्रह्मा यमेनोक्तं पुनश्चिन्तापरायणः । अवाङ्मुखं यमं अ. १३
प्राह सान्त्वयन् बहुधाप्ययम् ॥२०॥ ब्रह्मोवाच । न निग्राह्यो मया राजा विष्णुधर्मपरायणः ॥२१
यदिच्छयसि त्वं कोपाद् गच्छामो ह्यन्तिकं हरेः । निवेद्य सकलं तस्मै कर्मपश्चात्तदीरितम् ॥२२॥

को सेवक मैले सबैथोक पाई कृतकृत्य छु, तर हे पद्मसम्भव ! यो पराक्रमी राजाले भूमण्डलमा शासन गरुन्जेल फेरि म हजूरको आज्ञा मान्न सक्किन । हे विभो, त्यो यौटा राजालाई आफ्नू धर्मबाट हटाउन सके॥१६-१७॥ गयामा पिण्ड दिने छोरो झैं म कृतकृत्य हुन्छु । हे अविनाशी, दयालु ! त्यसकारण मेरो यो काम सिद्ध गरिदिनुहोस् ॥१८॥ यति गरिदि बक्सिए बेफिक्री भई फेरि म तपाईंको आज्ञा पालन गर्दछु॥१९॥यमराजले यति भनेको सुनी ब्रह्मा फेरि चिन्तामग्न भए अनि उनले उँधो मुख लगाएका यमराजलाई अनेक प्रकारले बुझाउँदै सान्त्वना दिए ॥२०॥ ब्रह्माले भने–विष्णुको धर्ममा लागेका राजालाई म क्यै गर्नसक्किनँ॥२१॥यदि क्रोधले तिमी यही चाहन्छौ भने हरिभाउँ जाऔं, उहाँलाई सबै निवेदन गरौं, पछि उहाँले जस्तो भन्नुहुन्छ त्यै गरौंला ॥२२॥उहाँ नै लोकका कर्ता र धर्मका रक्षक हुनुहुन्छ, उहाँ नै हाम्रा दण्ड-

स एव कर्ता लोकस्य धर्मस्य परिपालकः । स च दण्डधरोऽस्माकं शास्ता कर्ता नियामकः ॥२३॥
न तदुक्तेऽर्स्ति प्रत्युक्तिरस्माकं विहिता नृप। न राजोक्ते तु प्रयुक्तिर्दृश्यते क्वापि भूतले ॥२४॥
 इत्याश्वास्य मम तेन साकं क्षीराम्बुधिं ययौ । ब्रह्मा तुष्टाव चिन्मात्रं निर्गुणं परमेश्वरम् ॥२५॥ 
 सांख्ययोगैरद्वीतीयमेकं तं पुरुषोत्तमम् । आविरासीत्तदा विष्णुर्ब्रह्मणा संस्तुतो हरिः ॥२६॥ 
प्रणामं चक्रतुस्तस्मै यमो ब्रह्मा च सत्वरम् । तावुवाच महाविष्णुर्मेघगम्भीरया गिर ॥२७॥
कस्माद्युवामिहायातौ किं दुःखं दनजैरभूत् । म्लान यममुखं कास्मात्केन वा नतकन्धरः ॥२८॥

धारी शासन गर्नेवाला कर्ता र नियममा चलाउनेवाला हुनुहुन्छ॥२३॥रे नृप ! उनको आज्ञामा हाम्रो जवाफ छैन, उहाँको आज्ञाको विपरीत हामी चल्न सक्तैनौं, किनकि पृथ्वीतलमा राजाका हुकुमको प्रतिकूल उत्तर देखिदैन ॥२४॥ यमराज लाई यस्तो आश्वासन दिएर उनैका साथ ब्रह्मा क्षारसमुद्रमा विष्णु माठौं गएर ती एकमात्र अद्वितीय चिन्मात्र निर्गुण परमेश्वर पुरुषोत्तमलाई सांख्ययोगले स्तुति गर्न लागे तब ब्रह्माले स्तुति गरिएका हरि विष्णु प्रकट हुनुभयो ॥२५-२६॥ अनि उहाँ लाई ब्रह्मा र यमराजले दनपच नमस्कार गरे । अनि महाविष्णुले मेघको जस्तो गम्भीर वाणीले ती दुवैलाई भन्नुभयो ॥२७॥ के कारणले तिमी दुवै यहाँ आयौ ? दानवहरूबाट क्यै दुःख भयो ? के कारणले यमराजको मुख मलिन छ ? किन निहुरिएका हौ ? ॥२८॥यः सब हे ब्रह्मन् ! मलाई मन ! यसरी विष्णुले सोधिएका ब्रह्माले भने–तपाईंका दासहरूमा श्रेष्ठ

एतद्वदस्व मे ब्रह्मन्नित्युक्तः प्राह कंकजः ॥ त्वद्दासवर्यं भूमिं शासात वै नराः ॥२९॥
वैशाखधर्मनिरता यान्ति ते पदमव्ययम् । ततो यमपुरी शून्या तेन चातीव दुःखित ॥३०॥
 तेन युद्धञ्चकारासौ हन्तुं दण्डमथाददे । त्वच्चक्रेण पराभूतो ययावद्य ममान्तिकम् ॥३१॥ 
 न च शक्ता वयं दण्डे त्वद्भक्तानां महात्मनाम् । तस्मात्त्वामेव शरणं वयं प्राप्ता महाविभो ॥३२॥ 
तस्माद्भूपं दण्डयित्वा पालयैनं यमं स्वकम् । इत्युक्तः प्रहसत् प्राह ब्रह्माणं यममच्युतः ॥३३॥
लक्ष्मीं वापि परित्यक्षे प्राणान्देहमथापि वा । श्रीवत्सं कौस्तुभं मालां वैजयन्तीमथापि वा ॥३४॥

राजाले भूमिमा शासन गर्दा समस्त मनुष्यहरू ॥२९॥ वैशाखको धर्ममा तल्लीन भएर हजुरको अविनाशी स्थानमा गैरहेका छन् । त्यसकारण यमपुरी खाली भयो, यसैउसले यम अत्यन्त दुःखित छन्॥३०॥उनले उसका साथ युद्ध पनि गरे, उस-लाई मार्न कालदण्ड पनि उठाए । तर तपाईंका अरिचक्रद्वारा हार खाएर ममाठौं आइपुगे ॥३१॥ तपाईंका भक्त महा-त्माहरूलाई हामी दण्ड दिन सक्तैनौं । त्यसकारण हे महाविभु ! तपाईंकै शरणमा हामी आएका हौं॥३२॥ त्यसकारण राजालाई दण्ड दिई आफ्नू यस यमराजको रक्षा गरिबक्सियोस् यसरी ब्रह्माले बिन्ती गरियेका अच्युत भगवानले केही मुस्कुराएर ब्रह्मालाई भन्नुभयो ॥३३॥ हे ब्रह्मा, म लक्ष्मीलाई, आफ्नू प्राणलाई, शरीरलाई, श्रीवत्सलाई, कौस्तुभ, वैज-यन्ती मालाई ॥३४॥ श्वेतद्वीपलाई, वैकुण्ठलाई र क्षारसागरलाई, शेषनागलाई, र गरुडलाई पनि त्यागिदिन्छु,तर आफ्नू

श्वेतद्वीपं च वैकुण्ठं क्षीरसागरमेव च । शेषं च गरुडं वापि न भक्तं त्यक्तुमुत्सहे ॥३५॥
विसृज्य सकलान्भोगान्मदर्थे त्यक्तजीवितान् । मदात्मकान्महाभागान्कथं तांस्त्यक्तुमुत्सहे ॥३६॥
तस्मात्त्वद्दुःखशमने ह्युपायं कल्पयाम्यहम् । तस्य चायुर्मया दत्तमयुतं भूपतेः भुवि ॥३७॥
गतान्यष्टौ सहस्राणि तत्रेदानीं नरान्तक । आयुः शेषे तेन नीते मत्सायुज्यं गतेऽपि च ॥३८॥
भविष्यन्ति ततो राजा वेनो नाम दुरात्मवान् । स लुम्पति महाधर्मान्सर्वानिताञ्छ्रुतीरितान् ॥३९॥
तदा वैशाखधर्माश्च विच्छिन्नाः स्युर्न संशयः । स्वकृतेनैव पापेन वेनो दग्धो भविष्यति ॥४०॥

भक्तलाई त्याग्ने साहस गर्न सक्तिन ॥ ३५ ॥ समस्त सांसारिक सुखभोगलाई त्यागेर, ममन्दा नरिमेट्ने मेरा प्यारा ती महाभाग्यमानीहरूलाई कसरी म त्याग्न साहस गरूँ ! ॥३६॥ त्यसकारण तिम्रो दुःख-शान्तिका लागि म उपाय रच्दछु । त्यस राजालाई मैले पृथ्वीमा दश हजार वर्षको आयु दिएको छु।।३७।।हे नरान्तक! तीमध्ये यस बखत आठ हजार वर्ष बिते उसले आफ्नू शेष आयु बिताएर मेरो सायुज्यमा प्राप्त भएपछि ॥३८॥ त्यसका बाद दुष्ट चित्त भएको वेन नामको राजा हुनेछ । त्यस राजाले सबै यी शास्त्रविहित ठूला धर्महरूलाई लोप गरिदिनेछ।।३९।।त्यस बेला वैशाखका धर्महरू छिन्नभिन्न हुनेछन्,यसमा कुनै संशय छैन । आफैंले गरेका पापले वेन डढ्नेछ ॥४०॥ त्यसका बाद म पृथु भएर फेरि धर्महरू प्रचार



पश्चादहं पृथुर्भूत्वा पुनर्धर्मान्प्रवर्तये । तदा जनेषु प्रख्यातान्वैशाखोक्तान् करोम्यहम् ॥४१॥
मद्भक्तो मद्गतप्राणो यस्तु विन्यस्तसंग्रहः । एकः सहस्रो भविता तस्य प्रख्यातये त्विमान् ॥४२॥
कश्चिदेव हि जानाति धर्मानितान्क्षितौ मम । ततस्ते भविता कार्यं मा विषाद नरान्तक ॥४३॥
दापयिष्यामि ते भागं मासेऽस्मिन्माधवेऽपि च । नरैः सर्वैश्च वैशाखे धर्मनिष्ठमहात्मभिः ॥४४॥
भूपेनापि च कालेन खेदं शमय तेन च । वीर्यशुल्कं तु ते भागं शत्रुर्भुङ्क्ते बलाधिकात् ॥४५॥
गृह्णन्गृह्णन् स्वकं भागं न भागी दुःखमर्हति । त्वामुद्दिश्य च कुर्वन्ति प्रत्यहं ये नरा भुवि ॥४६॥

गर्नेछु । अनि फेरि प्रसिद्ध वैशाखमा गरिने धर्महरूलाई म मनुष्यहरूमा प्रचार गर्नेछु॥४१॥ त्यस बेला ममन्दा हिरिक्क हुने, सारा संग्रह त्याग्ने यस्तो मेरो भक्त त हजारौं मनुष्यमा यौटा हुनेछ । तिनीहरूमा पनि धर्मको प्रचारमा कोही एक लाग्नेछ॥४२॥ त्यस बेला पृथ्वीमा मेरा यी धर्महरूलाई कोही-कोही नै जान्नेछन् । तब तिम्रो मनोरथ पुग्नेछ,हे यमराज ! खेद नगर॥४३॥यस वैशाख महीनामा पनि वैशाखको धर्ममा लागेका महात्माहरूबाट र सारा मनुष्यहरूबाट पनि तिम्रो भाग दिलाउनेछु॥४४॥राजाद्वारापनि समयमा तिमी भाग पाउनेछौ, त्यसकारण खेद शान्त गर । अधिक बलियो हुनाले वीर्यशुल्कवाला तिम्रो भाग त शत्रु नै खान्छ॥४५॥ आफ्नू भाग बराबर पाइरहने भाग पाउनेवाला दुःख मान्नु ठीक छैन । पृथ्वीमा जो मानिसहरू वैशाखमा रोजै तिमीलाई उद्देश्य गरेर स्नान गर्दैनन्, अर्घ्य दिँदैनन् र अन्तिम दिनमा जलकुम्भ र

स्नानं चार्घ्यं सोदकुंभं दध्यन्नं चान्तिमे दिने। वैशाखे सकलं कर्म तेषां वै विफलं भवेत् ॥४७॥
तस्मात्क्रोधं त्यज नृपे भागदे मत्परायणे। ये के चापि प्रकुर्वन्ति लोके ते भागदा नराः ॥४८॥
वैशाखोक्तं महाधर्मं तेषां विघ्नं च मा कुरु। मामेव ये जहन्त्यद्धा त्वां हित्वा धर्मपालनम् ॥४९॥
मदाज्ञाय महाभाग तदा दण्डं च त्वं कुरु। नृपाद्भागं दापयितुं सुनन्दं प्रेषयामि च ॥५०॥
मच्छासनात्स तं गत्वा भागं ते दापयिष्यति। तिष्ठत्येवं यमे स्वस्य सन्निधौ गरुडासनः ॥५१॥
सुन्दनं प्रेषयामास नृपं बोधयितुं विभुः। सोऽपि गत्वा बोधयित्वा पार्श्वं च पुनरागमत् ॥५२॥

दही-अन्न दान गर्दैनन् तिनीहरूको वैशाखमा गरिएको सारा कर्म विफल हुनेछ॥।४६-४७॥त्यसकारण अब तिम्रो भाग दिने मेरो भक्त राजामा तिमी क्रोध त्याग। संसारमा जो कोही पनि धर्म गर्नेछन् तो सबै मनुष्यहरू तिम्रो भाग दिनेछन्॥४८॥ वैशाखमा गर्न बताइएका ठूला धर्म गर्ने तिनीहरूको निमीले विघ्न नगर्नु र तिमीलाई छाडेर जो धर्म गर्न मलाई मात्रै बारम्बार पूजा गरिरहन्छन्॥४९॥ हे महाभाग्यमानी, मेरा आज्ञाले तब तिमी उसलाई दण्ड दिनसक्छौ। राजाबाट तिमीलाई भाग दिलाउन सुनन्दलाई पठाइरहेको छु॥५०॥उनी मेरो आज्ञाले उ भाठौं गएर तिम्रो भाग दिलाउनेछन्। यस्ता प्रकारले यमराज आफूभाठौं गरुड आसन हुने ॥ ५१ ॥ भगवानले राजालाई संझाउनका खाणि सुनन्दलाई पठाउनुभयो। उनो पनि ह्वै गएर राजालाई बोध गराएर भगवान्‌का पास फेरि आइपुगे ॥५२॥ यसरी राम्रा तरहले यमलाई संझाएर विष्णु



इत्याश्वास्य समं सम्यक् विष्णुरन्तरधीयत। ब्रह्मा यमं सान्त्वयित्वा तमनुज्ञाप्य वै ततः ॥५३॥
अतिविस्मयमापन्नो ययौ धाम सहानुगैः। यमोऽपि स्वपुरीं प्रायात्किञ्चित्संहृष्टमानसः ॥ ५४ ॥
पश्चाद्विष्णोर्निदेशेन सुनन्दपरिभाषिताः। भागदाः सकला लोका ये वैशाखपरायणः ॥ ५५ ॥
धर्मराजं समुद्दिश्य ये न कुर्वन्ति मानवः। तेषां हि स्वयमादत्ते पुण्यं वैशाखसम्भवम् ॥ ५६ ॥
कुर्यात्स्व प्रत्यहं स्नानं दद्यादर्घ्यं यमाय वै। वैशाखे सकलं पुण्यमन्यथा विफलं भवेत् ॥ ५७ ॥
सोदकुम्भं च दध्यन्नं पौर्णमास्यां च माधवे। धर्मराजं समुद्दिश्य दातव्यं प्रथमं जनैः ॥ ५८ ॥

अन्तरधान हुनुभयो। तब ब्रह्मा पनि यमराजलाई सान्त्वना दिएर अनि उनलाई अह्राएर पछि॥५३॥अति आश्चर्य हुँदै आफ्ना अनुचरहरूका साथ आफ्नू धाममा गए। यमराज पनि कयै खुशी भएर आफ्नू शहरतिर प्रस्थान गरे॥५४॥पछिसुनन्दले कहेमुताबिक विष्णुका आज्ञाले वैशाखको धर्ममा लागेका ती सारा जनहरू यमलाई भाग दिनेवाला भए ॥५५॥ जो मनुष्य-हरू धर्मराजको उद्देश्य गरेर तल बताइएका कामहरू गर्दैनन् तिनले गरेका वैशाखका धर्मले भएको पुण्य यमराज स्वयम् लिनेछन्॥५५॥मनुष्यहरूले वैशाखमा रोजै स्नान गर्नु र यमराजाई अर्घ्य दिनु। नत्र वैशाखमा गरिएको सकल पुण्य विफल हुनेछ॥५७॥वैशाखको पूर्णिमामा जलले भरिएका घडा र दही-अन्न धर्मराजलाई भनेर पहिले मनुष्यहरूले दिनुपर्छ ॥५७।

पश्चात्पितॄन् समुद्दिश्य गुरुमुद्दिश्य वै नरः। मधुसूदनमुद्दिश्य पश्चाद्देवं जनार्दनम् ॥ ५९ ॥
शीतलोदकदध्यन्नं ताम्बूलं च सदक्षिणाम्। सुफलं कांस्यपात्रस्थं ब्राह्मणाय निवेदयत् ॥ ६० ॥
दद्याच्च प्रतिमां दिव्यां मधुसूदनदेवताम्। मासधर्मप्रवक्त्रे च दद्याद्विप्राय सीदति ॥ ६१ ॥
तमेव धर्मवक्तारं पूजयेद्विभवैः स्वकैः। इत्यादिष्टः सुनन्देन तथा राजा चकार ह ॥ ६२ ॥
स नीत्वा चायुषः शेषं भुक्त्वा भोगान्यथेप्सितम्। पुत्रपौत्रादिभिर्युक्तो जगाम हरिमन्दिरम्॥६३॥
वैकुण्ठस्थे नृपे तस्मिन् वेनो राजाधमोऽभवत्। सर्वे धर्माश्च वैशाखधर्मा अपि विशेषतः ॥६४॥

त्यसका बाद पितृहरूको उद्देश्य गरेर, अनि गुरुको उद्देश्य गरेर, तब फेरि मनुष्यले त्यसै गरी जनार्दनम धुसूदनको उद्देश्य गरेर-॥५९॥ ठण्डा जल, दही-अन्न पान, दक्षिणाले सहित भएको काँसको भाँडामा राखेको बढ़िया फल ब्राह्मणलाई दिनु ॥६०॥ वैशाखको माहात्म्य सुनाउने गरीब बाहुनलाई पनि मधुसूदन भगवान्को दिव्य प्रतिमा बनाएर दिनु ॥६१॥ धर्म बताउनेलाई आफ्नू गच्छे अनुसार पूजा गर्नु भनी सुनन्दले यस्तो अह्राइएका राजाले त्यस्तै गरे गराए पनि॥६२॥ इच्छा अनुसारको सुखभोग भोगेर शेष आयु बिताएर छोरा नातिहरूले टक्क भएका उनी विष्णुको धाममा गए॥६३॥तो पुण्यात्मा राजा वैकुण्ठ रहन लागेपछि वेन नामको अधम राजा भयो। अनि समस्त धर्म र विशेष गरेर वैशाखका धर्महरू पनि॥६४॥



दुरात्मना च तेनैव लुप्ता एव बभूविरे। न प्रख्याताः पुनर्भूमौ भूरिशो मोक्षहेतवः ॥ ६५ ॥
यः कश्चिन्नैव जानाति वैशाखोक्तानिमाञ्छुभान्। बहुजन्मार्जिते पुण्ये परिपाकमुपागते ॥६६॥
वैशाखोक्तेषु धर्मेषु मतिरात्यन्तिको भवेत्। मैथिलउ-पूर्वमन्वन्तरस्थो हि वेनो राजा दुरात्मवान्६७
अथ वैवस्वतः पुत्रो राजा चेक्ष्वाकुभूपतिः। इति श्रुतं मया पूर्वमिदानीं तूच्यते त्वया ॥ ६८ ॥
तस्मिन् वैकुण्ठगे पश्चाद्वेनो राजा भविष्यति। इत्येतत् संशयं छिन्धि श्रुतदेव महामते॥६९॥ श्रुत-
देव उ.-पुराणेषु च वैषम्यं युगकल्पव्यवस्थया। न चाप्रामाण्यशंका ते कथायाव्यत्यये क्वचित् ॥७०॥

यसै दुरात्माले गर्दा नै एकदम लोप भए। तब फेरि पृथ्वीतलमा धेरैजसो मोक्षका कारण भएका धर्महरू प्रसिद्ध भएनन् ॥६५॥ जसले-तसले वैशाखमा गर्न बताइएका यी कल्याणकारी धर्महरू जान्दैन। धेरै जन्मदेखि आर्जन गरिएका पुण्यफल पाकेपछि मात्र॥६६॥वैशाख महीनामा गर्न बताइएका धर्महरूमा अत्यन्त श्रद्धा जाग्ने बुद्धि हुन्छ। तब मैथिल राजाले भने वेन नामको दुष्ट राजा पहिलो मन्वन्तरमा रहन्थ्यो॥६७॥ यो वैवस्वतको छोरो, इक्ष्वाकु कुलको राजा थियो! मैले पहिले यस्तो सुनेको थिएँ। अहिले पनि तपाईंले उही कहियो ॥६८॥ 'ती धर्मात्मा राजा वैकुण्ठ गएपछि वेन राजा हुनेछ' भन्ने यो शंका हे महामति श्रुतदेव! हटाइदिनुहोस्॥६९॥श्रुतदेवले भन्नुभयो-युग र कल्पको व्यवस्थाले पुराणहरूमा कति नमिल्दा कुरा छन्। कहीं कथाको नमिल्दो कुरो भएमा पनि तपाईंले 'यो प्रमाण नभएको कुरो' भनेर शंका गर्नु ठीक छैन

गते दैनन्दिने कल्पे कथैषा शाश्वती शुभा । मार्कण्डेयेन मे प्रोक्ता सा चोक्ता तव भूपते ॥७१॥ तस्मान्न ख्यातिमायाता धर्मा वैशाखसम्भवाः । कश्चिदेव हि जानाति विरोक्तो विष्णुतत्परः॥७२॥

इतिश्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे यमदुःखसान्त्वनं नाम त्रयोदशोऽध्यायः॥१३॥



॥७०॥ दिनदिनै गरेर बितेका कल्पमा यो कल्याणकारी शाश्वत कथा मार्कण्डेयले मलाई बताउनु भएको हो । हे राजन् ! उही कथा मैले तपाईंलाई कहेको हुँ ॥७१॥ त्यसैकारण प्रचार गर्ने मानिसको कमले र यमराजलाई मिलेको वरप्रभावले गर्दा वैशाखमा हुने धर्महरूले प्रसिद्धि पाएका छैनन् । सांसारिक भोगमा विरक्त, विष्णुको अतिभक्त कसैले मात्र यो धर्म जान्दछ ॥७२॥

श्रीस्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीषको संवादमा यम सान्त्वन नामको तेह्रौं अध्याय सकियो ॥ १३ ॥





## अथ चतुर्दशोऽध्यायः



श्रुतदेव उवाच–यः प्रातः स्नाति वैशाखे मेषसंस्थे दिवाकरे । मधुसूदनमभ्यर्च्य कथां श्रुत्वा हरेरिमाम् ॥१॥ स तु पापविनिर्मुक्तो याति विष्णोः परं पदम् । वाच्यमानां कथां हित्वा योऽन्यां सेवेत मूढधीः॥२॥रौरवं नरकं प्राप्य पैशाचीं योनिमाप्नुयात् । अत्रैवोदाहरन्तीदमितिहासं पुरातनम् ॥३॥ पापघ्नं पावनं धर्म्यं सद्यो हृद्यं पुरातनम् । पुरा गोदावरीतीरे क्षेत्रे ब्रह्मेश्वरे शुभे ॥ ४ ॥ दुर्वासशिष्यौ परम·हंसो ब्रह्मैकनिष्ठितौ । मदैवोपनिषद्विद्यानिष्ठितौ निरपेक्षितौ ॥ ५ ॥

श्रुतदेवजीले भन्नुभयो—जो जन मेष राशिमा सूर्य रहेको वैशाख महीनामा प्रातः स्नान गर्छ, मधुसूदनको पूजा गरेर रहेको यो कथा सुन्छ ॥१॥ त्यो जन सारा पापबाट छुटेर विष्णुको परम पदमा प्राप्त हुन्छ । कहिइरहेको कथालाई छोडेर जुन मूर्ख बुद्धिवाला अर्को कथा सुन्दछ॥२॥ त्यो जन रौरव नरक भोगेर पछि पिशाच योनिमा प्राप्त हुन्छ । यसै विषयमा नै यो पुरानो इतिहास उदाहरण दिन्छु ॥३॥ जुन पुरानु इतिहास पाप नाश गर्नेवाला, पवित्र, धर्म हुनेवाला, तुरुन्तै ग्रहण गरिन योग्य छ । पहिले गोदावरीको तीरमा कल्याणकारी ब्रह्मेश्वर नामको क्षेत्रमा ॥ ४ ॥ दुर्वासा ऋषिका दुइटा शिष्य जो ब्रह्ममा नै निष्ठा राख्ने, परमहंस, सधै नै उपनिषद् विद्यामा तल्लीन रहने, कुनै कुरामा वास्ता नराख्ने

भिक्षामात्राशिनो पुण्यौ तौ गुहावासिनावुभौ । सत्यनिष्ठतपोनिष्ठा इति ख्यातौ जगत्त्रय ॥ ६ ॥
तयोर्मध्ये सत्यनिष्ठः सदा विष्णुकथापरः । श्रोतृणामप्यभावे च व्याख्यातृणां तथा नृप ॥ ७ ॥
तदा कर्मकलापानि करोत्यद्धामुनीश्वरः । श्रोता चेदस्ति यः कश्चित्तस्मै व्याख्यात्यहर्निशम् ॥८॥
यदि व्याख्याति कश्चिद्वा पुण्यां विष्णुकथां शुभाम् । तदा सङ्कोच्य कर्माणि शृणोति श्रवणेऽरतः॥९॥
अतिदूरस्थतीर्थानि देवतायतनानि च । हित्वा कथाविरोधीनि तथा कर्माणि भूरिशः ॥ १० ॥
शृणोति च कथां दिव्यां श्रोतृभ्यो वक्ति वै स्वयम् । विनाकथां न जानाति से व्यमन्नं नरेश्वर॥११॥

॥ ५ ॥ भिक्षा मात्र खाने, पुण्यात्मा थिए । ती दुवै गुहामा बस्तथे र तीनै जगत्मा ता, 'सत्यनिष्ठ र तपोनिष्ठ' नामले प्रसिद्ध थिए ॥ ६ ॥ ती दुइमध्ये सत्यनिष्ठचाहिं सधैँ विष्णुकथामा तत्पर रहन्थ्यो । सुन्ने र सुनाउनेहरू नहुँदा ॥ ७ ॥ पनि उ मुनीश्वर एक्लै ती कामहरू गरिरहन्थ्यो । यदि कोही श्रोता छ भने उसलाई रातदिन भगवान्को महिमा सुनाइ-
१३ रहन्थ्यो॥८॥ यदि कसैले पुण्य हुने,कल्याणकारी विष्णुको कथा सुनाइरहेको छ भने त्यस बेला उ सबै काम छोडेर सुन्नमा लीन भएर कथा सुनिरहन्थ्यो॥९॥एकदम टाढा रहेका तीर्थ र देवताका मन्दिरहरूलाई छाडेर,ज्यादाजसो कथामा विरोध पार्ने कामहरूलाई पनि नगरेर॥१०॥ भगवान्को दिव्य कथा नै सुनिरहन्थ्यो र सुन्नेहरूलाई आफु पनि सुनाइरहन्थ्यो । हे नरेश्वर ! भगवान्को कथा नसुनी या नभनीकन ता अन्न खान पनि उ जान्दैनथियो अर्थात् उ खाना खाँदैनथियो



व्याख्याति च गृहे स्वस्य वक्ता रोगाद्युपद्रुतः । कूपस्नानपरो भूत्वा शृणोत्येव कथां मुनिः ॥१२॥
कथायाश्च विरामे तु स्वकृत्यं साधयत्यलम् । कथा वै शृण्वतो पुंसो जन्मबन्धो न विद्यते ॥१३॥
सत्त्वशुद्धिस्ततो विष्णावरश्चैव गच्छति । रुचिश्च जायते विष्णौ सौहृदं चैव साधुषु ॥ १४ ॥
निरञ्जनगुणं ब्रह्म - सद्यो हृद्यवरुध्यते । ज्ञानहीनस्य वै पुंसः कर्म वै निष्फलं भवेत् ॥ १५ ॥
बहुधा धारितं चापि यथैवान्धस्य दर्पणम् । कर्माणि क्रियमाणानि बहुधा शोचितात्मभिः ॥१६॥
सत्त्वशुद्ध्यै भवन्त्येष सत्त्वशुद्ध्या श्रुति व्रजेत् । श्रुतेस्तुज्ञानमासाद्य ज्ञानाद्ध्यानावकल्पते ॥१७॥

॥११॥रोग लागेको वेलामा त्यो वक्ता आफ्नो घरमा नै कथा भन्थ्यो । कुवामा नै न्वाहेर त्यो मुनि कथा सुन्थ्यो॥१२॥ कथा सकिएपछि मात्रै उ आफ्ना कामहरू गर्थ्यो । भगवान्का कथा सुन्ने मानिसहरूका लागि जन्मरूपी बन्धन रहँदैन ॥१३॥ तब विष्णु भगवान्मा सत्त्वशुद्धि हुन्छ, भगवान्मा प्रेम नलाग्नेपना हराउँछ । विष्णुमा प्रेम जाग्दछ, साधुहरूमा मित्रता उत्पन्न हुन्छ॥१४॥निरञ्जन गुण भएको ब्रह्म तुरुन्तै हृदयमा आउनुहुन्छ अर्थात् मानिस ज्ञानी हुन्छ । ज्ञानहीन पुरुषका सबै कर्म निष्फल हुन्छन्॥१५॥ज्ञानहीन मनुष्यले धेरै प्रकारले गरिएको पनि कर्म अन्धोलाई ऐना झैं बेकार छ । प्रायः दुःखी आत्मा हुनेहरूले गरिएका कर्महरू॥१६॥ सत्त्वशुद्धिका लागि हुन्छन्,सत्त्वशुद्धि भएपछि श्रुतिमा प्राप्त हुन्छ । श्रुतिको ज्ञान पाएपछि त्यस ज्ञानद्वारा ध्यान (विचार)मा चित्त लाग्छ॥१७॥ र श्रुतिले बताएमुताबिक सुन्न, ध्यान गर्न,

बहुधा श्रवण ध्यानं मननं श्रुतिचोदितम् । यत्र विष्णुकथा नास्ति यत्र साधुजना नहि ॥ १८ ॥
साक्षाद्गङ्गातटं वापि त्याज्यमेव न संशयः । यद्देशे तुलसी नास्ति वैष्णवं धाम वा शुभम् ॥१९॥
तत्र विष्णुस्मृतिर्नास्ति मृतस्तत्र तमो व्रजेत् । यद्ग्रामे वैष्णवं धाम नास्ति कृष्णमृगोऽपि वा॥२०॥
यत्र विष्णुकथा नास्ति साधवो वा तदाश्रयाः । मृतस्तत्र पुमान्क्षिप्रं श्वानयोनिशतं व्रजेत् ॥२१॥
विचार्योपनिषद्विद्यामिति निश्चित्य वै मुनिः । सदा विष्णुकथासक्तो विष्णुस्मृतिपरायणः ॥ २२ ॥
न किञ्चिदधिकं जातु मन्यते श्रवणात्परम् । इतरस्तु तपोनिष्ठः कर्मनिष्ठो दुराग्रहः ॥ २३ ॥

चिन्तन गर्नमा धेरै नै चित्त जान्दछ । जहाँ विष्णुका कथा हुँदैन, जहाँ साधुजन हुँदैनन् ॥ १८ ॥ त्यस्तो स्थल खास गंगाजीको तटै भए पनि त्याग्न योग्य छ, यसमा कुनै संसय छैन । जुन देशमा तुलसी छैन, अथवा कल्याणदायक विष्णुको धाम छैन ॥ १९ ॥ जहाँ विष्णु भगवान्को स्मरण हुँदैन त्यस्तो ठाउँमा मानिस मऱ्यो भने त्यो अन्धतामिस्रमा जान्छ । जुन गाउँमा विष्णु भगवान्को मन्दिर छैन, वा कृष्णमृग छैन ॥२०॥ जुन गाउँमा विष्णुको कथा हुँ दैन अथवा जहाँ भगवान्का भक्त साधुहरू छैनन्,त्यहाँ मरेको मानिस तुरुन्तै सय जन्मसम्म कुकुर भैरहन्छ ॥२१॥ उपनिषद् विद्यालाई पढेर विचार गर्दा यै कुरो निश्चय गरेर ती मुनि सधैं विष्णुको कथामा आसक्त र विष्णुको स्मरणमा तल्लीन रहन्थे ॥२२॥ भगवान्को कथा सुन्नुभन्दा अधिक श्रेष्ठ कहिल्यै कुनै चीज मान्दैनथ्यो । अर्कोचाहिं तपोनिष्ठ नामको चेलो कर्ममा तल्लीन रहने हठी थियो ॥२३॥ न त उ स्वयं कथा बाँच्या, न अरुले असल कथा सुन्थ्यो नै बाँचिइरहिएको कथालाई





नव्याख्याति स्वयं वापि नशृणोति चसत्कथाम् । वाच्यमाना कथां हित्वा तीर्थस्नानं स गच्छति॥२४॥
तीर्थेऽपि च प्रवृत्तायां कथायां भूमिपालक । कमलोपभयाद्दूरे याति चाञ्चल्यशङ्कितः ॥२५।
व्रजन्ति गृहकृत्यार्थं सङ्गमात्परतो जनाः । न श्रोतारो न वक्तारस्तस्य पार्श्वे तु कर्मिणः ॥२६॥
दुराग्रहस्य दुर्बुद्धेः काल एवं क्षयङ्गते । जिह्वा श्रुतिश्च न क्वापि न प्राप्ता हि कथा विभोः ॥२७॥
अश्रोतृत्वादवक्तृत्वाद्दुर्बुद्धित्वाद्दुराग्रहात् । पश्चात्पञ्चत्वमासाद्य सद्यो धर्मेण वै मुनिः ॥२८॥
पिशाचोऽभूच्छमीवृक्षे छिन्नकर्णाह्वयो बली । निराश्रयो निराहारः शुष्ककण्ठोष्ठतालुकः ॥२९॥

पनि त्यागेर उ तीर्थ स्नानका लागि जान्थ्यो ॥ २४ ॥ हे राजन् ! तीर्थमा पनि भइरहेको कथालाई चञ्चलताले शंकित भएर कर्मलोपको भयले कथा सुन्न छोडेर टाढ़ा जान्थ्यो ॥२५॥ घरका कार्यको लागि पनि उसको संसर्गबाट मनुष्यहरू पर-पर सर्थें, न श्रोताहरू नै न वक्ताहरू नै त्यस कर्मिष्ठको नजीकमा जान्थे ॥ २६ ॥ हठी त्यस दुर्बुद्धिको यस्ता प्रकारले समय बित्तै गएकोले उसको जिब्रो र कान दुवैले कहिल्यै पनि भगवान्को कथा भन्न सुन्न पाएन ॥ २७ ॥ कहिल्यै भगवान्को कथा नसुनेकाले, नभनेकाले, दुर्बुद्धि हुनाले र हठी हुनाले पछि मरेपछि तुरुन्तै त्यो मुनि त्यस हठ धर्मले गर्दा ॥२८॥ कुनै शमीको रूखमा छिन्नकर्ण नामको भयो । आश्रय रहित,खान नपाउने, घाँटी ओठ तालुसुकेको बलवान् पिशाच भयो॥२९॥यस्ता प्रकारले दुःख पाउने भएका उसको दिव्य दश हजार वर्ष त्यहीं बिते । भोको र अत्यन्त दुःखी

एवं वै खिद्यमानस्य समा दिव्ययुता गताः । नापश्यत्स्वस्य त्रातारं निराहारोऽतिदुःखितः ॥३०॥
स्वकृतं चिन्तमानश्च मत्तोन्मत्त इवाभ्रमत् । क्षुधया पर्यटन् वाऽपि निर्वृत्तिं नाम मूढधीः ॥३१॥
कृशानुसदृशो वायुरङ्ग स्पृष्ट्वाऽकृतात्मनः । कालाग्नितुल्या आपश्च फलपुष्पादिकं विषम् ॥३२॥
न क्वापि सुखमापेदे कर्मठो दीनधीरयम् । एवं व्यवसिते तस्मिन्नरण्ये जनवर्जिते । ३३॥
कथया रहिते क्षेत्रे स्वाश्रमे साधुवर्जिते । दैवादायात्सत्यनिष्ठः कदा पैठीनसीं पुरीम् ॥३४॥
गच्छन्मार्गे ददर्शासौ छिन्नकर्णं बहुव्यथम् । दृष्ट्वात्मानं खादयन्तं रुदन्तं क्षुधयाऽऽतुरम् ॥३५॥

उसले आफूलाई उद्धार गर्ने कोही देखेन ॥३०॥ आफ्नू करनीमा चिन्ता गर्दै उन्मत्त पागल जस्तो भएर त्यो घुम्दथ्यो । भोकले आकुल भएर घुम्ने त्यस मूर्खबुद्धिले मुक्ति पाएन॥३१॥त्यस कर्तव्यहीन पापीको अङ्गलाई छुँदा वायु आगो तुल्य हुन्थ्यो । पानी कालाग्नि तुल्य हुन्थ्यो, फल-फूलहरू विष जस्ता हुन्थे ॥३२॥ यस हठकर्मी दुःखी मनवाला उसले कहीं सुख पाएन । यस्ता किसिमले जनशून्य त्यस जङ्गलमा बस्ता॥३३॥ कथाले रहित भएको, साधुजन कोही नरहेको उसको आश्रय भएको ठाउँमा कुनै वेला पैठीनसी नगरमा जान लागेका सत्यनिष्ठ दैवसंयोगले यहाँ आइपुगे ॥ ३४ ॥ हिंड्दा बाटामा अत्यन्त दुःखी छिन्नकर्णलाई उनले देखे । भोकले आकुल भएको, रुँदै आफ्नू मासु खाने उसलाई देखेर ॥३५॥



मा भैषीरिति चाभाष्य कोऽसीत्याह मुनीश्वरः । वंशेदृशी च कस्मात्ते न ते दुःखमतः परम् ॥३६॥
इत्याश्वस्तोऽमुना छिन्नकर्णः प्राहाऽतिविह्वलः । तपोनिष्ठो यतिरहं शिष्यो दुर्वाससः प्रभो ॥३७॥
ब्रह्मेश्वरक्षेत्रवासी कर्मनिष्ठो दुराग्रही । कर्मलोपभयात् मौर्ख्यात् मया दुर्बुद्धिना मुने ॥३८॥
साधुभिर्वाच्यमानापि नादृता विष्णुसत्कथा । न व्याख्याता च श्रोतृभ्यः कथा कर्मनिकृन्तनी॥३९॥
तेन कर्मविपाकेन महतीं दुर्गतिं गतः । छिन्नकर्णोऽभवं नाम्ना पिशाचो दुःखविह्वलः ॥४०॥
न पश्यामि च दातारं दुःखादस्मात्कथञ्चन । तव दृष्टिपथं यातो दिष्ट्याऽहं गतकल्मषः ॥४१॥

'नडराऊ' यति भनेर मुनीश्वरले 'को हौ ?' भनी सोधे । तिम्रो यस्तो दशा कसरी भयो ? अब उप्रान्त तिमीलाई दुःख हुनेछैन ॥३६॥ मुनिले यसरी आश्वासन दिइएको अतिविह्वल त्यस छिन्नकर्णले भन्यो—हे प्रभु ! दुर्वासा मुनिको शिष्य तपोनिष्ठ नामको म यति ( साधु ) हुँ ॥ ३७ ॥ ब्रह्मेश्वर क्षेत्रमा रहने म कर्ममा नै निष्ठा राख्नेवाला हठी थिएँ । कर्म लोप होला भन्ने डरले दुर्बुद्धि मैले मूर्खताले गर्दा हे मुने ! ॥ ३८ ॥ साधुहरूले वाँचिरहेको विष्णुको सत्कथालाई आदर गरिनँ, दुष्कर्मलाई नाश गर्ने भगवान्को कथा श्रोताहरूलाई सुनाइनँ ॥ ३९ ॥ त्यसै कर्मका विपाकले (फलले) यो ठूलो दुर्गतिमा प्राप्त भएको छु । अहिले म दुःखले विह्वल छिन्नकर्ण नामको पिशाच भएको छु॥४०॥ यस्तै हालतमा पनि यस दुःखबाट रक्षा गर्ने कोही राख्तैनँ । भाग्यले आज तपाईंले देखिएको म पापरहित भएको छु॥४१॥आज म-उपर देवताहरू

अद्य मे देवतास्तुष्टा गुरवः साधवश्च ये । हरिश्च मे प्रसन्नोऽभूद्यतस्ते दर्शनं मम ॥४२॥
पपात पादयोर्भूमौ त्राहि त्राहीति वै रुदन् । ततस्तु कृपयाविष्टः सत्यनिष्ठो महायशाः ॥४३॥
दोर्भ्यामुत्थापयामास सन्तमाभ्यां मुनीश्वरम् । ततस्त्वप उपस्पृश्य ददौ पुण्यमनुत्तमम् ॥४४॥
वैशाखमासमाहात्म्यं श्रवणस्य मुहूर्तजम् । तेन पुण्यप्रभावेन सद्यो ध्वस्ताखिलाशुभः ॥४५॥
पिशाचदेहान्निर्मुक्तो दिव्यदेहधरोऽभवत् । दिव्यं विमानमारुह्य तं प्रणम्य महामुनिम् ॥४६॥
आमन्त्र्य च परिक्रम्य ययौ विष्णोः परम्पदम् । सत्यनिष्ठस्ततो धीमान् ययौ पैठोनसीं पुरीम् ॥

खुशी भए, गुरुहरू र जो साधु छन् ती सब खुशी भए, विशेष गरेर मेरा ऊपर हरि भगवान् खुशो हुनुभो, जसले गर्दा मैले तपाईंको दर्शन पाएँ ॥४२॥ अब मेरो रक्षा गर्नोस्, रक्षा गर्नोस्, भनी रुँदै सत्यनिष्ठका दुवै पाउमा भैंमा लंपसार पऱ्यो । तब दयाले चित्त पग्लिएका महायशस्वी सत्यनिष्ठले ॥४६॥ यति (साधु) कर्मनिष्ठलाई आफ्ना दुई हातले उठाए, र तब पानी लिएर वैशाख महीनाको माहात्म्य दुइ घड़ी जति सुनेको आफ्नू अतिउत्तम पुण्य दिए । त्यस प्रभावले तुरुन्तै सारा पाप नाश भएको छंदो ॥४३-४५॥ पिशाच शरीरबाट मुक्त भयो र सुन्दर शरीरवाला भयो । तब दिव्य विमानमा चढेर, ती महामुनिलाई प्रणाम गरेर ॥३६॥ परिक्रमा गरेर 'जाँ है त' भनी विष्णुको परमपदमा गयो । अति बुद्धिमान्



माहात्म्यश्रवस्यैवं चिन्तमानः पुनः पुनः ॥ ४७ ॥ श्रुतदेव उवाच–यत्र विष्णुकथा पुण्या शुभा लोकमलापहा । तत्र सर्वाणि तीर्थानि क्षेत्राणि विविधानि च ॥ ४८ ॥ यत्र प्रवहते पुण्या शुभा विष्णुकथाऽऽपगा । तद्देशवासिनां मुक्तिः करसंस्था न संशयः ॥४९॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे कथाप्रशंसायां
पिशाचमुक्तिप्राप्तिर्नाम चतुर्दशोऽध्यायः ॥१४॥

सत्यनिष्ठ पनि बारम्बार महात्म्यका श्रवणमहिमलाई विचार्दै पैठीनसी नगरतिर हिंडे ॥ ४७ ॥ श्रुतदेवले भने—जहाँ जनताको पापलाई नाश गर्ने, पुण्य दिने, कल्याणकारी विष्णुको कथा हुन्छ, त्यहाँ सारा तीर्थहरू र नाना प्रकारका क्षेत्रहरू आइपुग्छन् अर्थात् त्यही स्थल तीर्थ क्षेत्र हुन्छ ॥४८॥ जुन देशमा ( ठाउँमा ) पुण्य दिने, कल्याणकारी, विष्णुको कथारूपी नदी बग्दछ, मुक्ति त्यस देश (ठाउँ) का बासिन्दाहरूको हातमा रहन्छ, यसमा कुनै संशय छैन ॥ ४९ ॥

श्रीवैशाख माहात्म्यको नारद र अम्बरीष संवादको कथा प्रशंसामा पिशाच मुक्ति प्राप्ति नामको चौधौं अध्याय सकियो ॥१४॥

# अथ पञ्चदशोऽध्यायः

श्रुतदेव उवाच । भूयःशृणुष्व भूपाल माहात्म्यं पापनाशनम् । पुण्यमाधव मासस्य वल्लभस्य मधुद्विषः॥१॥
पुरा पाञ्चालदेशे तु राजा पुरुयशोऽभवत् । तनयो भूरियशसः पुण्यशीलस्य धीमतः ॥ २ ॥
पितरि प्रस्थिते स्वर्गं राज्यस्थी धर्मपालकः । शौर्यौदार्यगुणोपेतो धनुर्विद्याविशारदः ॥ ३ ॥
शशास पृथिवीं सर्वां स्वधर्मेण महामतिः । पूर्वजन्मकृतेनैव दोषेण महता वृताः ॥ ४ ॥
सम्पद्धानिमवापासौ कालेन क्रियताऽनघ । हया गजा मृतिं याता महद्रोगेण पीडिताः ॥ ५ ॥

श्रुतदेवजीले भन्नुभयो—हे राजन् ! विष्णु भगवान्‌को प्रिय, पुण्यदायी वैशाख महीनाको पाप नाश गर्ने माहात्म्य फेरि सुन्नुहोस् ॥१॥ पहिले पाञ्चाल देशमा पुण्यात्मा बुद्धिमान भूरियश नामका राजाको छोरो पुरुयश नामको राजा भयो ॥२॥ बाबु स्वर्ग गएपछि राज्यसिंहासनमा बसेको, शूरता आदि गुणले युक्त, धनुर्विद्यामा निपुण, धर्मको रक्षक ॥३॥ उस राजाले धर्मपूर्वक सारा पृथ्वीको शासन गर्‍यो । पूर्वजन्ममा गरेको ठूलो दोषले गर्दा ॥३॥ हे निष्पाप राजन् ! केही कालपछि उसको सम्पत्ति नाश भयो । ठूला रोगले पीडित भएर हात्ती घोडाहरू मरे ॥५॥ मनुष्य रहित राज्य गराउने ठूलो अनिकाल पर्‍यो । तब राज्य र तोपखाना हात्तीले चलाएको कैथ जस्तो खोक्रो भयो ॥६॥ कोष रित्तिएको



दुर्भिक्षमतुलं चासीन्निर्मानुष्यविधायकम् । राज्यं कोशस्तदा चासीद्गजभुक्तकपित्थवत् ॥ ६ ॥
बलहीनं नृपं ज्ञात्वा कोशराष्ट्रविवर्जितम् । तं जेतुमेष समय इति निश्चितमानसाः ॥ ७ ॥
आजग्मुः शतशो भूपा रिपवस्तस्य भूपतेः । जिग्युर्युद्धेन तं भूपं पाञ्चालविषयाधिपम् ॥ ८ ॥
पराजितस्ततो राजा विशेष गिरिगह्वरे । शिखिन्या भार्यया सार्कं धात्र्यादिगणसंयुतः ॥ ९ ॥
अज्ञातपद्धतिश्चान्यैर्बहुदुःखसमाकुलः । त्रिपञ्चाशत्समा नीतास्तेन राज्ञा यतात्मना ॥ १० ॥
चिन्तयामास भूपालः किमेतदिति भूरिशः । कर्मणा जन्मशुद्धोऽहं मातृपितृहिते रतः ॥११॥
गुरुभक्तः सदाक्षिण्यो ब्रह्मण्यो धर्मतत्परः । दयावान्सर्वभूतेषु देवभक्तो जितेन्द्रियः ॥१२॥

नागरिक पातलिएकोले राजलाई निर्बल ठानेर उसलाई जित्ने यै समय हो मनमा यस्तो निश्चय गरेका ॥७॥ उस राजाको सयकडौं शत्रुराजाहरू आइपुगेर युद्ध गरेर पाञ्चाल देशका अधिपति ती राजालाई जिते ॥८॥ तब हारेका ती राजा—धायी आदि समुदाय सहित शिखिनी भार्याका साथ पहाडको गुफामा प्रवेश गरे ॥९॥ कसैले पनि यै बाटो गए होलान् भनेर नजानिएका, धेरै दुःखले आकुल भएका संयमी ती राजाले त्यहाँ त्रिपन्न वर्ष बिताए ॥१०॥ राजा 'यस्तो किन भयो ?' भन्ने बारम्बार सोचिरहन्थे । कर्मले जन्मैदेखि म शुद्ध, आमा-बाबुको हितमा तत्पर छु ॥११॥ म गुरुभक्त छु, सरला छु, ब्राह्मणहरूको सेवा गर्दछु, धर्ममा सधैं तत्पर छु, सारा प्राणीमा दयालु छु, देवताहरूको भक्त छु, जितेन्द्रिय पनि छु ॥ ॥१२॥न मेरा दाजु भाइ छन् ! न छोरो छ ! न हित गर्ने मित्रवर्ग छन् ! कुलीन पनि मेरो दया र पुरुषार्थक

न भ्राता मे न पुत्रो मे न च मे सुहृदो हिताः । दयापौरुषविख्यातिः कुलीनस्यापि मे कुतः ॥१३॥
केन वा कर्मणाचासीद्दारिद्र्यं भूरिदुःखदम् । केन वाऽपजयो मेऽद्य केन वा वनवासिता ॥१४॥
इति चिन्ताकुलो राजा गुरुं सस्मार खिन्नधीः । याजोपयाजकौ नाम सर्वज्ञौ मुनिसत्तमौ ॥१५॥
आजग्मतुर्मुनीन्द्रौ तु राज्ञाऽऽहूतौ महामती । तौ दृष्ट्वा सहसोत्थाय राजा पाञ्चालवल्लभः ॥१६॥
ननाम शिरसा भक्त्या प्रवासेनातिपीडितः । राजचिह्नविहीनत्वात् केनाप्यज्ञातपद्धति ॥१७॥
तूष्णीं तस्थौ मुहूर्तं हि पतित्वा भुवि पादयोः । दोर्भ्यामुत्थापितस्ताभ्यां परिमृष्टाश्रुलोचनः ॥१८॥

प्रसिद्धि कहाँ छ ! ॥१३॥ कुन कर्मले यो अति दुःख दिने दारिद्र्य भयो ! अथवा केले गर्दा मेरो आज हार भयो ! अथवा केले गर्दा वनवास भो ॥१४॥ यस्तो चिन्ताले आकुल भएको राजाले खिन्नबुद्धिका भएर गुरुलाई संझे । तब याजक र उपयाजक नामका मुनिहरूमा श्रेष्ठ, सर्वज्ञाता ॥१५॥ ठूला बुद्धिमान्, राजाले बोलाइएका दुइ मुनिश्रेष्ठ आइपुगे । दुइ मुनिलाई देखेर, पाञ्चाल देशका प्रिय राजाले सहसा उठेर॥१६॥भक्तिपूर्वक शिरले प्रणाम गरे । परदेशमा रहनाले अति दुःखित, राजचिह्नले हीन हुनाले कसैले पनि नचिनिने ॥१७॥ उनी भूमिमा गुरुका दुवै पाउमा लम्पसार परेका छँदा एकछिन चुपचाप रहे । ती दुइले उठाइएपछि आँखाका आँसु पुछेर ॥ १८ ॥ वनको योग्य असल सामग्रीले



विधिवत्पूजयामास वन्यैरेवार्हणैः शुभैः । सूपविष्टौ तु तौ विप्रौ पप्रच्छानतकन्धरः ॥१९॥
ब्रह्मिष्ठौ वदतं दुःखकारणं च क्षितीशितुः । कर्मणा जन्मशुद्धस्य क्षितृदेवप्रियस्य च ॥२०॥
पापभीरोः कृपालोश्च गुरुभक्तस्य मे कुतः । दारिद्र्यं कोशहानिश्च रिपुभिश्च पराभवः ॥२१॥
कस्मादरण्यवासश्च कुत एकाकिना मम । न पुत्रो न च मे भ्राता न हिता सुहृदाश्च मे ॥२२॥
दुर्भिक्षं वा कुतश्चासीद्देशे मत्पालितेऽनघे । एतद्विस्तार्य मे ब्रूतं कारणं मुनिपुङ्गवौ ॥२३॥
इत्युक्तौ तौ मुनिश्रेष्ठौ भूपेनात्यन्तदुःखिना । प्रत्यूचतुर्महात्मानौ किञ्चिद्ध्यानपरायणौ ॥ २४ ॥

विधिपूर्वक पूजा गरे । तब राम्रोसँग बसेका ती विप्रलाई कर्पै निहुरेर राजाले सोधे ॥ १९ ॥ हे ब्रह्मनिष्ठ गुरुहो ! कर्मले जन्मैदेखि शुद्ध, आमा-बाबु र पौताहरूको प्रिय, पापदेखि डराउने, दयालु, गुरुभक्त म राजाको दरिद्रता हुनु धन नहुनु र शत्रुहरूद्वारा हारिनुरूप दुःखको कारण कसरी भो ? बताइबक्सियोस् ॥२०-२१॥ के कारणले जंगलको वास भो ? किन म अकेलिएँ ? किन मेरो छोरो छैन ! दाजु-भाइ छैनन् ? र मेरो हित चाहने मित्रहरू ? ॥२२॥ पाप-रहित मैले पालिएको देशमा अनिकाल कसरी पऱ्यो ? हे मुनिहरूमा श्रेष्ठ गुरुहो ! मलाई यसको कारण विस्तारपूर्वक बताइबक्सियोस् ॥ २३ ॥ अत्यन्त दुःखी राजाले यस्ता प्रकारले सोधिएका महात्मा ती दुइ मुनिश्रेष्ठ एकछिन ध्यानमग्न भई जवाफ दिए ॥२४॥ याजक र उपयाजकले भने—हे राजन् ! तिम्रा दुःखको कारण भन्दछौं, सुन ! हे राजन् ? पहिले दश

याजोपयावूचतुः ।। शृणु भूप प्रवक्ष्यावस्तवदुःखस्य कारणम् । पुरा भूप महापापी व्याधस्त्वं दशजन्मसु ॥२५॥ निष्ठुरः सर्वलोकानां सदा हिंसापरायणः । धर्मलेशकरः क्वापि न दमो न च वै शमः ॥२६॥ न जिह्वा वक्ति नामानि विष्णोर्वापि कथञ्चन । न चेतः स्मरति श्रीशचरणाम्बुरुह द्वयम् ॥ २७ ॥ न प्रणामः कृतः क्वापि शिरसा परमात्मने । नवजन्मनि ते भूप गतान्येव दुरात्मनः ॥२८॥ दशमे जन्मसि प्राप्ते व्याधस्त्वं सह्यभूधरे । निष्ठुरः सर्वलोकानां नराणां त्वं नरान्तकः ॥ २९ ॥ दयाहीनः शस्त्रजीवी सदा हिंसापरायणः । निर्गुणः सकलत्रस्त्वं

जन्मसम्म तिमी महापापी व्याधा थियौ ॥२५॥ तिमी सारा प्राणीमा निर्दयी थियौ, हमेशा हिंसैमा लागिरपन्थ्यौ, कत्तै अलिकति पनि धर्म नभएका थियौ, तिमीमा न शान्ति थियो, न इन्द्रिय वशमा गर्ने शक्ति थियो ॥२६॥ कुनै हालतमा पनि तिम्रो जिब्रो भगवान्‌को नाम लिदैनथ्यो, न तिम्रो मनले नै भगवान्‌का दुइ चरणकमलको स्मरण गर्‍यो ॥२७॥
१४ न कहिल्यै परमात्मालाई शिरले प्रणाम गर्‍यौ, हे राजन् ! तिम्रा नौ जन्म त यस्तै दुष्ट दिलको भएर बिते ॥२८॥ दशवाँ जन्म प्राप्त भएपछि तिमी सह्यपर्वतमा व्याधा थियौ, त्यस वेला तिमी, सारा प्राणीका उपर निठुरी, मनुष्यहरूका त साक्षात् यमराज नै थियौ॥२९॥दया पटक्कै नभएका,शस्त्रले जीवन चलाउने, सधैं हिंसा नै गरिरहने, गुणरहित, सारालाई



मार्गपीडाकरः शठः ॥३०॥ प्रजानां गौडदेश्यानां राक्षसो मानुषाशनः ॥ एवं चाब्दान्यतीतानि नैजं हितमजानतः ॥३१॥ बालापत्यमृगाणां च पक्षिणां च वधात्तव । दयाहीनस्य दुर्बुद्धेर्जन्मन्यस्मिन्नपुत्रता ॥३२॥ विश्वासघातकत्वेन भ्रातरो नैव सोदराः । मार्गपीडाकरत्वेन सुहृज्जनविवर्जितः ॥३३॥साधूनां च तिरस्काराच्छत्रुभिस्ते पराजयः । कदाप्यदत्तदोषेण दारिद्र्यं पतितं गृहे ॥ ३४ ॥ सदैवोद्वेगकारित्वात्प्रवासस्तें दुरासदः । सर्वेषामप्रियत्वाच्च दुःखमत्यन्तदुःसहम् ॥३५॥ निराहारोऽप्यतः पूर्वं सदाक्रूरेण कर्मणा । तस्माद्राज्यापहारस्ते जन्मन्यस्मिन्महीपतें ॥३६॥

तर्साउने भएर बटोहीहरूलाई दुःख दिने शठ थियौ ॥३०॥ धेरै के भनूँ त्यस वेला तिमी गौडदेशनिवासी प्रजाहरूको मासु खाने साक्षात् राक्षस थियौ । आफ्नू हित पटक्कै नजान्ने भएर तिमीले यस्तै प्रकारले आफ्ना आयुका वर्षहरू बितायौ ॥३१॥ त्यस जन्ममा मृग र पक्षीहरूका पाठा बच्चा मारेकाले निर्दयी दुष्ट तिम्रो यस जन्ममा सन्तान भएन ॥३२॥ विश्वासघात गरेकाले सहोदर दाजु-भाइ कोही भएनन् । बटोहीहरूलाई सताएकाले मित्रजनहरूबाट रहित छौ ॥३३॥ साधुहरूको तिरस्कार गरेकाले शत्रुहरूद्वारा तिम्रो हार भयो, कहिल्यै कसैलाई क्यै नदिएका दोषले घरमा दरिद्रता आइपर्‍यो ॥३४॥ सधैंभरि प्राणीहरूलाई लखेटिरहेका कारणले तिम्रो यो दुःखदायी वनवास भयो, सबैको अप्रिय भएकोले यो सहि नसक्नु दुःख भएको हो ॥३५॥ यसकारण पूर्व जन्ममा सधैं क्रूर कर्मले गर्दा आत्मा मारी भोकभोकै रहनुपर्‍यो । हे राजन

अथ ते सत्कुलीनत्वे हेतूँश्चापि ब्रवीम्यहम्। यदाऽभूर्गौडदेशीये ह्यन्तिमे व्याधजन्मनि ॥३७॥
स्वकर्मनिरते क्रूरे विपिने कण्टकान्विते। तिष्ठत्येवं दयाहीने सर्वभूतान्तके पथि ॥३८॥
वैश्यावाजग्मतुर्दैवाद्धनाढ्यौ घर्मपीडितौ। मुनिश्च कर्षणो नाम वेदवेदाङ्गपारगः ॥३९॥
जटाचीरधरः पुण्यः कमण्डलुपरिग्रहः। तान् दृष्ट्वा धणुरादाय मार्गं रुद्ध्वा व्यवस्थितः ॥४०॥
अथोद्धृत्य शरौ वैश्यौ कृत्वा छिन्नशरीरकौ। तयो रेकं च हत्वा तु गृहीत्वा खलु तत्पणम् ॥४१॥
अपरं हन्तुमुद्युक्ते स दुद्राव भयाद्द्रुतम्। पणं गुल्मे विनिक्षिप्तः भीतः प्राणपरीप्सकः ॥४२॥

त्यसै कारणले यस जन्ममा तिम्रो राज्य हरिएको हो॥३६॥ अब तिम्रो असल कुलमा जन्म हुनाको कारण पनि म कहन्छु। जब तिमी अन्तिम व्याधाको जन्ममा गौडदेशीय भएका थियौ ॥३७॥ तब तिमी काँढैकाँढा भएको जंगलमा आफ्नू क्रूर कर्ममा लागिपरेर, बाटामा सबै प्राणीका यमराज जस्ता दयाहीन भएर रहन्थ्यौ ॥३८॥ कुनै दिन दैवसंयोगले त्यसै बाटाबाट घामले पीडित भएका धनी दुइ वैश्य र वेद-वेदाङ्गमा पारंगत, कमण्डलु नै सम्पत्ति भएका, जटा र अलखा धारण गरेका, पुण्यात्मा कर्षण नामका मुनि पनि त्यहाँ आइपुगे। ती तीन जनालाई देखेर तिमी धनु लिएर बाटो रोकेर बस्यौ ॥३९-४०॥ अनि बाण झिकेर दुवै वैश्यलाई छियाछिया शरीरका बनायौ, तीमध्ये यौटालाई मारेर उसको पैसा चचाँडै गुटमुख्याएर ॥४१॥ अर्कोलाई मार्न लाग्दा उ भयले सुइँकुच्चा ठोक्तो भयो र प्राण बचाउनको आतुरमा डराएको उसले



कर्षणोऽपि मुनिः शीघ्रं व्याधान्मृतिविशङ्कया। आतपे धावमानः सन् तृषाघर्मप्रपीडितः ॥४३॥
मूर्च्छामाप गतश्वासः संज्ञामात्रावशेषितः। दुद्रुवे च विहायैनं वैश्यो जीवनतत्परः ॥४४॥
त्वं तावनुद्रुतौ दृष्ट्वा मूर्च्छितं पथि भूसुरम्। पणं कुत्र विनिक्षिप्तं कियद्दूरं गतो वणिक् ॥४५॥
इति पृष्टं द्विजं श्रान्तमुज्जीवयितुमुद्यतः। फूत्कृत्य कर्णयोस्तस्य चकार स्मृतिकारिणम् ॥४६॥
पल्लवस्योदकेनैव क्रमिकर्दमसंयुजा। नेत्रे संमृज्य श्रान्तस्य पर्णैः संवीज्य तन्मुखे ॥४७॥
ससंज्ञं च मुनिं कृत्वा त्वमात्था स्वस्थमानसः। मा शङ्का ते मुने कार्या मत्तः शस्त्रभृतो वने ॥४८॥

पैसा झाडीमा फ्याँकिदियो ॥४२॥ कर्षण मुनि पनि व्याधाद्वारा मारिने शंकाले चाँडचाँडै घाममा दौडँदा प्यासले र घामले पीडित भएर ॥४३॥ हुरुक्क हुन धुकधुकी मात्र रहेका छँदा मूर्च्छा परे। बाँच्न चाहने वैश्य मूर्छित मुनिलाई छोडेर दौड्यो ॥४४॥ तिमिले माग्ने भएका ती दुइलाई देखेर बाटामा मूर्च्छा परेको ब्राह्मणलाई 'पैसा कता फ्याँक्यो र कति टाढा त्यो बनियाँ गयो ?' ॥४५॥ भनी थाकेका ती ब्राह्मणलाई सोध्यौ र उनलाई बचाउन उद्यत भएको तिमीले ती बाहुनको दुवै कानमा फुकेर उनलाई बहुरायौ ॥४६॥ कीरा र हिलो भएको डोबरोको लेदो पानीले नै भए पनि ती थाकेका बाहुनको दुवै आँखा पुछिदिएर, तिनको मुखमा पातले हंकिदिएर ॥४७॥ मुनिलाई राम्रै होशमा ल्याई स्वस्थ चित्त भएर तिमीले उनलाई भन्यौ—हे मुनि ! एक्लास वनमा शस्त्रधारी मबाट तपाईंले कुनै शंका लिनुपर्दैन ॥ ४८ ॥ संसारमा फक्कड नै

निष्किञ्चनः सुखी लोके कुतस्ते भयमुल्वणम् । भिन्नपात्रेण चीरेण न मे किञ्चिद्भविष्यति ॥४९॥
एतावद्वद मे विद्वन् वणिक् कुत्र पलायितः । कुत्र गुल्मे धनं क्षिप्तं तेन शीघ्रं पलायता ॥५०॥
अन्यथा त्वांहनिष्यामियदि मिथ्या वदिष्यसि।कर्षणउ.-धनं गुल्मे विनिक्षिप्तं मार्गादस्मात्पलायितः५१॥
इति प्राह त्वया सोऽपि पृष्टः प्राणपरीप्सया । गच्छ विप्र सुखं मार्गं मत्तो भीतिं विहाय च ॥५२॥
इतो विदूरे सलिलं तडागे तर्तते शुभम् । तत्पीत्वा सलिलं पुण्यं गच्छ ग्रामं गतश्रमः ॥५३॥
अधुनैवागमिष्यन्ति राजकीयाः पथाऽमुना । मत्पादान्वेषण सक्ताः श्रुत्वा रावं वणिक्पतेः ॥५४॥

सुखी छ तपाईलाई यो भयंकर भय किन ? तपाईको फुटेको कमण्डलु र यो च्यातिएको अलखाले मलाई केही हुँदैन ॥४९॥ हे विद्वन् ! त्यो बनियाँ कता भाग्यो ? चाँडै भाग्ने उसले कुन झाडीमा धन फ्याँक्यो ? मलाई यो भनिदिनोस् ॥५०॥ यदि भन्दैनौ या झुट्टो भन्यौ भने तिमीलाई मारिदिनेछु । कर्षणले भने-'यसै बाटोबाट भाग्दा धन झाडीमा फ्याँकिदियो' ॥५१॥ तिमीले सोधिएका उनले प्राण बचाउनका लागि यस्तो भने । तब तिमीले हे बाजे ! मबाट हुने डर त्यागेर सुख-पूर्वक बाटो लाग ॥५२॥ यहाँबाट नजीकैको पोखरीमा निर्मल पानी छ, त्यो पवित्र पानी पिएर थकाइ मेटिएपछि तिमी गाउँमा जाऊ ॥५३॥ व्यापारीको पुकार सुनेरमेरो गोहोखोज्न लागेका पुलीसहरू यही बाटोबाट अहिले नै यहाँ आइपुग्नेछन् ॥५४॥ प्यासले पीडित भएका तिमी मेरो पछि हिड्न असक्त छौ, त्यसकारण हे द्विज ! यस पंखाले हम्क ! गर्मी केही



तृषार्तमनुगन्तुं मे न शक्यं त्वं ततो द्विज । वीजयानेन पर्णेन धर्मः किञ्चिद्गमिष्यति ॥५५॥
तस्मै दत्त्वा पलाशं च त्वमगाद्विपिनं पुनः । तेन पुण्यप्रभावेण वैशाखे धर्मनिष्ठुरे ॥५६॥
स्वकार्यार्थं कृतेनापि मुनेस्त्राणाय पद्धतौ । जन्मासीत्ते महापुण्ये राजवंशेऽतिविस्तृते ॥५७॥
यदीच्छसि सुखं राज्यं धनधान्यादिसम्पदाः । स्वर्गापवर्गौ यदि वा सायुज्यं वा हरेः पदम् ॥५८॥
कुरु वैशाखधर्मांस्त्वं सर्वसौख्यमवाप्स्यसि । मासोऽयं माधवो नाम तृतीया चाक्षयाह्वया ॥५९॥
गां सवत्सां च सम्पूज्य देहि विप्राय मोदते । तेन ते कोशपूर्तिः स्याच्छय्यां देहि सुखं भवेत् ॥६०॥

कम हुनेछ ॥५५॥ अनि ती मुनिलाई पलाशको स्यौला दिएर तिमी फेरि जंगलमा गयौ । धर्ममा कट्टर वैशाखमा गरिएको त्यस पुण्यका प्रभावले ॥५६॥ आफ्नै मतलबसिद्धिका लागि गरिएको पनि बाटामा मुनिको रक्षाको लागि गरिएको कामको प्रभावले अत्यन्त पुण्यशाली अति विशाल राजवंशमा तिम्रो जन्म भयो ॥५७॥ यदि सुख राज्य धन-धान्य आदि सम्पत्ति, स्वर्ग मोक्ष अथवा विष्णु भगवान्को सायुज्य पद चाहन्छौ भने ॥५८॥ तिमी वैशाखका धर्महरू गर, सारा सुख पाउनेछौ । यस वैशाख महीनाको नाम 'माधव' हो । यसमा पर्ने तृतीयाको नाम अक्षय तृतीया हो ॥५९॥ त्यसमा बाच्छो या बाच्छी सहितकी गाईलाई पूजा गरेर केही नहुने असल ब्राह्मणलाई देऊ त त्यसको प्रभावले तिम्रो कोश भरिनेछ शय्या देऊ त सुख हुनेछ ॥६०॥ छाता दान गर त तिमीलाई साम्राज्य मिल्नेछ । विधिपूर्वक न्वाइ अनि माधव पूजा गर

कुरु छत्रप्रदानं च साम्राज्यं ते भविष्यति । स्नानं कुरु यथान्यायं तथैवार्चय माधवम् ॥६१॥
देहि त्वं प्रतिमां दिव्यां कृत्वा तेन जयो भवेत् । आत्मतुल्यगुणान्पुत्रान् यदि कामयसे नृप ॥६२॥
सर्वभूतहितार्थाय प्रपादानं च त्वं कुरु । वैशाखोक्तानिमान् धर्मान् सम्यगाचर भूपते ॥६३॥
तेन ते सकला लोका वशा यान्ति न संशयः । निष्कामकेन चित्तेन यदि धर्मान् करिष्यसि ॥६४॥
वैशाखे पुण्यमासेऽस्मिन् प्रतये मधुघातिनः । प्रत्यक्षो भविता विष्णुस्तव निर्मलचेतसः ॥६५॥
येन चाचरितः पुंसा धर्मा ह्येते शुभावहाः । तस्य चैवाक्षया लोकाः पुराणे कवयो विदुः ॥६६॥

॥६१॥ दिव्य प्रतिमा तिमी दान देऊ त त्यसले तिम्रो जय हुनेछ; हे नृप ! यदि आफै समानका गुणी पुत्र चाहन्छौ भने ॥६२॥ सारा प्राणीको कल्याणका लागि पौशाला राख्ने काम तिमी गर हे राजन् ! वैशाखमा गर्नुपर्ने यी धर्महरू खूब राम्रोसित गर ॥६३॥ त्यसले गर्दा सारा दुनियाँ वशमा हुन्छन्, यसमा संशय छैन ! यो पुण्यमास वैशाखमा विष्णुको प्रीतिका लागि कुनै फलको इच्छा नराखी यदि धर्म गर्‍यौ भने निर्मल चित्त भएका तिम्रा साम्नु विष्णु भगवान् प्रत्यक्ष हुने छन् ॥ ६४-६५ ॥ जुन व्यक्तिले यी कल्याणकारी धर्महरू गरिन्छन् उसका लागि नै अक्षय लोकहरू सुरक्षित छन् भनी कविहरूले पुराणमा बताएका छन् ॥६६॥ जस्तो देखेको थियो र जस्तो सुनेको थियो यो सब तिमीलाई भनियो । यसरी राजालाई सल्लाह दिएर पुरोहित ब्राह्मण ॥६७॥ याजक र उपयाजक भन्निने दुवै जसरी आएका थिए उसै गरी गए । तब



एतत्सर्वं तव प्रोक्तं यथादृष्टं यथाश्रुतम् । इति राजानमामन्त्र्य ब्राह्मणौ च पुरोधसौ ॥६७॥
याजोपयाजकौ नाम जग्मतुस्तौ तथाऽऽगतौ । ततो राजा महावीर्यः पुरोधोभ्यां च बोधितः ॥६८॥
वैशाखधर्मान् सकलाँश्चकार श्रद्धयाऽन्वितः । मयोपदिष्टं च तथा मधुसूदनमर्चयत् ॥६९॥
ततो लब्धप्रभावः सन् बन्धुभिः सकलैर्वृतः । पाञ्चाल नगरीं प्राप हतशेषबलान्वितः ॥७०॥
ततस्तु शत्रवो भूपा उपश्रुत्य च भूपतेः । प्रवेशं च पुरेऽस्याथ पुनराजग्मुरुद्धताः ॥७१॥
तदा पाञ्चालभूपेन नृपाणामाभवद्रणः । जिग्ये सर्वान् महाबहूनेक एव महारथः ॥७२॥
पलायितेषु भूपेषु नानादेशपतिष्वपि । राज्ञां कोशं गजानश्वान् स्वयं जग्राह वीर्यवान् ॥७३॥

पुरोहितहरूले बोध गराइएका पराक्रमी राजाले ॥६८॥ श्रद्धापूर्वक वैशाखमा सम्पूर्ण धर्महरू गरे । त्यस्तै मैले बताएबमोजिम विष्णु भगवान्को पूजा पनि गरे ॥६९॥ तब आफ्नू प्रभावमा आएका छँदा सारा बन्धुहरूले सहित भएर मारिएर बचेका सेना लिएर आफ्नू पाञ्चाल नगरीमा पुगे ॥७०॥ तब शत्रु राजाहरू भूतपूर्व राजा आएको र उसको नगरमा प्रवेश पनि सुनेर अनि फेरि जागेर आए ॥७१॥ तब पाञ्चाल राजाका साथमा शत्रुराजाहरूको लडाई भयो, योटै नै महारथी पाञ्चालले सारा वीरहरूलाई जिते ॥७२॥ अनेक देशका मालिक राजाहरू भागेपछि ती राजाहरू कोश हात्ती, घोडा आदि पराक्रमी पाञ्चालले आफै हत्याए ॥ ७३ ॥ एक अर्बुद घोडा, तीन करोड हात्ती, एक

अश्वानामर्बुदं चैव गजानां च त्रिकोटयः। रथानामर्बुदं चैव दीर्घग्रीवायुतं तथा ॥ ७४ ॥
रासभानां त्रिलक्षाणि प्रापयामास तां पुरीम्। वैशाखधर्ममाहात्म्यात् क्षणात्सर्वेऽपि भूभृतः ॥७५॥
करदा भग्नसङ्कल्पाः पादाक्रान्ता बभूविरे। सुभिक्षमतुलश्चासीत् पाञ्चालविषयेषु च ॥ ७६ ॥
एकच्छत्रमभूद्राज्यं प्रसादान्मधुघातिनः। पुत्रा पञ्चापि तस्यासञ्छौर्यौदार्यगुणान्विताः ॥ ७७ ॥
धृष्टकीर्तिर्धृष्टकेतुर्धृष्टद्युम्नस्तथापरः। विजयश्चित्रकेतुश्च मयूरध्वजसन्निभाः ॥ ७८ ॥
अनुरक्ताः प्रजाश्चासन् धर्मेण प्रतिपालिताः। वैशाखस्य प्रभावेण प्रत्यक्षं तत्क्षणादभूत् ॥ ७९ ॥
पुनश्चकार तान् धर्मान् पाञ्चालनगरीश्वरः। अकामुकेन चित्तेन प्रीतये मधुघातिनः ॥ ८० ॥

अरब रथ तथा दस हजार ऊँट॥७४॥ तीन लाख गधा उस नगरमा ल्याइए। वैशाखका धर्मका प्रभावले तुरुन्तै नै सारा राजाहरू॥७५॥पयरमनि रहने,मनमानी गर्न नपाउने, तिरो तिर्ने भए। पाञ्चाल राज्यमा खूब सहकाल पनि भयो॥७६॥ विष्णु भगवान्‌को कृपाले राज्य एकच्छत्र ( योटै अण्डामनि रहने ) भयो शूरता र उदारताका गुणले युक्त भएका पाँचोटा छोरा पनि उसका भए ॥ ७७ ॥ धृष्टिकीर्ति, धृष्टिकेतु, धृष्टद्युम्न अनि अर्को विजय र चित्रकेतु यी पाँच छोरा कार्तिकेय जस्ता बलिया थिए ॥ ७८ ॥ धर्मपूर्वक पालिएका सारा प्रजाहरू पनि राजामा अगाध प्रेम गर्नेवाला थिए। वैशाखमा गरेका धर्मका प्रभावले त्यसै क्षणमा सारा प्रत्यक्ष भयो ॥ ७९ ॥ अनि पाञ्चाल नगरका अधि पति विष्णु भगवान्‌को



धर्मेणानेन सन्तुष्टो भगवान् मधुसूदनः। अक्षय्यायां तृतीयायां प्रत्यक्षः समजायत ॥ ८१ ॥
तं दृष्ट्वा विस्मितो भूत्वा परमात्मानमच्युतम्। नारायणं चतुर्बाहुं शंखचक्रगदाधरम् ॥ ८२ ॥
पीताम्बर धरं देवं वनमालाविभूषितम्। सलक्ष्मीकं सानुगं च गरुडोपरि संस्थितम् ॥ ८३ ॥
निरीक्ष्य दुःसहं तेजः सद्यो मीलितलोचनः। उत्पतन् सम्पतन्हर्षान्मत्तोन्मत्त इव भ्रमन् ॥८४॥
पुलकाङ्कितसर्वाङ्गो गलद्बाष्पाकुलेक्षणः। तुष्टाव परया भक्त्या प्राञ्जलिः प्रणतो भुवि ॥ ८५ ॥

इति स्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे पञ्चदशोऽध्यायः ॥१५॥

प्रीतिको लागि जितेन्द्रिय भई ती वैशाख महीनामा गर्न बताइएका धर्महरूलाई फेरि फेरि पनि गरे ॥ ८० ॥ यस धर्मले सन्तुष्ट भएका मधुसूदन भगवान् अक्षय तृतीयाका दिन प्रत्यक्ष होइबक्सियो ॥७१॥ चार बाहु भएका, शंख चक्र गदा लिने, पीताम्बर धारण गर्ने वनमालाले शोभित, लक्ष्मी साथमा लिएका, पार्षदहरू पछि लागिएका, गरुडमाथि विराजमान ईश्वर नारायण परमात्मा ती अच्युतलाई देखेर आश्चर्य-चकित भई ॥८२-८३॥ उनको सहि नसक्नु तेजलाई निहारेर तुरुन्तै आँखा चिम्लेका राजा हर्षले उछलकूद गर्ने मदोन्मत्तले झैं यता र उता गर्दै॥८४॥सारा शरीर जुरुङ्गिएका बर-बर खस्ने आँसुले आँखा आकुलिएका छँदा भूईंमा निहुरी हात जोडेर भक्तिपूर्वक स्तुति गर्न लागे ॥ ८५ ॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यमा नारद र अम्बरीष संवादमा पाञ्चालदेशाधिपति जयप्राप्ति नामको पन्ध्रौं अध्याय सकियो ॥१५॥

# अथ षोडशोऽध्यायः

श्रुतदेव उवाच–तद्दर्शनाह्लादपरिप्लुताशयः सद्यः समुत्थाय ननाम मूर्ध्ना । चिरं निरीक्ष्याकुललो-
चनैरमुं विश्वात्मदेवं जगतामधीशम्॥१॥दधार पादाववनिज्य तज्जलं यत्पादजाऽऽब्रह्म जगत्पुनाति॥
समर्चयामास महाविभूतिभिर्महार्हवस्त्राभरणानुलेपनैः ॥२॥ स्रग्धूपदीपामृतभक्षणादिभिः स्वगात्रवि-
त्तात्मसमर्पणेन । तुष्टाव विष्णुं पुरुषं पुराणं नारायणं निर्गुणमद्वितीयम् ॥ ३ ॥ निरञ्जनं विश्व-
सृजामधीशं परात्परं पद्मभवादिवन्दितम् । यन्मायया तत्त्वविदुत्तमा जना विमोहिता विश्वसृजामधी-
श्वरम् ॥ ४ ॥ मुह्यन्ति मायारचितेषु मूढा गुणेषु चित्रं भगवद्विचेष्टितम् । अनीह

श्रुतदेवले भने–भगवान्का दर्शनको खुशियालीले मनोरथ पूर्ण भएका राजाले तुरुन्तै उठेर,आकुल आँखाले यी जगत्का मालिक,विश्वका आत्मादेवलाई धेरै देरसम्म हेरेर शिरले ढोगे॥१॥भगवान्का पाउ धोएर त्यो जल–जुन चरणोदक ब्रह्माण्ड सहित सारा जगत् पवित्र गर्छ,—आफ्नू शिरमा राखे । अनि ठूलो ऐश्वर्यले, अत्यन्त मूल्यवान् वस्त्र गहना र चन्दनहरूले माला धूप दीप पञ्चामृत नैवेद्यहरूले र आफ्नू शरीर धन अनि आत्मसमर्पणले भगवान्को पूजा गरे अनि निर्गुण अद्वितीय निरञ्जन,विश्वाष्टाका मालिक, श्रेष्ठभन्दा पनि श्रेष्ठ; ब्रह्मा, शंकर आदिले स्तुति गरिने, जसका मायाले तत्व जान्ने उत्तम जन पनि मोहित छन् त्यस्ता पञ्चभूतका अधीश्वर पुराणपुरुष नारायण विष्णुको स्तुति गरे ॥२-४॥ जसले मायाले रचेका



एतद्बहुधैक आत्मना सृजत्यवत्यत्ति न सज्जतेऽप्यथ ॥ ५ ॥ समस्तदेवासुरसौख्यदुःख प्राप्त्यं
भवान् पूर्णमनोरथोऽपि । तत्रापि काले स्वजनाभिगुप्त्यै बिभर्षि सत्त्वं खलनिग्रहाय ॥ ६ ॥
तमोगुणं राक्षसबन्धनाय रजो गुणं निर्गुणविश्वमूर्ते दृष्टयात्वदङ्घ्रिप्रणताघनाशनं तीर्थास्पदं
हृदि धृतं सुविपक्वयोगैः ॥ ७ ॥ उत्सिक्तभक्त्त्यपहताशयजीवभावाः प्रापुर्गतिं तव पदस्मृतिमा-
त्रतोये । भवाख्यकालोरगपाशबद्धः पुनः पुनर्जन्मजरादिदुःखैः ॥ ८ ॥ भ्रमामि योनिष्वहमाखु-
भक्षवत्प्रवृद्धतर्षस्तव पाद विस्मृतोः । नूनं न दत्तं न च ते कथा श्रुता न साधवो जातु मयापि

गुणहरूमा मूर्खहरू मोहित हुन्छन्, जुन भगवानको कृति विलक्षण छ, जो चौटै ईश्वर आफूले नचाहेर पनि अनेक प्रकारले यो सृष्टि सिर्जन्छ, रक्षा गर्छ र नाश गर्छ अनि फेरि मायाले प्रेरित नभै आफै ठीक गर्दैन ॥ ५ ॥ समस्त देव-दानवहरूको सुख-दुःख प्राप्तिका लागि तपाईं मनोरथ पूर्ण गरिदिने हुनुहुन्छ । उसमा पनि मौकामा आफ्ना भक्तजनको रक्षा लागिका सत्त्व गुण धारण गर्नुहुन्छ ॥ ६ ॥ दुष्टहरूलाई तह लाउन तमोगुण र राक्षसहरूलाई ठीक गर्न रजोगुण धारण गरिबक्सिन्छ । हे निर्गुण विश्वमूर्ति ! ढोग्नेको पाप नाश गर्ने, तीर्थहरूको स्थान, योगपूर्ण भएका हृदयमा धारिने तपाईंका चरणकमल भाग्यले मात्र स्पर्श गर्न पाइन्छ ॥ ७ ॥ भक्ति कम हुनाले मरेतुल्य ठान्नेहरू पनि तपाईंका चरणको स्मरण मात्ररूपी जलमा डुबेर मति पाए । संसार नामको कालो सर्परूपी पाशले बाँधिएका,बारम्बारको जन्म बुढ्याइँ आदि दुःखले॥८॥ तपाईंका चरणको बिर्साइले गर्दा उत्कण्ठाले

सेविताः ॥ ९ ॥ तनारिभिर्ध्वस्तपरार्घ्यलक्ष्मीर्वनं प्रविष्टः स्वगुरू अहं स्मरन् । स्मृतौ च तौ मां
समुपेत्य दुःखात्सम्बोधयाञ्चक्रतुरार्तबन्धू ॥१०॥ वैशाखधर्मैः श्रुतिचोदितैः शुभैः स्वर्गापवर्गादि-
 षुमर्थहेतुभिः । तद्बोधितोऽहं कृतवान्समस्ताञ्छुभावहान्माधवमासधर्मान् ॥ ११ ॥ तस्मादभून्मे 
 परमः प्रसादस्तेनाखिलाः सम्पद ऊर्जिता इमाः । नाग्निर्न सूर्यो न च चन्द्रतारका न भूर्जलं 
खं श्वसनोऽथ वाङ्मनः ॥ १२ ॥ उपासितास्तेऽपि हरन्त्यघं चिराद्विपश्चितो घ्नन्ति मुहूर्तसेवया
यन्मन्यसे त्वं भवतोऽपिभूरिशस्त्यक्तैषणाँस्त्वत्पदन्यस्तचित्तात्॥१३॥ नमः स्वतन्त्राय विचित्रकर्मणे
व्याकुल भएको म मृगको खोजमा डुल्ने बिरालो जस्तो भएर अनेक योनिहरूमा घुमिरहन्छु । ठीक हो,न मैले दान गरें
न त हजूरको कथा सुनें, न कहिल्यै मैले साधुहरूको सेवा गरें ॥ ९ ॥ त्यसैले शत्रुहरूद्वारा जितिएर कोश हरिएकोले वन
पस्नुपरेको मैले आफ्ना दुवै गुरुहरूलाई संझें । संझनेबित्तिकै दुःखीहरूका बन्धु ती दुवै म भएठाँ आएर दुःखले मलाई सम्झाए
॥१०॥ स्वर्गमोक्ष पुरुषार्थको कारण भएका, श्रुतिहरूले बताइएका,कल्याणकारी वैशाख धर्महरू उनीद्वारा बोध गराइएको
मैले कल्याण गर्ने समस्त वैशाख मासका धर्महरू गरें ॥ ११ ॥ त्यसैले मेरो यो कल्याण भयो, त्यसैले गर्दा सारा यी
१५ उद्यम सम्पत्ति भए । न अग्निको, न सूर्यको,न चन्द्रमाको, न ताराको, न पृथ्वीको न जलको, न आकाशको,न वायुको
अथवा न प्राणी र मनको॥१२॥ नै मैले उपासना गरें, किनकि तिनीहरू पनि पाप त नाश गर्छन् तर धेरै पछि मात्र नाश
गर्छन्,किन्तु समस्त इच्छा त्यागेका,तपाईंका चरणमा चित्त लगाइरहेका,जसलाई तपाईं आफूभन्दा पनि श्रेष्ठ मान्नु हुन्छ

नमः परस्मै सदनुग्रहाय । त्वन्मायया मोहितोऽहं गुणेषु दारार्थरूपेषु भ्रमाम्यनर्थदृक् ॥ १४ ॥
यत्पादपद्मं सृतिमूलनाशनं समस्तपापाहरं सुनिर्मलम् । सुखेच्छयाऽनर्थनिदानभूतैः सुतात्मदा-
 रैर्ममताभियुक्तः॥१५॥ न क्वापि निद्रां लभते न शर्म प्रवृद्धतर्षः पुनरेव तस्मिन् । लब्ध्वा दुरापं 
 नरदेवजन्म त्वद्यत्नतः सर्वपुमर्थहेतु ॥१६॥पदारविन्दं न भजामि देव सन्मूढचेता विषयेषु लालसः॥ 
करोमि कर्माणि सुनिश्चितः सन् प्रवृद्धतर्षस्तदपेक्षया दहन् ॥१७॥ पुनश्चभूयामहमद्य भूयामित्येव
चिन्ताशतलोलमानस । यदैव जीवस्य भवेत्कृपा विभो दुरन्तशक्तेस्तव विश्वमूर्तेः ॥ १८ ॥
समागमः स्यान्महतां हि पुंसां भवाम्बुधिर्येन हि गोष्पदायते । सत्सङ्गमो देव यदैव भूयात्तदैव देव
त्यस्ता विद्वान्हरूको त एकै छिनको सेवाले पनि सारा पाप नाश हुन्छन् ॥१३॥ हे ईश्वर ! स्वतन्त्र, विचित्र कर्म गर्ने,
साधुहरूलाई कृपा गर्ने परमात्मा तपाईंलाई नमस्कार छ । तपाईंको मायाले मोहित भएका अतएव उल्टा देख्ने नै – स्त्री
धन रूप गुणहरूमा रुमलिएको छु ॥१४॥ जसको चरणकमल जन्म मृत्यु जरा (बुढ्याइँ) आदिको जरैसमेत नाश गर्नेवाला
समस्त पापलाई सखाप पार्नेवाला, अति निर्मल छन् । त्यस्ता चरणकमललाई छाडेर अनर्थ(दुःख)का मुख्य कारण भएका
सन्तान, देह, स्त्रीहरूको ममताले घेरिएको जन॥१५॥ न कहिल्यै रात्रीमसित निदाउन पाउँछ, बारम्बार त्यसैमा नै तृष्णा
बढेको जनले न सुख नै पाउँछ । बडा मुश्किलले पाइने, सारा पुरुषार्थको कारण भएको राजाको जन्म तपाईंको कृपाले
पाएर पनि ॥१६॥ हे भगवन् ! एकदम मूढ चित्त भएको विषयहरूमा लोभी म तपाईंका चरणकमलकन भज्दिनँ । बरु

त्वयि जायते मतिः ॥१९॥ समस्तराज्योपगमं हि मन्ये ह्यनुग्रहं ते मयि जातमञ्जसा । यत्प्रार्थ्यते ब्रह्मसुरासुराद्यैर्निवृत्ततर्षैरपि हंसयूथैः॥२०॥इतःस्मराम्यच्युतमेवसादरं भवापहं पादसरोरुहं विभो।न किञ्चन प्रार्थ्यममन्दभाग्यदं कामयेऽन्यत्तवपादपद्मतः॥अतो न राज्यं न सुतादिकोशंनदासदासीर्नच जीवितं हि मे । भजामि नित्यं तदुपासितव्यं पादारविन्दं मुनिभिर्विचिन्त्यम् ॥२२॥-प्रसीद देवेश जगन्निवास भक्तिर्यथा स्यात्तव पादपद्मे । सक्तिः सदा सञ्छतु दारकोश-पुत्रात्मवित्तेषु





ती अनर्थकारीको अपेक्षाले आकुलिएको म श्रद्धा-भक्तिपूर्वकको भएर कर्महरू गर्छु ॥१७॥ सयकड़ौं चिन्ताले चंचल चित्त भएको म त आज यस्तो हुँ, फेरि यस्तो हुँ नै सोचिरहन्छु। हे प्रभु ! चिताइ नसक्नु शक्ति भएका विश्वमूर्ति तपाईंको प्राणीका उपर जबै कृपा हुन्छ ॥ १८ ॥ तबै उसको महात्मा पुरुषहरूका साथ समागम ( भेट ) हुन्छ, जुन समागमले संसाररूपी समुद्र गाईको पाइला जस्तो सजिलै नाघ्न सकिने गराइन्छ। हे भगवन् ! जुन बेला नै सज्जनसँग संगत हुन्छ, उसै बेला नै हे देव ! तपाईंमा भक्ति गर्ने बुद्धि जनहरूको उब्जन्छ॥१९॥ जुन ऐश्वर्य ब्रह्मा देवता दानवहरूले र समस्त तृष्णा त्यागेका महात्माहरूले प्रार्थना गरिन्छ, त्यस्तो समस्त राज्यको ऐश्वर्य तुरुन्तै पाउनु ममा तपाईंका अनुग्रह (कृपा) भएको हो भन्ने म ठान्छु ॥ २० ॥ यसकारण हे प्रभु ! संसारको दुःख छुटानने एकदम अच्युत तपाईंका चरण-कमलकन भक्तिपूर्वक म स्मरण गर्छु । अभागीलाई भाग्यमानी बनाउने तपाईंका चरणको सेवा-बाहेक केही म माग्दिनं, अरू केही चाहन्नँ ॥२१॥ यसकारण मलाई न राज्य, न सन्तान र सम्पत्ति, न दास-दासी, न त जीवनको नै चाह छ

गुणेषु मे प्रभो ॥२३॥ भूयान्मनः कृष्णपदारविन्दयोर्वचांसि ते दिव्यकथाऽनुवर्णने । नेत्रेममास्तां तवविग्रहेक्षणे श्रोत्रे कथायां रसना त्वदर्पिता ॥२४॥ घ्राणं च ते पादसरोजसौरभे त्वद्भक्तगन्धादि-विलेपने त्वक् । स्यातां च हस्तौ तव मन्दिरे विभो सम्मार्जनादौ मम नित्यदेव ॥ २५ ॥ पादौ हरेः क्षेत्रपथानुसर्पणे मूर्धा च मे स्यात्तव वन्दणेऽनिशम् । कायश्च मे स्यात्तव सत्कथायां बुद्धिश्च मे स्यात्तव वन्दनेऽनिशम् ॥ २६ ॥ दिनानि मे स्युस्तव सत्कथोदयैरुद्गीयमानैर्मुनि-भिर्गृहागतैः । हीनप्रसङ्गैस्तव मे न भूयात क्षणं निमेषादर्धमथापि विष्णो ॥२७॥ न पारमेष्ठ्यं न च





म त केवल मुनिहरूले ध्यान गरिने, ती उपासना गर्न योग्य, तपाईंका चरणारविन्दलाई नै सधैं भजन ( सेव्न ) चाहन्छु ॥ २२ ॥ हे देवेश ! मेरा उपर प्रसन्न रहनुहोस् हे जगन्निवास ! जसरी हुन्छ, तपाईंका चरणकमलमा मेरो भक्ति लागोस् हे प्रभु ! स्त्री, कुटुम्बी, सन्तान, देह, धन यी चीजहरूमा मेरो आसक्ति सधैं हटोस ॥ २३ ॥ मेरो मन तपाईं कृष्णका चरणारविन्दमा लागिरहोस्, मेरो वचन तपाईंको दिव्य कथा वर्णन गरिरहने होस्, मेरा आँखा तपाईंका दर्शनमा लव-लीन रहून्, मेरा कान तपाईंका कथा सुन्नमा एकाग्र रहून् र जिब्रो सधैं तपाईंमै अर्पित रहोस्॥२४॥ मेरो नाक तपाईंको चरणकमलको सुगन्धमा मस्त रहोस्, मेरो छाला तपाईंका भक्तहरूलाई चन्दन आदि विलेपन गर्न ( घस्न ) मा कार्यरत होऊन्, हे विभु ! मेरा दुवै हात सधैं नै तपाईंका मन्दिरमा बढार्नु धनु आदि सरसफाइमा लागिरहून्॥२५॥ मेरा गोडा भगवान्को धामको बाटो हिंड्नमा,मेरो टाउको हमेशा तपाईंका नमस्कारमा, मेरो इच्छा तपाईंको सत्कथा सुन्नमा होस र

सार्वभौमं न चापवर्गं स्पृहयामि विष्णो । त्वत्पादसेवा च सदैव कामये प्रार्थ्याश्रियाब्रह्मभवादिभिःसुरे२८
इति राज्ञा स्तुतो विष्णुः प्रसन्नः कमलेक्षणः । मेघगम्भीरया वाचा तमुवाच क्षितीश्वरम् ॥ २९ ॥
श्रीभगवानुवाच । जाने त्वां दासवर्यं मे निष्कामुकमकल्मषम् । अथापिते प्रदास्यमिवरं देवतदुर्लभम्३०
आयुष्यं चायुतं दिव्यं सम्पदश्च न नश्वरः । भक्तिर्मयि दृढा भूयादन्ते सायुज्यमाप्नुयाः ॥३१॥
त्वया कृतेन स्तोत्रेण मां स्तुवन्ति च ये भुवि । तेषां तुष्टः प्रदास्यामि भुक्ति मुक्ति न संशय ॥३२॥

मेरो बुद्धि सधैं तपाईंको वन्दनामा रहोस् ॥२६॥ मेरो घरमा आएका मुनिहरूले गाइने तपाईंका सत्यकथाका उदयहरूले अर्थात् नयाँ-नयाँ कथाहरूले बितुन् । हे भगवान् विष्णु ! मेरो एक क्षण अथवा आधा निमेष पनि तपाईंका प्रसङ्गले रहित भएर नबितोस् ॥२७॥ हे विष्णु ! म न पारमेष्ठ्य,न सार्वभौम र न मुक्ति नै चाहन्छु । म ता लक्ष्मी, ब्रह्मा,महादेव आदि दौताहरूले प्रार्थना गरिने तपाईंका चरणको सेवा नै हमेशा चाहन्छु ॥२८॥ यस्ता प्रकारले स्तुति गरिएका, कमलका मुकुल जस्ता आँखा हुने प्रसन्न विष्णु भगवानले मेघ गड्काइ जस्ता गम्भीर वाणीले ती राजालाई भन्नुभयो ॥२९॥ श्रीभगवान्ले भन्नुभयो—मैले तिमीलाई मेरा दासहरूमा श्रेष्ठ, जितेन्द्रिय र पापरहित छौ भन्ने ठानें । अब म तिमीलाई दौताहरूले पनि कठिनले पाइने वर दिन्छु ॥ ३० ॥ तिमीलाई दिव्य दश हजार वर्षको आयु होस्, कहिल्यै नाश नहुने सम्पत्तिहोस्, ममा दृढ भक्ति होस्, अन्तमा तिमीले सायुज्य मुक्ति पाए ! ॥३१॥ तिमीले गरेको स्तुतिले पृथ्वीमा जो जन मेरो स्तुति गर्छन्, ती-माथि प्रसन्न भएको म उनलाई भुक्ति र मुक्ति दुवै दिन्छु, यसमा संशय छैन ॥३२॥यो तृतीया



तृतीयैषाऽक्षया नाम भुवि ख्याता भविष्यति । यस्यां तव प्रपन्नोऽहं भुक्ति मुक्तिफलप्रदः
॥३३॥ ये कुर्वन्ति नरा मूढाः स्नानदानादिकाः क्रियाः । व्याजेनाऽपिस्वभावाद्वा यान्ति मत्पदम-
व्ययम् ॥३४॥ ये चाक्षयतृतीयायां पितृनुद्दिश्य मानवाः श्राद्धं कुर्वन्ति तेषां वै तदानन्त्याय
कल्पते ॥३५॥ न चानया तिथिर्लोके समाना वाऽधिका भुवि । अस्यां कृतं स्वल्पमपि तदक्षय्यफलं
भवेत् ॥३६॥ यो गा दद्यान्नृपश्रेष्ठ ब्राह्मणाय कुटुम्बिने । सर्वसम्पत्प्रवर्षाख्या भुक्तिर्मुक्तिः करे
स्थिता ॥३७॥ यो हि दद्यादनड्वाहं सर्वपापविनाशनम् । कालमृत्युविमुक्तः सन् दीर्घायुष्यमवा-

पृथ्वीमा 'अक्षय' नामले प्रसिद्ध हुनेछ, जुन तृतीयामा भुक्ति-मुक्ति फल दिनेवाला म तिम्रा उपर प्रसन्न भएको छु ॥३३॥ अविश्वासी मूर्ख मानिसहरू पनि कुनै बहानाले अथवा स्वभावैले पनि जो यस अक्षय तृतीयामा स्नान दान आदि कार्यहरू गर्छन् ती मेरो अविन शो पद पाउँछन् ॥३४॥ जो मानिसहरू अक्षय तृतीयामा पितृहरूलाई उद्देश्य गरेर श्राद्ध गर्दछन्, ती मानिसको त्यो सत्-काम अनन्त फल दिनेवाला भनिन्छ ॥३५॥ भुवन संसारमा यस तिथिको बराबर अथवा योभन्दा फल दिने अरू तिथि छैन । यस तृतीयामा गरिएको थोरै पनि दान त्यो अक्षय (कहिल्यै नसकिने) फल दिने हुन्छ ॥३६॥ हे श्रेष्ठ राजा ! जो जन यस तृतीयामा परिवार हुने ब्राह्मणलाई गाई दान दिन्छ,सारा सम्पत्ति वर्षने भुक्ति र मुक्ति उसको हातमा रहेको हुन्छ ॥३७॥ जो जन समस्त पाप निखार्नका लागि अक्षय तृतीयामा गोरु दान दिन्छ त्यो समय पुगेपछि हुने मृत्युबाट पनि छुटेर लामो आयु पाउँदछ ॥३८॥ वैशाख महीनामा जुन मनुष्यहरू मलाई प्रिय लाग्ने [illegible]हरू गर्छन्

प्नुयात् ॥३८॥ वैशाखमासे ये धर्मान् कुर्वते मत्प्रियावहान्। तेषां मृत्युधराजन्मभयं पापं हराम्यहम् ॥३९॥ यथा वैशाखधर्मैस्तु तुष्टः स्यां सकलैरपि। मासधर्मैर्न तुष्टः स्यां मासो मे माधवः प्रियः ॥४०॥ सर्वधर्मोज्झिता वापि ब्रह्मचर्यविवर्जिताः। वैशाखमासनिरता यान्ति मत्पदमव्ययम्॥४१॥यद्दुरापं तपोभिश्च सांख्यायोगमखैरपि। तद्धाम परमं यान्ति वैशाखनिरता नराः ॥ अपि पापसहस्रं वा मासोऽयं हरतेऽनघ। प्रायश्चित्तविहीनं वा मत्पादस्मरणं यथा॥४३॥ गुरूपदिष्टःकान्तारे वैशाखे निरतो भवान्। समाराध्य जगन्नाथं तेनाप्तमखिलं नृप ॥४४॥

तिनीहरूको मृत्यु-बुढ्याइँ र जन्मको भय र पाप म नाश गरिदिन्छु ॥३९॥ जस्तो म वैशाख महीनाका धर्मले खुशी हुन्छु त्यस्तो सकल अरू महीनाका धर्महरूले खुशी हुन्न, किनकि वैशाख महीना मेरो प्रिय महीना हो ॥४०॥सबै धर्म त्यागेका अथवा ब्रह्मचर्यले रहित भएका जन पनि वैशाख महीनाको धर्ममा लागेका छन् भने तिनले मेरो अविनाशी पद लागेका मानिसहरूले प्राप्त गर्छन् ॥ ४२ ॥ मेरो चरणको स्मरणले जस्तै प्रायश्चित नगरिएका हजारौं पापहरूलाई पनि हे पुण्यात्मा राजन्। यो महीनाले नाश गरिदिन्छ ॥४३॥ गुरुको उपदेशले जङ्गलमा वैशाख धर्ममा लागेका तपाईंले जगन्नाथलाई आराधना गरेर त्यसै आराधनाले गर्दा हे राजन् ! यो समस्त ऐश्वर्य पायौ ॥ ४४ ॥ यस धर्मले खुशी भएको म तिम्रो साम्नु प्रत्यक्ष भएको छु। धौताहरूले पनि अति कठिनले पाइने भोगहरूलाई मनमानी भोग गर ॥ ४५ ॥ यस्ता प्रकारले ती राजालाई वर दिई धौताका पनि धौता जनार्दन भगवान् साराले हेर्दाहेर्दै उहीं नै




धर्मेणानेन सम्प्रीतः प्रत्यक्षोऽहं भवामि ते। भुङ्क्ष्व भोगान्यथाकर्म देवैरपि सुदुर्लभान् ॥४५॥ इति तस्मै वरं दत्त्वा देवदेवो जनार्दनः। पश्यतामेव सर्वेषां तत्रैवान्तरधीयत ॥४६॥ ततो भूपालवर्योऽसौ बभूवात्यन्तविस्मितः। हृष्टपुष्टपुष्टतनुर्भूप लब्धनष्टधनो यथा ४७॥ ततः शशास पृथिवीं तच्चित्तस्तत्परायणः। महद्भिर्बोधितो नित्यं गुरुभिश्च निरन्तरम् ॥४८॥ नान्यत् प्रियतमं मेने वासुदेवमृते नृप। यत्सम्पर्कात्प्रिया आसन् दारामात्यसुतादयः ॥४९॥ सर्वान् धर्मांश्चकारासौ वैशाखोक्तान् पुनः पुनः। तेन पुण्यप्रभावेण पुत्रपौत्रादिभिर्वृतः ॥५०॥ भुक्त्वा मनोरथान् सर्वान् देवानामपि दुर्लभान्। अन्ते जगाम सायुज्यं विष्णोर्देवस्य चक्रिणः ॥५१॥

अन्तरधान हुनुभयो ॥४६॥ तब हे राजन् ! हृद-पुष्ट शरीरका श्रेष्ठ ती राजा एकाएक नाशिएको धन पाउने जन जस्तो अत्यन्त चकित भए ॥४७॥ तब रोजै ठूला अनुभवीहरूले र निरन्तर गुरुहरूले संझाइएका र भगवान्मै चित्त लाइराख्ने एवं भगवान्लाई सबकुछ ठान्ने ती राजाले पृथ्वीमा शासन गरे ॥४८॥ ती राजाले जुन भगवान्का संपर्कले स्त्री मन्त्री सन्तान हरू प्रिय थिए त्यस्ता वासुदेवलाई छाडेर अरू कुनै कुरो पनि अतिप्रिय मानेनन् ॥४९॥ती राजाले वैशाखका बहाइएका सारा धर्महरू बारम्बार गरे। त्यसै पुण्यका प्रभावले छोरा नातिहरूले युक्त भएर ॥५०॥ देवताहरूले पनि अति मुश्किलले पाइने सारा मनोरथहरू भोगेर अन्तमा सुदर्शन चक्रधारी भगवान् विष्णुको सायुज्य पद पाए ॥५१॥ जो मनुष्यहरू यो

य इद परमाख्यानं शृण्वन्ति श्रावयन्ति च । ते सर्वपापनिर्मुक्ता यान्ति विष्णोः परम्पदम्॥५२॥
इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे पाञ्चालाधिपतेः
सायुज्यमुक्तिप्राप्तिर्नाम षोडशोऽध्यायः ॥१६॥



अति उत्तम कथा सुन्छन् अथवा सुनाउँछन्, सारा पापबाट छुटेका ती मानिसहरू भगवान्को परम पदमा पुग्छन् ॥५२
श्री स्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीष सम्वादमा पांचाल राजाको मुक्ति प्राप्ति नामको एघारौं अध्याय सकियो ॥११॥

---

## अथ सप्तदशोऽध्यायः

मैथिल उवाच—वैशाखधर्मानखिलान्निहामुत्रफलप्रदाम् । भूयोऽपि शृण्वतश्चासीत्तृप्तिर्नाद्यापि मानद ॥१॥ यत्र चाकैतवो धर्मो यत्र विष्णुकथाः शुभाः । तच्छास्त्रं शृण्वतो नैव तृप्तिः कर्णरसायनम् ॥२॥ पूर्वजन्म कृतं पुण्यं दृष्टया पारमुपागतम् । आतिथ्यव्यपदेशेन यद्भवान् गृह-

मैथिल राजाले भने—यस लोकमा र परलोकमा पनि फलदिने सारा वैशाखका धर्म बारम्बार सुन्दा पनि हे माननीय अझै मलाई सन्तोष छैन ।१। जहाँ निष्कपट धर्म छ, जहाँ कल्याणकारी विष्णुका कथा हुन्छन्, कानलाई रसको खानि भएको त्यस्तो शास्त्र सुन्नकपिल्यै तृप्ति हुइन्न ॥२ ॥ अतिथिको बहानाले जो तपाई मेरो घरमा पाल्नु भोत्यो मेरो पूर्वन्ममा

---

मागतः ॥३॥ वचोऽमृतं मुखाम्भोजनिःसृतं परमाद्भुतम् । पीत्वाः तृप्तः पारमेष्ठ्य मोक्षं वा न च कामये ॥ ४ ॥ तस्मात्तानेव धर्मान् मे भुक्तिमुक्तिप्रदायकान् । विष्णुप्रीतिकरान् । दिव्यान् भूयो विस्तरतो वद ॥ ५ ॥ इति पृष्टस्तदा राज्ञा श्रुतदेवो महायशाः । संहृष्टात्मा शुभान् धर्मान्पुनर्व्याहर्तुमारभत् ॥६॥ श्रुतदेव उवाच—शृणु राजन् प्रवक्ष्यामि कथां पापप्रणाशिनीम् । वैशाखधर्मविषयां श्राविता मुनिभिर्मुहुः ॥७॥ पम्पातीरे द्विजः कश्चिच्छङ्खो नाम महायशाः । गुरौ सिंहगते चागान्नदीं गोदावरीं शुभाम् ॥८॥ तीर्त्वा भीमरथीं पुण्यां कान्तारे कण्टकान्विते । निर्जले निर्जने घोरे वैशाखे तापकर्शितः ॥९॥ वृक्षे चोपविवेशासौ मध्यान्हसमये



गरिएको पुण्य भाग्यले उदय भएको हो ॥३॥ तपाईंका मुख-कमलबाट निस्केको अति अद्भुत वचनरूप अमृत पिएर म तृप्त छु । म अब पारमेष्ठ अथवा मोक्ष पनि चाहन्न ॥४॥ त्यसकारण, भुक्ति र मुक्ति दुबै दिने, भगवान् विष्णुलाई खुशी पार्ने दिव्य तिनै धर्महरू मलाई फेरि विस्तारपूर्वक कहिबक्सियोस् ॥५॥ यसरी राजाले अनुनय गरिएकाले खुशील गद्गद् भएका ठूला यशस्वी श्रुतदेवले अनि फेरि कल्याणकारी कथाहरू कहन आरम्भ गरे ॥६॥ श्रुतदेवजीले भन्नुभयो-हे राजन् ! मुनिहरूले बारम्बार सुनाइएको, पाप नाश गर्ने वैशाखमा गरिने धर्म नै विषय भएको कथा कहन्छु, सुन्नुहोस् ॥७॥ शंख नाम गरेका महायशस्वी ब्राह्मण पम्पाका तीरमा रहन्थे । बृहस्पति सिंह राशिमा भएको बेला उनी पुण्यदायी गोदावरी नदीमा जान थाले॥८॥ जाँदा बाटामा पर्ने पवित्र भीमरथी नदी तरेर मान्छेको नामनिशान नभएको, पानी कतै नपाइने,

द्विजः । तद कश्चित्क्रूरवाक्यो व्याधश्चापधरः शठः ॥१०॥ निर्घृणः सर्वभूतेषु कीलान्तक इवापरः
तं कुण्डलधरं विप्रं दीक्षितं भास्करोपमम्॥११॥ दृष्ट्वा बद्ध्वा स जग्राह कुण्डलादिकमुग्रधीः ।
उपानहौ च छत्रं च अक्षमालां कमण्डलुम् ॥१२॥ पश्चाद्विसृज्य तं विप्रं गच्छेत्याह विमूढधीः॥१३
ततः स गच्छन् पथि शर्कराविले सूर्यांशुतप्ते जलवर्जिते वने । सन्तप्तपादस्तृणछादित्ते स्थले
क्वचिच्चचारोपरिसन्निवेशन् ॥१४॥ सवे द्रुतं सम्पतन्क्वापि तिष्ठन् हाहेति वादी च जगाम तूर्णम् ।
दृष्ट्वा मुनिं खिद्यमानं पृथिव्यां मध्यं गते पूष्णि दया बभूव ॥१५॥ व्याधस्य धर्मविमुखस्य च

काँढे-काँढाले भरिएको घोर जंगलमा पुगेर वैशाखमा टन्टलापुर घामको तातोले पोलेर असीन-पसीन भएको ॥९॥ ती ब्राह्मण मध्यान्ह समयमा कुनै रूखमनि बसे । त्यसै वेला क्रूर बोली भएको, महामूर्ख, हातमा धनु लिएको ॥१०॥ समस्त प्राणीमा निर्दयी, मानौं दोस्रा यमराजै जस्तो कुनै व्याधा त्यहाँ आयो र सूर्यसमान चम्कने कुण्डल लाएकादीक्षित ती ब्राह्मणलाई ॥११॥ देखेर दुष्ट बुद्धि भएको उसले उनलाई बाँधेर विचरा उनको कुण्डल आदि पहिरने, जुत्ता, छाता, रूद्राक्षको माला कमण्डलु सबै लियो ॥१२॥ त्यसका बाद त्यस मूर्खले ती ब्राह्मणलाई 'जा मुण्टी' यस्तो भन्यो र छोडिदियो ॥१३॥ त्यस दुष्टबाट छुटेपछि सूर्यका प्रखर किरणले तातेको, बालुवा-बालुवा भएको, जल कतै नरहेकोवनको बाटोमा हिंड्दा तिनका ताते-का गोडा कतै झिकाझाक्री भएको ठाउँका टेकिन्थे कहिलेकाहिं काँढाझुंढी माथि थ्याच्चिन्थे ॥१४॥ विचरा चर्चांडै हिंड्दा कतै पच्छारिन्थे, कतै थेच्चारिन्थे तैपनि 'अय्या-अय्या' भन्दै झटाझट दौडन्थे । सूर्य आकाशको बीचमा पुगेको वेला तातो



पापबुद्धे र्दुष्टस्य क्रूरवचसः परपीडकस्य । तप्तस्य तीव्रकिरणेन हृदि व्यथाऽऽगात् । तस्मै ददामि
सुखदां खलु पादरक्षाम् ॥१६॥ चौर्येणैव स्वधर्मेण मद्गृहीतं वनान्तरे । मदीयमेव तत्सर्वं
व्याधानां धर्मनिर्णयः ॥१७॥ तस्मादुपानहौ दास्ये मुहुर्दुःखापनुत्तये । तेन श्रेयो भवेद्यच्च
तद्भवेन्मम पापिनः ॥१८॥ जीर्णे चोपानहौ दिव्ये वर्तेते पादयोर्मम । ताभ्यामस्ति न मे कृत्यं
तस्मात्ते वै ददाम्यहम् ॥१९॥ इति निश्चित्य मनसि तूर्णं गत्वा ददौ च ते । शर्करोत्तप्तपादाय
द्विजवर्याय सीदते ॥२०॥ उपानहौ गृहीत्वाऽसौ निर्वृतिं च परां ययौ । सुखी भवेति तं व्याध-
माशीर्भिरभिनन्द्य च ॥२१॥ नूनं सुपक्वपुण्योऽयं वैशाखे दत्तवानमू । व्याधस्यापि च दुर्बुद्धेः

भूईमा दुःख पाइरहेका मुनिलाई देखेर व्याधालाई दया भयो ॥१५॥ अधर्मी, दुष्ट, क्रूर, कुरो बोल्ने, अरूलाई सताउने, मध्यान्हका प्रखर किरणले तातेको, पापी त्यसव्याधाको हृदयमा ब्राह्मणको हालत देख्दा दुःख लाग्यो र बिचरा ब्राह्मणलाई आराम दिने जुत्ता पक्कै दिन्छु भन्ने सोच्यो ॥१६॥आफ्नू धर्म चोरीलेजं गरेँ वनमा जोजोजलिएँ, त्यो सबै वस्तु मेरै हुन्छ भन्ने व्याधाहरूको धर्मले निर्णय गरेको छ ॥१७॥ त्यसकारण घरि-घरिको दुःख हटाउनकोलागि दुवै जुत्ता दिन्छु त्यसले जो कल्याण हुन्छ बरु म पापीलाई त्यो होस् ॥१८॥ पुराना भए पनि सद्दे जुत्ता मेरा गोडामा छन् । तिनले मेरो कुनै काम छैन, त्यसकारण तिनैलाई म दिन्छु ॥१९॥ भन्ने यस्तो निश्चय मनमा गरेर झट्टै गएर बालुवाले भतभती खुट्टा तातेका, दुःखी, श्रेष्ठ ती बाहुनलाई जुत्ता दियो ॥२०॥ जुत्ता पाएर उनी ठूलो सन्तोषमा प्राप्त भए र 'सुखी भएस्' भनी

प्रायो विष्णुः प्रसीदति ॥२२॥ सर्वस्याप्त्या च भूयोऽपि यत्सुखं तदभून्मम । ततोऽभिश्रुत्य
तद्वाक्यं किमेतदिति विस्मितः ॥२३॥ व्याजहार पुनर्विप्रं ब्रह्मिष्ठं ब्रह्मवादिनम् । त्वदीयं तु
वैशाख मया दत्तं कथं पुण्यं भवेन्मम ॥२४॥ प्रशंससि च वैशाखं हरिस्तुष्टो भवेदिति । एतदाचक्ष्व मा०
१७९ मे ब्रह्मन् का वैशाखस्तु को हरिः ॥२५॥ को धर्मः किं तस्य शुश्रूषोर्मे दयानिधे । इति अ.१७
व्याधवचः श्रुत्वा शङ्खस्तुष्टमना अभूत् ॥२६॥ प्रशंसन् स च वैशाखं पुनर्विस्मितमानसः ।
इदानीं दत्तवान् पादत्राणे मे लुब्धकः शठ ॥२७॥ सद्या बुद्धेश्च वैषम्यं जात चित्रमहो व्रत ।
सर्वेषामेव धर्माणां फलं जन्मान्तरेषु वै ॥२८॥ वैशाखमासधर्माणां फलं सद्यः क्षणं नृणाम् ।

त्यो व्याधालाई आशीर्वादहरूले अभिनन्दन गरेर सोचे ॥२१॥ वैशाखमा यसले यी जुत्ता दियो,जसले यो पक्कै पनि पुण्य पाकेको अर्थात् पुण्यको फलभागी भयो । किनकि दुर्बुद्धि पनि व्याधाका उपर प्रायःभगवान् विष्णु खुशी हुनुहुन्छ ॥२२॥ नाश भएका सबै चीज फेरि पाउँदा जो सुख हुन्छ त्यही सुख अहिले मलाई भयो । तब बाजेको त्यो कुरो सुनेर 'यो के भने-को होला' भन्ने सोची चकित भएको उसले ॥२३॥ ब्रह्मिष्ठ, ब्रह्मवादी बाहुनलाई फेरि भन्यो—तिम्रै चीज त मैले दिएँ,
१६ अनि कसरी मलाई पुण्य हुन्छ ? ॥२४॥ तपाईं वैशाखको प्रशंसा गर्नुहुन्छ, हरि खुशी हुन्छन् भन्नुहुन्छ, हे बाजे ! वैशाख को हो र हरि को हो !' यो कुरो मलाई बताउनुहोस् हे दयानिधि ! धर्म को हो ? त्यसको फल के हो ? सेवक मलाई त्यो पनि आज्ञा होस् ।यस्तो व्याधाको वचन सुनेर शंख अत्यन्त खुशी भए ॥२५-२६ ॥ आश्चर्यले चकितभएका उनले फेरि

पापाचारस्य दुर्बुद्धेर्व्याधिस्यापि दुरात्मनः ॥ २९ ॥ दैवादुपानहोर्दानात् सत्त्वशुद्धिरभूदहो । यद्य-
विष्णोः प्रियं कर्म यत्तत् सन्तोषकारणम् ॥३०॥ तदेव धर्ममित्याहुर्मन्वाद्या धर्मवित्तमाः । धर्मा
वैशाख माधवमासीयाः प्रिया विष्णोरतीव ते ॥ ३१ ॥ धर्मैर्माधवमासीयैर्यथा तुष्यति केशवः । न तथा मा०
१८० सर्वदानैश्च तपोभिश्च महामखैः ॥ ३२ ॥ नानेन सदृशो धर्मः सर्वधर्मेषु विद्यते । मा गयां यातु अ.१७
मा गङ्गां मा प्रयागं तु पुष्करम् ॥ ३३ ॥ मा केदारं कुरुक्षेत्रं मा प्रभासं स्यमन्तकम् । मा गोदां
मा च कृष्णां च मा सेतुं मा मरुद्वृधाम् ॥ ३४ ॥ वैशाखधर्ममाहात्म्यं शंसिनी च कथापगा ।

वैशाखको प्रशंसा गर्दै सोचे—अहिले मलाई यो लोभी शठले जुत्ता दियो ॥२७॥ बडो आश्चर्यको कुरो छ, कति चाँडै यसरी बुद्धि पुलुक्कै पल्टयो ! धर्महरूको फल अरू-अरू जन्ममा मिल्छ॥२८॥तर वैशाख महीनाका धर्महरूको फल मनुष्यहरू-लाई तुरुन्तै उसै बेला मिल्छ । दुष्ट पापी मूर्ख व्याधाको पनि॥२९॥आश्चर्य छ कि संयोगले जुत्ताको दान गर्दा नै यसको सत्त्वशुद्धि(उज्यालो मन)भैहाल्यो । जो-जो विष्णुको प्रिय काम छ त्यो भगवान्लाई खुशी तुल्याउने हुन्छ॥३०॥त्यसैलाई नै धर्म जान्नेहरूमा श्रेष्ठ मनु आदि ऋषिहरूले धर्म भनेका छन् । वैशाख महीनामा गरिएका ती धर्महरू विष्णुका प्रिय हुन्छन्॥३१॥वैशाखमा गरिएका धर्महरूले भगवान् विष्णु जस्तो खुशी हुनुहुन्छ, त्यस्तो खुशी अरू सारा दानले, तपस्या-हरूले र ठुला-ठुला यज्ञहरूले पनि हुनुहुन्न॥३२॥सारा धर्महरूमा यो जस्तो अरू कुनै धर्म छैन । गयामा जानुपर्दैन,गंगामा जानुपर्दैन, प्रयागमा-तथा पुष्करमा जानुपर्दैन॥३३॥केदार,कुरुक्षेत्र जानुपर्दैन प्रभास अनि स्यमन्तक जानुपर्दैन, गोदामा

तत्र स्नातस्य वै विष्णुः सद्यो ह्यवरुद्धयते ॥ ३५ ॥ मासे माधवसंज्ञेऽस्मिन्यत्स्वल्पेनैव साध्यते ।
एतद्‌बहुव्ययैर्दानैर्न धर्मैर्नापि वै मखैः ॥ ३६ ॥ मासोऽयं माधवो नाम व्याध पुण्यविवर्धनः ।
तस्मिन्मह्यं त्वया दत्ते पादुके तापनाशने ॥ ३७ ॥ तेन ते पूर्वकालीनं पुण्यं पाकमुपागतम् ।
तुष्टस्तु भगवान् प्रायः तव श्रेयो भविष्यति ॥३८॥ अन्यथा ते कथं भूयाद् बुद्धिरेषादृशी शुभा ।
मुनावेवं ब्रुवाणे च मृत्युना प्रेरितो बली ॥३९॥ सिंहो व्याघ्रवधार्थाय प्राद्रवत्क्रोधविह्वलः । मध्ये
दृष्ट्वा च मातङ्गं दैवाद्दैवेन कल्पितम् ॥ ४० ॥ तं हन्तुमुद्यतोऽगच्छत् पादाक्रान्तव्यवस्थितम् ।

जानुपर्दैन, कृष्णामा जानुपर्दैन, सेतुबन्ध रामेश्वरमा जानुपर्दैनर मल्लद्धया पनि जानुपर्दैन॥३४॥केवल वैशाखका धर्मको महात्म्य प्रशंसा गर्ने कथारूपी नदी जहाँ छ त्यस नदीमा स्नान गर्नाले अर्थात् वैशाख धर्मको माहात्म्य सुन्नाले नै विष्णु भगवान् तुरुन्तै मास्तु (प्रकाशिनु) हुन्छ ॥ ३५ ॥ यस वैशाख नामको महीनामा जो थोरैले नै सिद्ध हुन्छ, यस्तो त धेरै धन खर्च गरेका दानले पनि हुँदैन, धर्मले पनि र यज्ञहरूले पनि हुँदैन॥३६॥यति सोचिसकेपछि बाजे बाले–हे व्याधा! पुण्य बढाउने यो वैशाख नामको महीना हो। त्यसै महीना तैले मलाई तातो नाश्ने जुत्ता दिइस्॥३७।यसैले पूर्वजन्महरूमा गरिएको तेरा पुण्य सुफल हुन आँट्यो। भगवान् खुशी हुनुभो भने तेरो क्यै कल्याण हुनेछ॥३८॥ यदि भगवान् खुशी नभएको भए यस्तो असल बुद्धि तेरो कसरी हुन्थ्यो। मुनिले यो कुरा भनिरहेकै बेलामा काल (मृत्यु)लेपठाइएकको बे.. ..॥३९॥ यौटा सिंह बाघलाई मानका लागि क्रोधले विह्वल भएर दौडेको थियो। यत्तिकैमा संयोगले हुप्तुक आइपुगेको हात्ती- लाई बीचैमा देखेर॥४०॥पोडा फैलाएर रहेको त्यस हात्तीलाई मार्न सिंह जंगिदै गएको थियो तब त्यस जंगलमा ती दुई



तयोर्युद्धमभूद्‌घोरं सिंहमातङ्गयोर्वने॥४१॥ श्रान्तौ युद्धाच्च विरतौ निरीक्षन्तौ च तस्थतुः । व्याघ-
मुद्दिश्य यच्चोक्तं मुनिना च महात्मना ॥ ४२ ॥ समस्तपातकध्वंसि दैवाच्छुश्रुवतुश्च तौ । तेनैव
मासमानात्म्यश्रवणेनामलौ शुभौ ॥ ४३ ॥ शापान्मुक्तौ च तौ देहात् सद्यो मुक्त्वा दिवङ्गतौ ।
दिव्यरूपधरौ दिव्यौ दिव्यगन्धानुलेपनौ ॥४४॥ दिव्यं विमानमारूढौ दिव्यनारीनिषेवितौ । स-
द्योऽवनतमूर्द्धानौ प्राञ्जली चोपतस्थतुः ॥४५॥ मुनिन्द्रो धर्मवक्ता च व्याधमुद्दिश्य वै पथि । तौ
दृष्ट्वा विस्मितः प्राह कौ युवामिति निश्चलः ॥४६॥ दुर्योनौ तु कुतो जन्म युवयोर्वा कथं मृतिः ।

सिंह र हात्तीको अघोरको लडाइँ भएको थियो॥४१॥युद्धले थाकेका ती दुवै परस्परमा हेराहेर गर्दै बिसाउनका लागि चुप-चाप बसेका थिए। महात्मा मुनिले व्याधालाई उद्‌देश्य गरेर जो कुरो भनेका थिए ॥ ४२ ॥ सम्पूर्ण पाप सखाप पार्ने त्यो कुरो दैवसंयोगले ती दुवैले सुनिरहेका थिए। त्यही वैशाख महीनाको माहात्म्य सुनेकाले ती पापरहित र असल भए॥४३॥ त्यसैका प्रभावले सरापबाट ती दुवै छुटे अनि तुरुन्तै पाप शरीरबाट छुटेर, दिव्य रूप धारण गरेर, खुब राम्रा भएर, बढिया चन्दनहरू लगाएर स्वर्ग गए ॥४४॥ जाने बेलामा विमानमा बसेका, दिव्य नारीहरूले सेवा गरिएका ती दुवै शिर झुकाएर हात जोडेर मुनिका सामु उभिएका थिए॥४५॥व्याधाका लागि बाटामा धर्मको उपदेश गर्ने मुनिश्रेष्ठ पनि ती दुइलाई देखेर आश्चर्यचकित भै स्थिर रहेर 'तिमी दुइ को हौ ?' यस्तो भने ॥४६॥ तिमी दुवैको नीच योनिमा

अहेतोर्विपिने चास्मिन् परस्परवधोद्यतौ ॥ ४७ ॥ एतत्सर्वं सुविस्तार्य सम्यग्ब्रूतं च मेऽनघौ ।
इत्युक्तौ मुनिना तेन वचः प्रत्यूचतुः पुनः ॥४८॥ मतङ्गस्य मुनेः पुत्रौ दन्तिलः कोहलोऽपरः ।
वैशाख शापदोषेण तौ जातौ नाम्ना दन्तिलकोहलौ॥४९॥रूपयौवनसम्पन्नौ सर्वविद्याविशारदौ । आवा- वैशाख
१८३ मुद्दिश्यप्रोवाच पिता धर्मार्थकोविदः ॥ ५० ॥ मतङ्गो नाम ब्रह्मर्षिः सर्वधर्मविदुत्तमः । वैशाखे १५६
मासि तनयौ ! मधुसूदवल्लभे ॥ ५१ ॥ मार्गे प्रपां च कुरुतं जनान्वीजयतं क्षणम् । मार्गे छायां
विधत्तां च भूर्यन्नं दत्तमम्बु च ॥ ५२ ॥ कुरुतं स्नानमुषसितथैवार्चयतं विभुम् । कथां च शृणुतं

कसरी जन्म हो, अथवा यस जंगलमा बिनै कारण परस्परमा मार्न तयार भएका दुइओ कसरी मरण भयो ? ॥ ४७ ॥ हे निष्पापहो ! यो सबै कुरो राम्रोसँग विस्तारपूर्वक मलाई भन । ती मुनिले यस्तो भनिएका ती दुइले फेरि कुरो भने॥४८ मतङ्ग मुनिका दन्तिल र अर्को कोहल नामका दुइ छोरा थिए। ती दुबै सरापले गर्दा दन्तिल र कोहल नामका भएका हुन् ॥४९॥रूप र यैवनले सम्पन्न,सारा विद्यामा विशारद हामी दुईलाई उद्देश्य गरेर धर्म-अर्थका विद्वान्,सारा धर्म जान्ने,श्रेष्ठ ब्रह्मर्षि मतङ्गनामका पिताजीले भन्नुभयो–हे छोराहो ! भगवान्‌को प्रिय वैशाख महीना ॥५०-५१॥ बाटाहरूमा पौशाला बनाओ,बटोहीहरूलाई एकछिन भने पनि पंखा हंक,बाटामा छायाका लागि ओत लाग्ने ठाउँ बनाओ ! धेरै-धेरै अन्न जल दान गर ॥५२॥ बिहानै मिर्मिरे उज्यालैमा न्वाहो ! सबेरै भगवान्‌को पूजा गर र भगवान्‌को कथा पनि रोजै सुन्ने गर जुन धर्मले सांसारिक बन्धन छुट्तछ॥५३॥यस प्रकार अनेक किसिमका कुराहरूले बुझाइएका पनि दुर्मति हामीमा दन्तिल

नित्यं येन बन्धो निवर्तते॥५३॥ एवं च बहुभिर्वाक्यैर्बोधितावपि दुर्मती । क्रुद्धोऽभवं दन्तिलोऽहं
मत्तोऽहं काहलाह्वयः॥५४॥क्रुद्धःशशापाऽऽवां सद्य पिता धर्मेषु लालसः । पुत्रं च धर्मविमुखं भार्यां
वैशाख च प्रियवादिनीम् ॥ ५५ ॥ अब्रह्मण्यं च राजानं त्यजेत्सद्योऽन्यथा भवेत् । दाक्षिण्यादर्थलोभाद्वा मा०
१८४ संसर्गं ये प्रकुर्वते ॥५६॥ ते सर्वे नरकं यान्ति यावदिन्द्राश्चतुर्दश । इति ज्ञात्वा शशापावऽऽमद- अ११
क्रोधपरिप्लुतौ ॥५७॥ क्रुद्धस्त्वं दन्तिलो भूयाः सिंहः क्रोधपरिप्लुतः । मत्तस्तु कोहलो भूयाः
मत्तमातङ्गयूथपः ॥५८॥ कृतानुतापो अश्वात्तो प्रार्थयावो विमोचनम् । आवाभ्यां प्रार्थितो भूयो
विशापं च ददौ पिता ॥५९॥ युवां प्राप्य च दुर्योनि कियत्कालान्तरेऽपि च । सङ्गमा भविता तत्र

नामको मचाहि झोंकिएँ, कोहले कहिले मचाहिं'अरे,बूढो वाहियात कुरो फलाक्छन्'भन्दै उन्मत्त भएँ।५४। धर्ममा लालसा (इच्छा) राख्ने बाबुले तुरुन्तै झोंकिएर हामी दुइलाई सरापे, किनकि धर्म नमान्ने छोरालाई, अप्रिय बोल्ने स्वास्नी॥५५॥ ब्राह्मणको द्रोह गर्ने राजालाई तुरुन्तै त्यागिदिनुपर्छ,नत्र अनर्थ हुन्छ। दयाले वा धनको लाभले जो यस्ताको संसर्ग गर्दछन् ॥५६॥चौध इन्द्रले स्वर्ग भोग सरेसम्म ती सब नरक जान्छन् । यस्तो विचारेर मद र क्रोधले उन्मत्त भएका हामी दुइलाई पिताजीले सराप्नुभो ॥५७॥ —क्रोधी तँचाहिं क्रोधले चूर भएको 'दन्तिल' नामको सिंह भएस्, तँ पागलचाहिं 'कोहल' नामले मत्त हात्तीका झुण्डको मालिक भयेस् ॥५८॥ पछिबाट पश्चात्ताप गर्ने भएका हामी दुइले श्रापबाट छुट्नका लागि प्रार्थना गर्‍यौं । हामीले प्रार्थना गरिएका पिताजीले फेरि श्रापरहित हुने वर पनि दिनुभयो ॥५९॥ तिमी दुबैले नीच

परस्परवधैषिणोः ॥६०॥ तस्मिन्नेव हि समये संवादो व्याधशङ्खयोः । वैशाखधर्मविषये दैवाद्वा
श्रवणस्य च॥६१॥ गमिष्यति क्षणान्मार्गं तस्मान्मुक्तिर्भविष्यति । शापान्मुक्तो पूर्वमेव रूपमा-
स्थाय पुत्रकौ ॥६२॥ मामेव प्राप्य वसतं नान्यथा मे वचो भवेत् । इति शप्तौ च गुरुणा दुर्योनिं
प्राप्य दुर्मनो ॥६३॥ प्राप्य दैवात्सङ्गतिं च परस्परवधैषिणौ । संवादं युव योर्दिव्यं शुभं तं शुश्रुवा-
वदे ॥६४॥ तेन सद्यो विमुक्तिश्च क्षणादेवस्तयोरभूत् । इति सर्वं समाख्याय प्रणम्य च मुनी-
श्वरम् ॥ ६५ ॥ समामन्त्र्याभ्यनुज्ञातौ जग्मतुः पितुरन्तिकम् । तदेव [illegible] मुनिर्व्याधं

योनिमा जन्म पाएर क्यै कालपछि परस्परमा मार्न चाहने तिमी दुवैको भेट हुनेछ, त्यहाँ॥६०॥त्यसै नै वेलामा वैशाख-
धर्मको बारेमा व्याधा र शंख बाहुनमा भएको संवाद दैवसंयोगले तिमी दुवैको कानको प्वालमा पर्नेछ अर्थात् तिमी दुइले
पनि सुन्नेछौ र त्यसै क्षणदेखि तिमीहरूको मुक्ति हुनेछ,हे छोराहो ! श्रापबाट छुटेपछि पहिलेकै जस्तो रूप पाएर ॥६१-
॥६२॥ मै भाठाँ आएर बस्नेछौ, मेरो वचन बेकारको हुँदैन । यस्तरी गुरुद्वारा सरापिएका हामी दुइ मूर्खले नीच योनिमा
जन्म पाएर ॥ ६३ ॥ परस्परमा मार्न चाहने हामी दुइको भेट पनि भयो र तपाईं दुइको दिव्य कल्याण गर्ने यो
संवाद पनि सुन्यौं ॥६४॥ त्यसै संवादका प्रभावले तुरुन्त यसै क्षण हामी दुइको श्रापमोचन भयो । यो सारा कुरा
सुनाएर, मुनीश्वरलाई प्रणाम गरेर ॥६५॥ 'जाँ है त' भनेपछि 'ल्यौ जाओ' भनिएका ती दुइ स्वर्गमा बाबु भाठाँ गए ।
त्यहीं दृश्य राम्रोसँग देखाएर दयाका खानि मुनिलें व्याधालाई भने-।६६। वैशाख माहात्म्य सुन्नाको ठूलो फल प्रत्यक्ष



दयानिधि ॥६६॥ पश्य वैशाखमाहात्म्यश्रवणस्य फलं महत् । मुहूर्तश्रवणादेव तयोर्मुक्तिः करे
स्थित ॥६७॥ इति ब्रुवाणं मुनिपुङ्गवं तं दयानिधिं निःस्पृहमभ्यबुद्धिम् । विशुद्धसत्त्वं सुकृतैकपात्रं
स न्यस्तशस्त्र पुनराह व्याधः ॥ ६८ ॥
इतिस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे दन्तिलकोहलयोर्मुक्तिर्नाम सप्तदशोऽध्यायः॥१७॥

हेर एकैछिन सुन्नाले मात्रै पनि ती दुइको मुक्ति उनका हातमा राखेका भयो अर्थात् सजिलै ती मुक्त भए ॥६७॥ यस्तो
भन्ने भएका,—दयाका खानि, निःस्पृह, अत्यन्त बुद्धिमान्, विशुद्ध आत्मा भएका, पुण्यका प्रमुख पात्र ती श्रेष्ठ
शस्त्र त्यागेका त्यस व्याधाले फेरि भन्यो ॥६८॥

## अथ अष्टादशोऽध्यायः

व्याध उवाच—भवताऽनुगृहीतोऽस्मि मुने पापोऽतिदुष्टधीः । दयालवो महान्तो हि स्वभा-
वादेव साधवः ॥१॥ क्व वा व्याधाकुलीनोऽहं क्व च वा मतिरीदृशी । केवलं भवतामेव मन्येऽनु-

व्याधाले भन्यो—हे मुनि ! अत्यन्त दुष्ट बुद्धि भएको पापी मलाई तपाईंले कृतार्थ गर्नुभयो । स्वभावैले साधु
महात्माहरू दयालु हुन्छन् ॥१॥ कहाँ म अकुलीन व्याधा, कहाँ यस्तो बुद्धि, यो केवल हजुरको नै अति उत्तम कृपा हो
भन्ने ठान्छु॥२॥ अब म हजुरको सीधासादा शिष्य हुँ, हे, हे माननीय ! म कृपाको पात्र हुँ, म अनाथ गरिब पीरमा छु,

ग्रहमुत्तमम् ॥२॥ अथ साधु च शिष्योऽस्मि कृपापात्रोऽस्मि मानन्द । अनुग्राह्योऽस्मि पुत्रोऽस्मि कृपां कुरु दयानिधे ॥३॥ यथा मे न पुनर्भूयादसन्मतिरनर्थदा । सद्भिश्च सङ्गतिः क्वापि न भूयो दुःखमश्नुते ॥ ४ ॥ तस्माद्बोधय मां विप्र सूक्तैर्वृजिनापहैः । येन चाद्धा तरिष्यन्ति संसाराब्धि मुमुक्षवः ॥५॥ साधूनां समचित्तानां तथा भूतदयावताम् । न हीनो नोत्तमः क्वापि नात्मीयो न परस्तथा ॥ ६ ॥ एवमेव विचिन्वन्ति चित्तशुद्धिं च पृच्छति । सर्वदोषयुतो वापि सर्वधर्मोज्झितोऽपि वा॥७॥ कृतानुतापश्च यदा यदा पृच्छति वै गुरुम् । तदैवोपदिशन्त्यद्धा ज्ञानं संसारमोचकम् ॥ ८ ॥ यथा गङ्गा मनुष्याणां पापनाशस्वभाविनी । तथा मन्दसमुद्धारस्वभावाः

हजुरको छोरो हुँ, हे दयानिधि मलाई दया गर्नुहोस् ॥३॥ जसरी हुन्छ फेरि अनर्थकारी खराब मेरो नहोस्, सज्जनहरूले मलाई बोध गराउनोस्, जुन युक्तिहरूले मोक्ष चाहनेहरू संसाररूपी समुद्रलाई तुरुन्तै तर्दछ॥४-५॥ प्राणीहरूमा दया गर्ने तथा सबलाई समान मान्ने साधुहरूका लागि न कोहि नीच छ, न कोही उत्तम छ, न कोही आफ्नू छ, न कोही पराया छ ॥६॥ दोषैदोष भएको अथवा सारा धर्म त्यागेकोले पनि चित्तशुद्धि हुने उपाय सोद्धछ भने गुरुहरू एक-एक गरी बताउँछन् ॥७॥ जब पश्चात्ताप गरेर असै गुरुलाई सोद्धछ, तब नै संसारको बन्धन छुटाउने ज्ञान झट्टै नै गुरुहरू उपदेश गर्नुहुन्छ ॥८॥ जसरी गंगाजी मनुष्यहरूको पाप स्वभावैले नाश गर्नु हुन्छ त्यस्तै नै साधुहरू मूर्खलाई उद्धार गर्ने



साधवः खलु ॥ ९ ॥ मां विचारय मां बोद्धुं दयालो दीनवत्सल । शुश्रूषुत्वात्प्रसन्नत्वाच्छुद्धत्वात्तव सङ्गतेः ॥ १० ॥ इति व्याधवचःश्रुत्वा पुनर्विस्मितमानसः । साधु साध्विति सम्भाष्य धर्मान्तेनानुवाच ह॥११॥ शंख उवाच—विष्णुप्रीतिकरान् दिव्यान् संसाराब्धिविमोचकान् । कुरु धर्मांश्च वैशाखे यदि व्याध शमिच्छसि ॥ १२ ॥ आतपो बाधते घोरो नच्छाया नाम्बु चात्र च तस्मात्स्थलान्तरं यावो यत्रच्छाया तु वर्तते ॥ १३ ॥ तत्र गत्वा जलं पीत्वा सुच्छायं च समाश्रितः । तत्र ते वर्णयिष्यामि माहात्म्यं पापनाशनम् ॥ १४ ॥ विष्णोर्माधवमासस्य यथादृष्टंयथाश्रुतम् । तत्युक्तो मुनिना तेन व्याधः प्राह कृताञ्जलिः ॥ १५ ॥ इतो निदूरं सलिलं वर्तते च सरोवरे ।

स्वभाव भएका हुन्छन् ॥९॥ हे दीनवत्सल ! तपाईका संगतिले शुद्ध भएको, खुशी भएको र सेवक बनेको मलाई हे दयालु ! संझाउनोस्, ममाथि ख्याल राख्नुहोस् ॥ १० ॥ व्याधको यस्तो वचन सुनेर फेरि आश्चर्यचकित भएका ब्राह्मणले 'ठीक छ, ठीक छ' यस्तो भनेर ई धर्म बताए ॥११॥ शंखले भने—हे व्याधा ! यदि कल्याण चाहन्छस भने विष्णुलाई खुशी गराउने, संसार सागरबाट मुक्त पार्ने, अति बेस, अति बेस वैशाखमा गर्ने बताइएका धर्महरू गर् ॥१२॥ यहाँ न पानी छ;न छाया छ,घामले पनि धेरै पिरिरहेको छ, त्यसकारण जहाँ छाया छ त्यहीं अर्को ठाउँमा जाऔं॥१३॥ त्यहाँ गएर, पानी पिएर, घना छायामा बसेर त्यहीं तिमीलाई विष्णुको प्रिय वैशाख महीनाको, मैले देखे सुनेको पाप

कपित्थास्तत्र वै सन्ति फलभारेण पीडिताः ॥ १६ ॥ गच्छावस्तत्र सन्तुष्टिर्भविता नात्र संशयः । व्याधेनैवं समादिष्टस्तेन साकं ययौ मुनिः ॥ १७ ॥ किंयद्दूरं ततो गत्वा ददर्शाग्रे सरोवरम् । वककारण्डवाकीर्णं चक्रवाकोपशोभितम् ॥ १८ ॥ हंससारसक्रौञ्चाद्यैः समन्तात्परिशोभितम् । क्रीडीत्कोकिलघोषैश्च कूजितैः भ्रमरैरपि ॥ १९ ॥ नक्रकच्छपमीनाद्यैरगाह्यं सुमनोहरम् । कुमुदोत्पलकह्लारपुण्डरीकाविलं महत् ॥२०॥ शतपत्रैः कोकनदैः समन्तात्परिशोभितम् । पक्षिणां च कलारावैर्मुखरं नयनोत्सवम् ॥२१॥ तटे कीचकगुल्मैश्च तथा वृक्षैश्च शोभितम् । वटैः करञ्जनीं-

नाश गर्ने माहात्म्यवर्णन गरेर सुनाउनेछु । ती मुनिले यति भनिएको उस व्याधाले हात जोडेर भन्यो॥१४१५॥ यहाँबाट नजीकै पर तलाउमा पानी छ । त्यहाँ लटरम्म फलेका कैंथका रूखहरू छन् ॥ १६ ॥ त्यहीं जौं, आराम हुनेछ, यसमा कुनै संशय छैन । व्याधाले यसरी संझाइएका मुनि व्याधाका साथ उहीं गए॥१७॥ त्यहाँबाट क्यै टाढा गएपछि अगाडि तलाउ देखे । त्यो तलाउ बकुल्ला र पानीहाँसहरूले भरिएको, चकेवाहरूले तीर शोभिएको ॥१८॥ सारस र क्रौञ्च आदि पक्षीहरूले चारैतिरबाट सजिएको, खेल्ने कोयलीका कुलाईले र भ्रमराहरू पनि गुञ्जाएको ॥१९॥ गोही कछुवा माछाहरूले सलबलाइएको, अति राम्रो, कुमुद, उत्पल, कल्हार, पुण्डरीकहरूले एकदम भरिएको ॥२०॥ शतपत्र र कोकनद नामको फूलहरू चारैतिर ढकमकिएको, चराचुरुंगीका चाँचाँ चिंचीले चिर्बिरिएको, हेर्दाआनन्द आउने ॥२१॥ किनारामा हिलोमा उम्रने पोथाहरूले त्यस्तै रूखहरूले पनि राम्रिएको, वर, करञ्ज, कदम, तित्राहरूले र ॥२२॥ [illegible]



पैश्च तिंतिणीभिस्तथैव च ॥२२॥ निम्बैः प्लक्षैः प्रियालैश्च पनसैश्चम्पकैरपि । पुन्नागैस्तूवरैश्चैव कपित्थामलकैरपि ॥२३॥ निष्पेषणैश्च जम्बूनिः समन्तात्परिशोभितम् । वन्यमातङ्गसारङ्गवराहमहिषादिभिः ॥ २४ ॥ शशैश्च भल्लकैश्चैव गवयैरुरुशोभितम् । खड्गनाभिमृगाद्यैश्च व्याघ्रः सिंहैर्वृकैस्तथा ॥२५॥ खरान्तकैश्च शरभैश्चमरीभिः सुमण्डितम् । शाखात् शाखान्तरं शीघ्रं प्लवमानैर्प्लवङ्गमे ॥२६॥ मार्जारैश्चैव भल्लूकैर्भीषणं रुरुभिस्तथा । मिल्लीशब्दैश्च झङ्कारैः कीचकानां रवैस्तथा ॥२७॥ घोरवायुविनिर्घातदारूघर्षारवैर्वृतम् । एतादृशं सरो दिव्य व्याधेनैव प्रदर्शितम् ॥२८॥ ददर्श मुनिशार्दूलस्तृषया बाधितो भृशम् । स्नात्वा मध्यान्हवेलायां सरस्य-

प्रियाल, कटहर, चाँप, पुन्नाग, तूवर, कैंथ, अमला॥२३॥निष्पेषण जामुनहरूले सबैतिरबाट झपाम्मिएको,जंगलीहाची,हरिन, बँदेल, अर्नाहरूले ॥२४॥ खराया, भालुहरूले अनि नीलगाईहरूले पनिरहिएको,गैंडा जराया आदिपशु र बाघ, सिंह, ब्वाँसाहरूले र ॥२५॥ गधा, शरभ, चौंरीहरूले चरिरहेको यो हाँगाबाटअर्कोहांगामा अर्कोबाट अर्कोमाफट्फटी उफ्रने बाँदरहरूले, ॥२६॥ वनबिरालाहरूले, भालुहरूले, रुरुहरूले डरलाग्दो, झ्याउँकीरीका झ्याउँ-झ्याउँ शब्दहरूले त्यस्तै भ्यागुता, कीरा, फट्यांग्राका ट्याउँ ट्याउँले ॥२७॥ आंधी आउंदा वेगले परस्परमा रगडिएका काठका घरघरले युक्त भएको व्याधाले नै देखाइएको त्यस्तो राम्रो तलाउ ॥२८॥ अत्यन्त तिर्खाएका मुनिश्रेष्ठले देखे । यस मनोरम तलाउमा मध्याह्नको वेलामा

स्मिन्मनोरमे ॥२९॥ वाससी परिधायाथ कृत्वा माध्याह्निकीः क्रियाः । देवपूजां ततः कृत्वा भुक्त्वा फलमतन्द्रितः ॥३०॥ व्याधोपनीतं सुस्वादु कपित्थं श्रमहारि च । सुखोपविष्टः पप्रच्छ व्याधं धर्मरतं पुनः ॥३१॥ किं वक्तव्यं मया पृच्छ तवादौ धर्मतत्पर । धर्माश्च बहवः सन्त नाना मार्गाः पृथग्विधाः ॥३२॥ तव वैशाखमप्रोक्ताः सूक्ष्माअपिमहार्थदाः । सर्वेषामेव जन्तूनामिहामुत्र फलप्रदाः ॥३३॥ यत्प्रष्टव्यं मनसि ते यच्चादौ तव पृच्छ माम् । इत्युक्तो मुनिना तेन व्याधः प्राञ्जलिरब्रवीत् ॥३४॥ व्याध उवाच । केनवा कर्मणा चासीद्व्याधजन्म तमीमयम् । केन वा चेदृशी बुद्धिः सङ्गतिर्वा महात्मनः ॥३५॥ एतदादौ भयाचक्ष्व यदि मां मन्यसे प्रभो । इत्युक्तःपुनरप्याह

न्याहेर ॥२९॥ लुगा फेरेर अनि मध्याह्नमा गर्नुपर्ने क्रियाहरू गरिसकेर अनि यौताको पूजा पनि गरेर, व्याधाले ॥३०॥ ल्याएका थकाइ मेटाउन कैंथका फलहरू आनन्दसँग खाएर सुखपूर्वक बसेपछि फेरि धर्ममा रत भएको व्याधालाई मुनिले सोधे ॥३१॥ हे धर्ममा तत्परिएको व्याधा ! अब मैले तिमीलाई पहिले के भन्नुपर्छ सोध ! अनेक किसिमले गरिने, भिन्न-
१७ भिन्नै विधान भएका धेरै धर्महरूछन् ॥३२॥सबै प्राणीलाई यस लोकमा रपरलोकमा पनि फल दिने सक्षेपमा बताइएका भए पनि ठूल-ठूलो फल हुने वैशाख महीनाका धर्महरू तिमीलाई मैले सुनाए ॥३३॥ अब तिम्रो मनमा जो सोध्न इच्छाछत्यो पहिले मलाई सोध । ती मुनिले यस्ता प्रकारले भनिएको त्यो व्याधाले हात जोडेर भन्यो ॥३४॥ व्याधाले भन्यो — कुन कर्मले यो अज्ञानमय व्याधाको जन्म पाएँ ? अथवा कुन कर्मले यस्तो बुद्धि आयो अथवा यस्ता महात्माको



शङ्खो नाम महामुनिः ॥३६॥ मेघगम्भीरया वाचा स्मयमानमुखाम्बुजः । शङ्ख उवाच-शाकलेनगरे पूर्वं द्विजस्त्वं वेदपारगः ॥३७॥ स्तम्बो नाम महातेजास्तथा श्रीवत्सगोत्रजः । तवेष्टा गणिका काचि-दासीत्तत्सङ्गदोषतः ॥३८॥ त्यक्त्वा नित्यक्रियां नित्यं शूद्रवन्मूर्खभागतः । शून्याचारस्य दुष्टस्य परित्यक्तक्रियस्य च ॥३९॥ ब्राह्मणी च तदा चासीद्भार्या कान्तिमती तव । सा त्वां पर्यचरत्सुभ्रूः सवेश्यं ब्राह्मणाधमम् ॥४०॥ उभयोः क्षालयन्ता च पादौस्त्वत्प्रियकारिणी । उभयोरप्यधः शेते उभयोर्वचने रता ॥४१॥ वेश्यया वार्यमाणापि हितकार्ये तयोः स्थिता । एवं शुश्रूषयन्त्या हि भर्त्तारं

संगत भयो ? ॥३५॥ हे प्रभु ! यदि तपाईं मलाई दया गर्नुहुन्छ भने पहिले यै कुरो मलाई बताइदिनुहोस् ! यस्तरी सोधिएका शंख नामका महामुनिले फेरि पनि मुसुक्क हाँसेर मेघको जस्तो गम्भीर वाणीले भने—पहिले तिमी शाकल नामको नगरमा वेदमा पारंगत ब्राह्मण थियौ ॥३६-३७॥ तिम्रो नाम स्तम्ब थियो, महातेजस्वी थियौ र श्रीवत्स गोत्रमा जन्मिएका थियौ । त्यस बेला कुनै वेश्या तिम्रो प्यारी थिई, त्यसकै संगका दोषले ॥३८॥ सधैं रोजै गर्नुगर्ने क्रियाहरू त्यागेर शूद्रहरूझैं मूर्ख भयौ । सारा क्रिया त्यागेको, आचार-विचार शून्य भएको अति दुष्ट ॥३९॥ तिम्रो त्यस बेला कान्तिमती नामकी ब्राह्मणी पत्नी थिइन् । विचरी ती सुन्दरी वेश्यासहितको ब्राह्मणमा अधम तिम्रो चाकरी गर्थिन् ॥४०॥ तिम्रा प्रिय गर्ने उनी तिमी दुवैको गोडा धोइदिन्थी । दुवैको तल सुत्थी र दुवैको वचन मान्दथी ॥४१॥ वेश्याले पर्दैन

वेश्यया सह ॥४२॥ जगाम सुमहान् कालो दुःखिताय महीतले । अपरस्मिन्दिने भर्त्ता माहिष्यं मूल- कान्वितम्॥४३॥अभक्षयच्छूलधर्मान्निष्पापाँस्तिलमिश्रिताद् । तदपत्यमशित्वा तु वमँश्चैव विरेचयन् ॥४४॥ अपथ्याद्दारुणो रोगो व्यजायत भगन्दरः । स दह्यमानो रोगेण दिवारात्रं तु भूरिशः ॥४५॥ यावद्वास्ते गृहे वित्तं तावद्वेश्या च संस्थिता । गृहीत्वा तस्य सा वित्तं पश्चात्त्रोवासमन्दिरे॥४६॥अन्यस्य पार्श्वमासाद्य गता घोरा सुनिर्घृणा । ततः स दीनवचनो व्याधिवाधाप्रपोडितः॥४७॥उक्तवान्[illegible] भार्यां रुजा व्याकुलमानसः । परिपालय मां देवि वेश्यासक्तं सुनिष्ठुरम् ॥४८॥ न मयोमकृतं

पर्दैन' भन्दा पनि ती दुइको हित कार्यमारहन्थी । यस्ताप्रकारले वेश्यासहित लोग्नेको सेवा गर्ने भएकीदुःखी उसको॥४२॥ पृथ्वीतलमा धेरै समय बित्यो । एक दिन उसको लोग्नेले मूला मिसिएको भैंसीको दही ॥४३॥ तिल मिलेको सलाद बनाएर शूद्रलेझैं जे पाप पनि घिच्ने उसले हसुन्यो । त्यस्तो त्यो अपथ्य कुरो खाएर उसलाई दिसा बान्ता हुन लाग्यो ॥४४॥ अपथ्य विषम खाना खाएकोले भयङ्कर भगन्दर रोग भयो । त्यस रोगले त्यो रात-दिन अघाड्दै छटपटाउन थाल्यो ॥४५॥ जबसम्म घरमा धन थियो तबसम्म त्यो वेश्या यहाँ रही । पछि उसको बचेखुचेको धन लिएर त्यो वेश्या त्यसको घरमा बसिन ॥४६॥ र अर्कै नाठो भाठौं गएर अति निन्दित भई हण्डर खाई । तब रोगको दुःखले छटपटाएको दोन ( दुःखी ) वचन बोल्ने ॥४७॥ रोगले व्याकुल भएको उसले रुँदै आफ्नो धर्मपत्नीलाई भन्यो— हे देवी ! वेश्या रण्डीमा आसक्त भएको निर्दयी मलाई रक्षा गर ॥४८॥ हे सुन्दरी ! पापी मैले तिम्रो कुनै पनि उपकार



किञ्चित्त्वयि सुन्दरि पापिना । यो भार्यां प्रणतां पापो नानुमन्येत गर्हितः ॥४९॥ सपिण्डो भविता भद्रे दशजन्मानि पञ्च च । दिवारात्रं महाभागे निन्दितः साधुभिर्जनैः ॥ ५० ॥ पापयोनिम- वास्यामि त्वां साध्वीमवमन्य वै । अहं क्रोधेन दग्धाऽस्मि तव पुण्येन बोधितः ॥ ५१ ॥ एवं ब्रुवाणं भर्तारं कृताञ्जलिपुटाऽब्रवीत् । न दैन्यं भवता कार्यं न व्रीडा कान्त मां प्रति ॥५२॥ न चापि त्वति मे क्रोधो येन दग्धेति वक्ष्यसि । पुरा कृतानि पापानि दुःखानीह भवन्ति हि ॥५३॥ तानि या क्षमते साध्वी पुरुषो वा स उत्तमः । यन्मया पापया पापं कृतं वै पूर्वजन्मना ॥५४॥

गरिनँ । जो निन्दनीय पापी आफ्नी पतिव्रता स्वास्नीलाई आदर गर्दैन ॥४९॥ हे सुशीला ! पन्ध्र जन्मतक नपुंसक हुनेछ । भाग्यमानी ! सज्जनहरूले त्यो रातदिन निन्दा गरिनेछ ॥५०॥ तिमी जस्ती सतीलाई अपमान गरेकाले मैले पछि अवश्यै नीच योनि पाउनेछु । तिम्री पवित्र सेवाले होशमा आएको म अहिले तिम्रो त्यस वेलाको क्रोधले डढेको छु ॥५१॥ यस्तो भनिरहेका पतिलाई हात जोडेर सतीले भनिन्—हे स्वामी ! तपाईंले मेरा प्रति दया नमान्नुहोस र मसित लाज पनि नमान्नुहोस् ॥५२॥ कहिल्यै पनि मैले तपाईंमा क्रोध गरिनँ जो कि तपाईं 'म डढेको छु' भन्नुहुन्छ, पहिले गरेका पापहरू यस जन्ममा दुःख हुन्छन् ॥५३॥ती पापहरूलाई जो सती सहन्छे या जो पुरुष सहन्छ त्यो उत्तम हो। म पापिनीले पूर्वजन्ममा जो पाप गरेकी थिएँ ॥५४॥ त्यो भोगिरहेकी मलाई न दुःख छ, न कुनै किसिमको फिक्री

तद्भुञ्जन्त्या न मे दुःखं न विषादः कथञ्चन । इत्येवमुक्त्वा भर्तारं सा सुन्दर्यन्वपालयत् ॥५५॥
जानीय जनकाद्वित्तं बन्धुभ्यो वरवर्णिनी । क्षीरोदवासनं देवं भर्तारं समचिन्तयत् ॥५६॥
शोधयन्ती दिवारात्रौ पुरीषं मूत्रमेव च । नखेन कर्षती भर्तुः कृमीन् कष्टाच्छनै शनैः ॥५७॥
न सा स्वपिति रात्रौ हि न दिवा वरवर्णिनी । भर्तुर्दुःखेन सन्तप्ता दुःखितेदमवोचत ॥५८॥
देवाश्च पान्तु भर्तारं पितरो ये च विश्रुताः । कुर्वन्तु रोगहीनं मे भर्तारं गतकल्मषम् ॥५९॥
चण्डिकायै प्रदास्यामि रक्तमांससमुद्भवम् । सुक्षन्नं माहिषोपेतं भर्तुरारोग्यहेतवे ॥६०॥ मोद-

छु । आफ्नू लोग्नेलाई यस्तो भनेर त्यो सुन्दरी फेरि पतिसेवामा लागी ॥५५॥ उस सुन्दर गुणवाली सुन्दरीले माइतीबाट र बन्धुबान्धवकहाँबाट माँगी धन ल्याएर आफ्नू पतिलाई क्षीर समुद्रमा रहने भगवान् नै ठान्न थाली ॥ ५६ ॥ बिचरी रात दिन लोग्नेको गुहु-मूत सफा गर्दथी, बड़ा दुःखले विस्तार-विस्तार लोग्नेका कीराहरूलाई नङले कोट्याउँथी ॥५७॥ त्यो गुणवती स्त्री न रातमा सुत्तथी न दिउंसो सुत्तथी । लोग्नेको दुःखले दुःखित भएर पिरिएकी उसले यस्तो भन्न थाली ॥५८॥समस्त दौताहरू र जो मान्य पितृहरू छन् ती सबले मेरा पतिको रक्षा गरून्। मेरा पतिलाई निरोगी र पापले रहित भएको बनाइदिऊन ॥ ५९ ॥ म मेरा पतिको आरोग्यका लागि चण्डिका भवानीलाई रगत मासुल लतलताएको र भैंसीको दूधले मुछिएको बढिया अन्न भोग लगाउनेछु ॥ ६० ॥ अनि महात्मा गणेशजीलाई लड्डू चढाउनेछु । सधैं नै



काश् कारयिष्यामि विघ्नेशाय महात्मने । मन्दवारे करिष्यामि चोपवासं सदैव हि ॥६१॥
नोपभुञ्जामि मधुरं नोपभुञ्जामि वै घृतम् । तैलाभ्यङ्गविहीनाऽहं स्थास्ये नैवात्र संशयः ॥६२॥
जीवतां रोगहीनोऽयं भर्ता मे शरदां शतम् । एवं सा व्याहराद्देवी वासरे वासरे गते ॥६३॥ तदा
चागान्मुनिः कश्चिन्महात्मा देवलाह्वयः । वैशाखे मासि घर्मार्तः सायान्हे तव वै गृहम् ॥६४॥
तदा तु भार्यया चोक्तं भिषग्वै गृहमागतः । तेन वै रोगहानिः स्यात्तस्यातिथ्यं करोम्यहम् ॥६५॥
ज्ञात्वा त्वां धर्मविमुखं भिषग्व्याजेन वञ्चितः । पादावनेजनं कृत्वातज्जलं मूर्ध्नि साऽक्षिपत् ॥६६॥

शनिश्चर बारमा उपवास गर्नेछु ॥ ६१ ॥ अब म मीठो खान्नँ, घिउ खान्नँ, तेल भनेको छाउँदै नलाईकन रहन्छु, यति नियम म पक्कै पालना गर्दछु ॥६२॥ हे भगवन् ! यी मेरा भर्ता रोगहीन भई सय वर्षसम्म बाँचून् । यस्ता प्रकारेले त्यो सुन्दरी रोजै देवीसंग प्रार्थना गर्थी॥६३॥त्यस्तैमा वैशाख महीनामा घामले पीडित भएका देवल नाम गरेका कुनै महात्मा मुनि साँझपख तिम्रा घर आए ॥ ६४ ॥ तब त्यो भार्याले घरमा वैद्य आएका छन् । यका पनि तीद्वारा रोग नाशिनेछ, त्यसकारण तिनको सत्कार म गर्दछु भनी॥६५॥तिमीलाई धर्म नमान्ने ठानेर वैद्यको बहानाले ठगिदी र ती मुनिको पयर धोएर त्यो जल उसले टाउकामा छर्की ॥ ६६ ॥ घामले पीडित भएका ती महात्मालाई तिमीबा पाएकी उसले

पानकं च ददौ तस्मै घर्मार्ताय महात्मने। तथाऽनुमोदिता सायं धर्मतापनिवारकम् ॥६७॥
स प्रातरुदिते सूर्ये मुनिः प्रायाद्यथागतम्। अथ चाल्पेन कालेन सन्निपातोऽभवत्तव ॥६८॥
त्रिकूटं नीयमानाया भर्ताङ्गुलिमखण्डनत्। उभयोर्दन्तयोः श्लेषः सहसा समपद्यत ॥६९॥
तत् खण्डमंगुलेर्वक्त्रे स्थितं भर्तुः सुकोमलम्। खण्डयित्वांगुलिं भर्ता पञ्चत्वमगमत्क्षणात् ॥७०॥
शय्यायां सुमनोज्ञायां स्मरंस्तां पुंश्चलीं शुभाम्। मृत विज्ञाय भर्तारं भार्या कान्तिमतीतदा ॥७१॥
विक्रीय सा स्ववलयं गृहीत्वा चेन्धनं बहु। चक्रे चितिं च सा साध्वीं मध्ये कृत्वा पतिं तदा ॥७२॥

साँझमा दिनभरिको टण्टलापुर घामको ताप हटाउने शरबत पनि पियाई ॥६७॥ बिहान सूर्य उदाएपछि ती मुनि जसरी आएका थिए उसै गरी गए। तब क्यै दिनपछि तिमीलाई सन्निपात भयो ॥ ६८ ॥ त्रिकटु पियाउने भएकी उसको औंलो भर्ता तिमीले टोकिदियौ। त्यो औंलो सहसा दुवै दाँतको बीचमा नछुट्टिएरै रह्यो ॥६९॥ लोग्नेको मुखभित्र अड्किएको औंलोको त्यो कोमल टुक्रालाई लोग्ने भनौंदा तिमीले छिनिदियौ र त्यो टुक्रो औंलो मुखमा लिंदै त्यसै वेला तिमी मरि पनि हाल्यौ ॥७०॥ राम्रो बिछ्यौनामा नखरमाउली त्यस वेस्सेलाई संझँदै तिमी लोग्नेलाई मरेको जानी, तब ती सुन्दरी भार्या कान्तिमतीले ॥ ७१ ॥ आफ्ना बाला बेचेर त्यसैले घेरै दाउरा ल्यायेर उस सतीले चिता बनाई र तब मृत पतिलाई चिताको बीचमा राखेर ॥ ७२ ॥ हातल हातलाई अंकमाल गरेर, दुवै गोड़ा दुवै गोडामा



अवगुह्य भुजाभ्यां च पादौ चाश्लिष्य पादयोः। मुखे मुखं विनिक्षिप्य हृदयं हृदये तथा ॥७३॥
जघने जघनं देवी ह्यात्मानं सन्निवेश्य च। दाहयामास कल्याणी भर्तुदेहं रुजान्वितम् ॥ आत्मना
सह तन्वङ्गी ज्वलिते जातवेदसि ॥७४॥ विमुच्यदेहं सहसा जगाम पतिं समालिंग्य मुरारिलोकम्।
पानीयदानेन च माधवेऽस्मिन्पादावनेजादपि योगिगम्यम् ॥६५॥ त्वमन्तकाले गणिकाविचिन्तया
देहं त्यक्त्वा मुक्तसत्कर्मजातः जान्मव्याधं प्राप्यते घोररूपं हिंसासक्तं सर्वदोद्वेगकारि ॥७६॥
दत्ता त्वया पानकस्यापि सायं दानेऽनुज्ञा माधवे मासि सत्यम्। व्याजादत्ता तेन जाता सुबुद्धिधर्मा:न्

ल्यायेर, मुखमा मुख र हृदयमा हृदय मिलायेर ॥ ७३ ॥ आँधमा जाँघ टाँसेर त्यो सतीले आफूलाई त्यसै चितामा राखेर त्यस पातली पुण्यात्माले दन्किरहेको आगोमा आफूसँगै रोगले सड़ेको लोग्नको लाशलाई जलाई॥७४॥ पतिलाईआलिङ्गन गरेर एकाएक शरीर त्यागकाले उ मुरारि भगवान्‌को लोकमा गई। यस वैशाख महीनामा शरबतरूपी पानीको दानले र महात्मा चरणोदकको प्रभावले गर्दा योगीहरूले पाइ नसक्नु धाम उसले पाई ॥ ७५ ॥ असल कर्मसमूहलाई त्याग्ने तिमीले चाहिं मर्ने वेलामा वेश्यालाई संझेर देह त्याग गरेकाले हिंसामा आसक्त रहने सधै सबैलाई त्रस्त पारिरहने, भयङ्कर रूप भएको व्याधाको जन्म पायौ॥७६॥वैशाख महीनामा साँझमा शरबतको दानमा पनि तिमीले अ[illegible]एका

भ्रष्टु सर्वसौख्यैकहेतून् ॥७७॥ धृतं मूर्ध्ना पादशौचावशिष्टं जलं मुनेः सर्वपापौघहारि ॥ तेनेयं ते सङ्गतिर्मे वनेऽस्मिन्यथा भूयात्सम्पदः सन्ततिश्च ॥७८॥ इत्येतत्सर्वमाख्यातं पूर्वजन्मनि यत् कृतम् । कर्म पुण्यं पावकं च दृष्टं दिव्येन चक्षुषा ॥७९॥ गोप्यं वा ते प्रवक्ष्यामि यद्वाञ्छ्रोतुमिच्छति । जाता ते चित्तशुद्धिर्वै स्वस्ति भूयान्महामते ॥८०॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्येनारदाम्बरीषसंवादे व्याधोपाख्याने व्याधस्य पूर्वजन्मकथनं नाम अष्टादशोऽध्यायः ॥ १८ ॥

थियौ । साँच्चै नै वैधको बहानाले आज्ञा दिएका भए पनि त्यसै पुण्यका प्रभावले सारा सुख-भोगको मुख्य कारण भएका धर्महरू सोध्न यस्तो असल बुद्धि तिमीलाई आयो ॥७७॥ मुनिका चरणकमलधोएर बचेको, सारा पापसमूहलाई नाश गर्ने जल टाउकाले ग्रहण गर्‍यौ, त्यसैका पुण्यले गर्दा यस वनमा मेरा साथ तिम्रो यो भेट भयो, जुन भेटका महिमाले प्रशस्त सम्पत्ति र सन्तान पनि तिमीलाई हुनेछ ॥७८॥ पूर्वजन्ममा तिमीले पुण्य कर्म वा पाप कर्म जो गरेका थियौ ती सब मैले दिव्य आँखाले देखेर यस्ता प्रकारले यो वेलिविस्तार लाएँ ॥७९॥ हे महामति ! निश्चय नै अब तिम्रो चित्तशुद्धि भयो, तिम्रो कल्याण होस् । अरू गोप्य कुरा पनि म तिमीलाई बताउँछु, जो तिमी सुन्न चाहन्छौ मन ॥८०॥

श्री स्कन्दपुराण वैशाख माहात्म्यको नारद र अम्बरीष संवादमा व्याधाको उपाख्यान व्याधाको पूर्वजन्म कथन नामको अठारौं अध्याय सकियो ॥ १८ ॥




# अथ एकोनविंशोऽध्याः

व्याध उवाच–विष्णुमुद्दिश्य कर्तव्य धर्मा भागवताः शुभाः । तत्रापि माधवीयाश्च इत्युक्तं तु त्वया पुरा ॥१॥ स विष्णुः कीदृशो ब्रह्मन् किं वा तस्य हि लक्षणम् । किं मानं तस्य सद्भावे केनैयो भगवान्विभुः ॥२॥ कीदृशा वैष्णना धर्माः केन वा प्रीतये हरिः । एतदाचक्ष्व मे ब्रह्मन् किङ्कराय महामतेः॥३॥ इति पृष्टस्तु व्याधेन पुनः प्राह स वै द्विजः । प्रणम्य जगतामीशं नारायणमनामयम् ॥ ४ ॥ शङ्ख उवाच–शृणु व्याध प्रवक्ष्यामि विष्णुरूपमकल्मषम् । यदचिन्त्यं विरिञ्च्याद्यैर्मुनिभिर्भावितात्मभिः ॥ ५ ॥ पूर्णशक्तिः पूर्णगुणो निर्दिष्टः सकलेश्वरः । निर्गुणो

व्याधाले भन्यो—भगवान् सम्बन्धी कल्याणकारी धर्महरू विष्णुको उद्देश्य गरेर नै गर्नुपर्छ । त्यसमा पनि पहिले तपाईंले वैशाखसम्बन्धी धर्महरू आज्ञा भयो ॥१॥ हे ब्रह्मन् ! तीविष्णुकस्ता छन्, उनको लक्षण कस्तो छ ? उहाँको सेवामा कस्तो मान गर्नुपर्छ ? ती भगवान् विष्णु कस्ताले जानिन्छन् ? ॥२॥ वैष्णवधर्म कस्ता छन् ? भगवान् केले खुशी हुनुहुन्छ? हे महा बुद्धिमान् हे बाजे, म दासोलाई यो सबै आज्ञा होस् ॥३॥ व्याधाले यसरी सोधेपछि ती ब्राह्मणले जगत्का मालिक, अविनाशी नारायणलाई प्रणाम गरेर फेरि भन्न थाले ॥४॥ शंखले भने—भगवान्को ध्यानमा लीन रहिरहको ब्रह्मा आदि मुनिहरूले पनि चिन्तना गर्न नसकिने पापरहित जो विष्णुको रूप छ, म त्यसको वर्णन गर्दछु सुन ॥५॥ भगवान्